त्वमव्यक्तमनिर्देश्यमचिन्त्यानामवर्णवत् ।

अपाणिपादरूपञ्च शुद्धं नित्यं परात्परम् ॥३९॥

श्रृणोष्यकर्णः परिपश्यसि

त्वमचक्षुरेको बहुरूपरूपः ।

अपादहस्तो जवनो ग्रहीता

त्वं बेत्सि सर्वं न च सर्ववेद्यः ॥४०॥

अणोरणीयांसमसत्स्वरूपं

त्वां पश्यतोऽज्ञाननिवृत्तिरग्र्या ।

धीरस्य धीर्यस्य विभर्ति

नान्यद्वरेण्यरूपात्परतः परात्मन् ॥४१॥

त्वं विश्वनाभिर्भुवनस्य गोप्ता

सर्वाणि भूतानि तवान्तराणि ।

यद्भूतभव्यं तदणोरणीयः

पुमांस्त्वमेकः प्रकृतेः परस्तात् ॥४२॥

एकश्चतुर्धा भगवान् हुताशो

वर्चो विभूतिं जगतो ददासि ।

त्वं विश्वतश्चक्षुरन्तमूर्ते! त्रेधा

पदं सन्निदधे विधातः ॥४३॥

यथाग्निरेको बहुधा समिध्यते

विकारभेदैरविकाररूपः ।

तथा भगान् सर्वगतैकरूपो

रूपाण्यशेषाण्यनुपुष्यतीश ॥४४॥

माध्यमद्वारा वर्णन गर्न नसकिने, अचिन्त्य अर्थात् मनद्वारा चिन्तन गर्न नसकिने, अनिर्देश्य, नाम एवं वर्णबाट पूर्ण रूपमा रहित पाणिपाद अर्थात् हातगोडा नहुने र स्वरूपविहीन तथा शुद्ध, नित्य एवं प्रकृतिभन्दा अत्यन्त टाढा हुनुहुन्छ ॥३९॥हजुरमा कान नभए तापनि सुन्ने सामर्थ्य रहेको छ, आँखा नभए तापनि देख्ने सामर्थ्य रहेको छ, स्वयं एक भए तापनि अनेकौं स्वरूपहरूमा विद्यमान हुनुहुन्छ अर्थात् प्रकट हुनुहुन्छ, चरणरहित भए तापनि सर्वत्र आवागमन गर्नुहुन्छ, हात नभए तापनि आफ्ना भक्तले अर्पण गरेको वस्तु ग्रहण गर्नुहुन्छ, हजुर सम्पूर्ण ज्ञानस्वरूप हुनुहुन्छ तथा सबैका लागि अज्ञात भए तापनि सबैका विषयको ज्ञाता हुनुहुन्छ ॥४०॥हे परमात्मा! जुन ज्ञानी पुरुषको बुद्धिले हजुरको सर्वोत्कृष्ट स्वरूपबाहेक अन्य कुनै विषयवस्तुलाई ग्रहण गर्दैन, जसले सूक्ष्मभन्दा पनि अत्यन्त सूक्ष्म हजुरको स्वरूपलाई प्रत्यक्षजस्तै देख्दछ अर्थात् हजुरका स्वरूपको साक्षात्कार गर्दछ, त्यही पुरुषको अज्ञान पूर्ण रूपमा विनाश हुन्छ अर्थात् उसमा अज्ञानको छायासम्म रहँदैन ॥४१॥हजुर सम्पूर्ण विश्वको आश्रय तथा सम्पूर्ण भुवनहरूको रक्षक हुनुहुन्छ र सम्पूर्ण भुवन हजुरको एक अंशमा अवस्थित रहेको छ। जुन भूतमा भएका र भविष्यमा हुने वस्तु छन्, ती सबै हजुरबाटै उत्पन्न भएका हुन् र हुनेछन्। यसकारण हजुर सूक्ष्मभन्दा पनि अत्यन्त सूक्ष्म तथा प्रकृतिबाट पूर्ण रूपमा स्वतन्त्र रहनुहुने एकमात्र परम पुरुष हुनुहुन्छ ॥४२॥ हजुरले चार प्रकारका अग्निहरूको स्वरूप धारण गरेर सम्पूर्ण जगत्लाई तेज एवं प्रकाश प्रदान गर्नुहुन्छ। हे अनन्तमूर्ति! चारै दिशाहरूमा हजुरका आँखाहरू प्रकाशका रूपमा फैलिएका छन्। हे विधाता ! हजुरले त्रिविक्रमको स्वरूप धारण गरेर आफ्ना तीन पादबाट तीनोटै लोकहरूको स्थापना गर्नुभएको हो ॥४३॥ हे परमेश्वर! जसरी एउटै अविकारी अर्थात् विकाररहित अग्नि विकृत भएर विकृतको भेदअनुसार अनेकौं किसिमबाट प्रज्ज्वलित हुन्छ, त्यसरी नै सर्वत्र व्यापक भएर रहनुभएका हजुरले पनि एक रूप भए तापनि अनन्त स्वरूपहरू धारण गर्नुहुन्छ ॥४४॥ जुन एकमात्र

एकस्त्वमग्र्यं परमं पदं यत्

पश्यन्ति त्वां सूरयो ज्ञानदृश्यम् ।

त्वत्तो नान्यत् किञ्चिदस्ति

त्वपीह यद्वा भूतं यच्च भाव्यं परात्मन् ॥४५॥

व्यक्ताव्यस्वरूपस्त्वं समष्टिव्यष्टिरूपवान् ।

सर्वज्ञः सर्वदृक् सर्वशक्तिज्ञानबलर्द्धिमान् ॥४६॥

अन्यूनश्चाप्यवृद्धिश्च स्वाधीनो नादिमान् वशी ।

क्लमतन्द्राभयक्रोधकामादिभिरसंयुतः ॥४७॥

निरवद्यः परप्रीतो निरधिष्ठोऽक्षरक्रमः ।

सर्वेश्वरः पराधारो धाम्नां धामात्मकोऽक्षयः ॥४८॥

सकलवरणातीत! निरालम्बनभावन!

महाविभूतिसंस्थान ! नमस्ते पुरुषोत्तमः ॥४९॥

नाकारणात् कारणाद् वा कारणाकारणन्न च ।

शरीरग्रहणं वापि धर्मत्राणाय ते परम् ॥५०॥

पराशर उवाच

इत्येवं संस्तुतिं श्रुत्वा मनसा भगवानजः ।

ब्रह्मणमाह प्रीतात्मा विश्वरूपोधरो हरिः ॥५१॥

श्रीभगवानुवाच

भो भो ब्रह्मन् ! त्वया मत्तः सह देवैर्यदिष्यते ।

तदुच्यतामशेषं वः सिद्धमेवावधार्यताम् ॥५२॥

अत्यन्त सर्वोत्कृष्ट परम पद छ, त्यो पनि हजुर स्वयं हुनुहुन्छ तथा ज्ञानी पुरुषले ज्ञान दृष्टिका माध्यमद्वारा हजुरको मात्र दर्शन गर्दछन् । हे परमात्मा ! यस जगत्मा भूतमा भएका र भविष्यमा हुने जति पनि पदार्थहरू छन्, ती सबै हजुरबाटै उत्पन्न भएका हुन् । हजुरबाहेक यो संसारमा अन्य केही पनि छैन ॥४५॥ हजुर नै व्यक्त र अव्यक्त एवं समष्टि र व्यष्टि स्वरूप हुनुहुन्छ, हजुर नै सर्वज्ञ अर्थात् सबैको ज्ञाता र सबैलाई देख्न सक्ने अर्थात् सबैको द्रष्टा हुनुहुन्छ तथा हजुर नै सबै शक्ति, ज्ञान एवं ऐश्वर्यबाट यथार्थ रूपमा सम्पन्न हुनुहुन्छ ॥४६॥ हजुरमा ह्रास हुने र वृद्धि हुने विकारहरू रहेका छैनन्, हजुर पूर्ण रूपमा स्वाधीन, अनादि र जितेन्द्रिय हुनुहुन्छ तथा हजुरमा श्रम, तन्द्रा अर्थात् आलस्य, भय, क्रोध र काम आदि दोषहरूको पूर्ण रूपमा अभाव रहेको छ ॥४७॥ हजुर निर्मल, अप्राप्य, निराधार र अव्याप्त अर्थात् कुनै किसिमको रोकतोक नभएको गति हुनुहुन्छ; हजुर सबैको स्वामी अर्थात् अधिपति, अन्य ब्रह्मादिको आश्रय तथा सूर्यादि तेजहरूको पनि परम तेज एवं अविनाशी हुनुहुन्छ ॥४८॥ हजुर सम्पूर्ण आवरणहरूबाट पूर्ण रूपमा रहित, असहायहरूको पालनकर्ता र सबै महाविभूतिहरूको परम आधार हुनुहुन्छ । हे पुरुषोत्तम! हजुरलाई नमस्कार छ ॥४९॥ हजुरले कुनै कारण, अकारण अथवा कारणाकारणका आधारमा शरीर ग्रहण नगर्नुभएर केवल अधर्मको विनाश र धर्मको रक्षा गर्नका लागि मात्र शरीर ग्रहण गर्नुहुन्छ ॥५०॥ श्वरूपधरो हरि ॥५१॥ **पराशरजीले भन्नुभयो** – यस प्रकारको स्तुति सुनिसकेपछि अजन्मा अर्थात् जन्मबाट पूर्ण रूपमा रहित हुनुभएका विश्वरूप श्रीहरिले अत्यन्त प्रसन्न भएर पितामह ब्रह्मजीसँग भन्नुभयो ॥५१॥ **भगवान्ले भन्नुभयो**– हे ब्रह्म ! यी सम्पूर्ण देवताहरू र तपाईंले मबाट जे प्राप्त गर्ने अभिलाषा राख्नुभएको छ, यस विषयमा पूर्ण रूपमा बताउनुहोस् र त्यो सबै सिद्ध भइसकेको छ भनेर निश्चय गर्नुहोस् अर्थात् तपाईंहरूको अभिलाषा पूर्ण भइसकेको हुनेछ ॥५२॥ **पराशरजीले**

पराशर उवाच

ततो ब्रह्म हरेर्दिव्यं विश्वरूपमवेक्ष्य तत्।

तुष्टाव भूयो देवेषु साध्वसावनतात्मसु ॥५३॥

ब्रह्मोवाच

नमो नमस्तेऽस्तु सहस्रमूर्ते! सहस्रबाहो! बहुवक्त्रपाद।

नमो नमस्ते जगतः प्रवृत्तिविनाशसंस्थानकराप्रमेय ॥५४॥

सूक्ष्मातिसूक्ष्मातिबृहत्प्रमाण !

गरीयसामप्यतिप्यतिगौरवात्मन्।

प्रधानबुद्धीन्द्रियवत्प्रधानमूलात्

परमात्मन्! भवगन्! प्रसीद ॥५५।

एषा मही देव! महीप्रसूतैर्महासुरैः पीडितशैलबन्धा।

परायणं त्वां जगतामुपैति भारावतारार्थमपारसारम् ॥५६॥

एते वयं वृत्ररिपुस्तथायं

नासत्यदस्रौ वरुणो यमश्च।

इमे च रुद्रा वसवः ससूर्याः

समीरणाग्निप्रमुखास्तथान्ये ॥५७॥

सुराः समस्ताः सुरनाथ!

कार्यमेभिर्मया यच्च सदीश सर्वम्।

आज्ञापयाज्ञां प्रतिपालयन्तस्तथैव

तिष्ठाम सदास्तदोषाः ॥५८॥

पराशर उवाच

एवं संस्तुयमानस्तु भगवान् परमेश्वरः।

उज्जाहारात्मनः केशौ सितकृष्णौ महामुने ॥५९॥

उवाच च सुरानेतौ मत्केशौ वसुधातले।

अवतीर्य भुवो भारक्लेशहानिं करिष्यतः ॥६०॥

**भन्नुभयो** – त्यसपछि परब्रह्म परमात्माको त्यो विश्वरूपको प्रत्यक्ष रूपमा दर्शन गरेपछि देवताहरू अत्यन्त भयभीत भएकाले आफ्नो शरीर आधा झुकाएर अत्यन्त नम्र भएर फेरि स्तुति गर्न थाले ॥५३॥ **ब्रह्मजीले भन्नुभयो** – हे सहस्रमूर्ति भएका प्रभु ! हे सहस्र हात भएका परमात्मा ! हे अनेकौं मुख र अनेकौं चरणहरू हुनुभएका विधाता ! हजुरलाई नमस्कार छ। हे जगत्को सृष्टि, स्थिति र विनाश गर्नुहुने पुरुषोत्तम ! हे अप्रमेय ! हजुरलाई पटकपटक नमस्कार छ ॥५४॥ हे सूक्ष्मभन्दा पनि अत्यन्त सूक्ष्म परमात्मा ! हे अत्यन्त विशाल प्रमाणस्वरूप भगवान् ! हे गौरवशालीहरूमा पनि गौरवसम्पन्न प्रभु ! हजुर बुद्धि, प्रकृति र अहङ्कारका मूलपुरुषभन्दा पूर्ण रूपमा अलग रहनुभएको छ। हे परब्रह्म परमात्मा! हजुर हामीसँग प्रसन्न भइदिनुहोस् ॥५५। हे देवाधिदेव! यी पृथ्वी हुन्। पृथ्वीबाट उत्पन्न भएका अनेकौं अत्यन्त पराक्रमी असुरहरूका उत्पातको प्रभावले गर्दा यिनको पर्वतरूपी मुख्य बन्धन अत्यन्त शिथिल भइसकेको छ। यसकारण पृथ्वीमाथि आइलागेको यो भारलाई पूर्ण रूपमा हटाउनका लागि अपार शक्तिसम्पन्न एवं सम्पूर्ण जगत्का एकमात्र गति हजुरका शरणमा शरणागत हुन आएकी छन् ॥५६॥ हे सुरनाथ! म, यी इन्द्र हुन्, यी अश्विनीकुमार हुन्, यी वरुण हुन्, यी यम हुन्, यी रुद्रहरू, सूर्यसहित वसुहरू एवं वायु, अग्निजस्ता हामी सबै मिलेर आएका छौं र यी अन्य देवता हुन्, यिनीहरूको अथवा मेरो जे कर्तव्य हुन्छ, त्यो हजुरले हामीलाई आज्ञा दिनुहोस्। हे परमात्मा ! हजुरका आज्ञाको पालना गर्दै हामी सबै सधैं पूर्ण रूपमा निर्दोष भएर निवास गर्नेछौं ॥५७–५८॥ **पराशरजीले भन्नुभयो**– हे मुनिश्रेष्ठ ! ब्रह्मजीसहित सम्पूर्ण देवताहरूबाट यसरी स्तुति गरिएपछि परब्रह्मपरमात्मा भगवान्ले आफ्नो सेतो र कालो दुई प्रकारको केश उखेल्नुभयो ॥५९॥ र देवताहरूसँग भन्नुभयो– मेरा यी दुईवटा केशले पृथ्वीमा अवतार लिएर पृथ्वीको पीडाका रूपमा उत्पन्न भएको सम्पूर्ण भारको पूर्ण रूपमा विनाश गरिदिएर पृथ्वीलाई दैत्यहरूबाट प्राप्त पीडाबाट मुक्त गराउनेछन् ॥६०॥ र

सुराश्चसकलाः स्वांशैरवतीर्य महीतले।
कुर्वन्तु युद्धमुन्मत्तैः पूर्वोत्पन्नैर्महासुरैः ॥६१॥

सबै देवताहरूले आआफ्नो अंशबाट पृथ्वीमा अवतार अर्थात् जन्म लिएर आफूभन्दा पहिले उत्पन्न भएका अत्यन्त उन्मत्त भएका दैत्यहरूसँग युद्ध गर्नेछन् ॥६१॥

ततः क्षयमशेषास्ते दैतेया धरणीतले।
प्रयास्यन्ति न सन्देहो मद्दृक्पातविचूर्णिताः ॥६२॥

त्यसपश्चात् पथ्वीमा उत्पन्न भएर अत्यन्त उन्मत्त भएका सबै दैत्यहरूमा मेरो दृष्टि परेपछि तिनीहरू चूर्णित अर्थात् धुलो भएर पूर्ण रूपमा विनष्ट हुनेछन्, यसमा कुनै किसिमको द्विविधा छैन ॥६२॥

वसुदेवस्य या पत्नी देवकी देवतोपमा।
तस्यायमष्टमो गर्भो मत्केशो भविता सुराः ॥६३॥

हे देवताहरू ! वसुदेवजीकी जुन देविकी समान देवकी नाम भएकी पत्नी रहेकी छन्, उनको आठौं गर्भबाट यो मेरो सेतो केशले अत्यन्त उन्मत्त भएको दैत्य कंसको कालका रूपमा अवतार लिनेछ ॥६३॥

अवतीर्य च तत्रायं कंसं घातयिता भुवि।
कालनेमिं समुद्भूतमित्युक्त्वान्तर्दधे हरिः ॥६४॥

र त्यहाँ अवतार लिएर यसले त्यो कंसका रूपमा उत्पन्न भएर पृथ्वीमा अत्यन्त उत्पात मच्चाइरहेको कालनेमि दैत्यको पूर्ण रूपमा विनाश गर्नेछ। यसरी देवताहरूलाई बताइसकेपछि परब्रह्म परमात्मा भगवान् अन्तर्धान हुनुभयो ॥६४॥

अदृश्याय ततस्तेऽपि प्रणिपत्य महात्मने।
मेरुपृष्ठं सुरा जग्मुखतेरुश्च भूतले ॥६५॥

हे माहात्मा! परब्रह्म परमात्मा श्रीहरि अन्तर्धान हुनुभएपछि उहाँलाई प्रणाम गरेर सबै देवताहरू फर्किएर सुमेरु पर्वतमा आए र त्यसपछि सबैले पृथ्वीमा अवतार लिए अर्थात् उनीहरूले क्रमबद्ध रूपमा पृथ्वीमा जन्म लिन थाले ॥६५॥

कंसाय चाष्टमो गर्भो देवक्यां धरणीधरः।
भविष्यतीत्याचचक्षे भगवान् नारदो मुनिः ॥६६॥

यसै समयमा देवर्षि नारदजीले आएर कंसलाई देवकीको आठौं गर्भबाट स्वयं परब्रह्म परमात्मा धरणीधरले संसारमा फैलिएको अधर्मको विनाश गरेर धर्मको स्थापना गर्नका लागि जन्म लिनुहुने कुरा बताइदिए ॥६६॥

कंसोऽपि तदुपश्रुत्य नारदात् कुपितस्ततः।
देवकीं वसुदेवञ्च गृहे गुप्तेऽवधारयत् ॥६७॥

देवर्षि नारदजीका यस प्रकारका कुरा सुनिसकेपछि अत्यन्त क्रोधित भएको कंसले वसुदेव र देवकीलाई कारागारको अत्यन्त अँध्यारो र अत्यन्त कष्टदायक कोठामा हातखुट्टा सबैतिर बाँधेर राख्यो ॥६७॥

जातं जातञ्च कंसाय तेनैवोक्तं यथा पुरा।
तथैव वसुदेवोऽपि पुत्रमर्पितवान् द्विजः ॥६८॥

त्यसपछि हे ब्राह्मणश्रेष्ठ! वसुदेवले पनि पहिले आफूले जनाएको प्रतिबद्धताअनुसार आफ्ना प्रत्येक पुत्रहरू कंसलाई दिइरहे ॥६८॥

हिरण्यकशिपोः पुत्राः षड्गर्भा इति विश्रुताः।
विष्णुप्रयुक्ता तान् निद्रा क्रमाद् गर्भे न्ययोजयत् ॥६९॥

प्रचलनमा रहेको किंवदन्तीका अनुसार देवकीको गर्भबाट उत्पन्न भएका यी छओटा पुत्रहरू पहिलो जन्ममा हिरण्यकशिपुका पुत्रहरू थिए। भगवान् श्रीविष्णुबाट अभिप्रेरित भएकी योगनिद्राले तिनीहरूलाई क्रमबद्ध रूपमा देवकीका गर्भमा स्थापना गरिदिएकी थिइन् ॥६९॥ उसका

योगनिद्रा महामाया वैष्णवी मोहितं यया ।
अविद्यया जगत् सर्वं तामाह भगवान् हरिः ॥७०॥
श्रीभगवानुवाच
निद्रे ! गच्छ ममादेशात् पातालतलसंश्रयान् ।
एकैकत्वेन षड् गर्भान् देवकीजठरं नय ॥७१॥
हतेषु तेषु कंसेन शेषाख्योंऽशस्ततो मम ।
अंशांशेनोदरे तस्याः सप्तमः सम्भविष्यति ॥७२॥
गोकुले वसुदेवस्य भार्यान्या रोहिणी स्थिता ।
तस्याः स सम्भूतिसमं देवि! नेयस्त्त्वयोदरम् ॥७३॥
सप्तमो भोजराजस्य भयाद् रोधोपरोधतः ।
देवक्या पतितो गर्भ इति लोको वदिष्यति ॥७४॥
गर्भसङ्कर्षणात् सोऽथ लोको सङ्कर्षणेति वै ।
संज्ञामवाप्स्यते वीरः श्वेताद्रिशिखरोपमः ॥७५॥
ततोऽहं सम्भविष्यामि देवकीजठरे शुभे ।
गर्भे त्वया यशोदाया गन्तव्यमविलम्बितम् ॥७६॥
प्रावृट्काले च नभसि कृष्णाष्टम्यामहं निशि ।
उत्पत्स्यामि नवम्याञ्च प्रसुतिं त्वमवाप्स्यसि ॥७७॥
यशोदाशयने मान्तु देवक्यास्त्वामनिन्दिते ।
मच्छक्तिप्रेरितमतिर्वसुदेवो नयिष्यति ॥७८॥
कंसश्च त्वामुपादाय देवि! शैलशिलातले ।
प्रक्षेप्स्यत्यन्तरिक्षे च त्वं स्थानं समवाप्स्यसि ॥७९॥

माध्यमद्वारा यो सम्पूर्ण जगत् पूर्ण रूपमा मोहित भइरहेको छ, तिनै अविद्यास्वरपिणी योगनिद्रा परब्रह्म परमात्मा भगवान् श्रीविष्णुकी महामाया हुन् । ती महामायासँग भगवान् श्रीहरिले भन्नुभयो.... ॥७०॥ **श्रीभगवान्ले भन्नुभयो–** हे निद्रे! जाऊ, मेरो आज्ञानुसार तिमीले पातालमा अवस्थित रहेका छओटा गर्भहरूलाई एकएक गरेर ल्याएर देवकीका पेटमा स्थापित गरिदेऊ ॥७१॥ ती सबैलाई कंसले मारिसकेपछि शेष नाम भएको मेरो अंश आफ्नो अंशांशबाट देवकीको पेटमा सातौं गर्भका रूपमा अवस्थित हुनेछ ॥७२॥ गोकुलमा रोहिणी नाम भएकी वसुदेवकी एक पत्नी रहेकी छन् । ती देवकीको सातौं गर्भलाई निकालेर तिमीले रोहिणीको गर्भमा स्थापित गरिदिनू । तर त्यो यसरी स्थापित गरिदिनू, जसले गर्दा त्यो बालक रोहिणीकै गर्भबाट उत्पन्न भएको जस्तै देखियोस् ॥७३॥ उसका विषयमा संसारमा मनुष्यहरूले भन्नेछन्, देवकीलाई कारागारमा बन्द गरिएकाले भोजराज कंसबाट अत्यन्त भयभीत भएका कारणले गर्दा देवकीको सातौं गर्भ तुहियो अर्थात् गर्भपतन भयो ॥७४॥ त्यो सेतो पर्वतशिखर जस्तै अत्यन्त पराक्रमी वीर पुरुष गर्भबाट राम्ररी सङ्कर्षण (तानिएको) गरिएको हुनाले संसारमा "सङ्कर्षण" का नामबाट प्रसिद्ध हुनेछ ॥७५॥ त्यसपछि हे शुभे! म स्वयंले देवकीको आठौं गर्भका रूपमा उनको मंगलमय पेटमा प्रवेश गर्नेछु । त्यस समयमा तिमीले पनि तत्कालै यशोदाका गर्भमा प्रवेश गर्नू ॥७६॥ वर्षाऋतुका समयमा भाद्र महिनाको कृष्णपक्षको अष्टमीको आधा रातका समयमा मैले देवकीका गर्भबाट जन्म लिनेछु र तिमीले नवमीका दिन यशोदाका गर्भबाट जन्म लिनू ॥७७॥ हे निःस्कलङ्क! त्यससमयमा मेरो शक्तिबाट पूर्ण रूपमा अभिप्रेरित भएका वसुदेवले मलाई यशोदाको शयनकक्षमा र तिमीलाई देवकीको शयनकक्षमा पुर्‍याइदिनुहुनेछ ॥७८॥ त्यसपछि हे देवि! कंस तिमीलाई तिम्रा खुट्टामा समाएर पर्वतका समान ढुङ्गामा पछार्नका लागि तयार हुनेछ, तर उसले पछार्न नभ्याइकन माथि गएर आकाशमार्गमा विराजमान हुनेछ्यौ ॥७९॥ त्यस

ततस्त्वां शतदृक् शक्रः प्रणम्य मम गौरवात् ।
प्रणिपातानतशिरा भगिनीत्वे ग्रहीष्यति ॥८०॥
ततः शुम्भनिशुम्भादीन्हत्वा दैत्यान् सहस्रशः ।
स्थानैरनेकैः पृथिवीमशेषां मण्डयिष्यसि ॥८१॥
त्वं भूतिः सन्ततिः कीर्तिः क्षान्तिर्द्यौः पृथिवी धृतिः ।
लज्जा पुष्टिरुषा या च काचिदन्या त्वमेव सा ॥८२॥
ये त्वामार्येति दुर्गेति वेदगर्भेऽम्बिकेति च ।
भद्रेति भद्रकालीति क्षेम्या क्षेमङ्करीति च ॥८३॥
प्रातश्चैवापराह्णे च स्तोष्यन्त्यानम्रमूर्त्तयः ।
तेषां हि प्रार्थितं सर्वं मत्प्रसादाद्भविष्यति ॥८४॥
सुरामांसोपहारैस्तु भक्ष्यभोज्यैश्च पूजिता ।
नृणामशेषकामांस्त्वं प्रसन्ना सम्प्रदास्यसि ॥८५॥
ते सर्वे सर्वदा भद्रे ! मत्प्रसादादसंशयम् ।
असन्दिग्धा भविष्यन्ति गच्छ देवि ! यथोदितम् ॥८६॥

समयमा मेरो प्रभावबाट अभिप्रेरित भएका सहस्रनयनबाट सम्पन्न इन्द्रले तिमीलाई शिर झुकाएर प्रणाम गर्नेछन् र तिमीलाई आफ्नी बहिनीका रूपमा स्वीकार गर्नेछन् ।।८०।।त्यसपछि तिमीले पनि शुम्भ र निशुम्भजस्ता धेरै दैत्यहरूको सर्वनाश गरेर विन्ध्याचल, जालन्धरजस्ता स्थानहरूमा निवास गरेर सम्पूर्ण पृथ्वीलाई शोभायमान बनाउनेछ्यौ ॥८१॥ तिमी नै भूति, सन्तति, कीर्ति र कान्ति हौ । तिमी नै आकाश, पृथ्वी, धृति, लज्जा, पुष्टि र उषा हौं । यसबाहेक संसारमा अन्य पनि जुनसुकै शक्ति छ, त्यो सबै तिमी नै हौ ॥८२॥जुन मनुष्यले प्रातःकाल र सायंकालमा अत्यन्त विनम्रतापूर्वक तिमीलाई आर्या, दुर्गा, वेदगर्भा, अम्बिका, भद्रा, भद्रकाली, क्षमदा र भाग्यदा आदिका नामबाट सम्बोधन गरेर तिम्रो स्तुति वा आराधना गर्दछ, मेरो कृपाका प्रभावले गर्दा त्यसका सबै किसिमका कामनाहरू पूर्ण हुनेछन् । यसमा कुनै किसिमको द्विविधा रहनेछैन ॥८३–८४॥ मदिरा, मासु, भक्ष्य र भोज्यद्वारा गरिएको पूजाबाट अत्यन्त प्रसन्न भएर तिमीले मनुष्यहरूलाई उनीहरूले कामना गरेका सबै वस्तुहरू उपलब्ध गराइदिनेछ्यौ ॥८५॥ तिमीद्वारा प्रदान गरिएका ती सबै किसिमका वरदानहरू मेरो प्रसन्नताका प्रभावले गर्दा निश्चित रूपमा परिपूर्ण हुनेछन् । हे देवि! अब तिमी मैले बताएअनुसारको स्थानमा आफ्नो कार्य सम्पन्न गर्न जाऊ ॥८६॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे प्रथमोऽध्यायः ।

ॐ

## द्वितीयोऽध्यायः

## अध्याय – २

### "यशोदागर्भे योगमायायाः देवकीगर्भे भगवतश्च प्रवेशः, देवनां देवकीस्तुतिः"

(यशोदाका गर्भमा योगमाया र देवकीका गर्भमा भगवान् प्रवेश तथा देवताहरूद्वारा देवकीको स्तुति)

पराशर उवाच

यथोक्तं सा जगद्धात्री देवदेवेन वै तदा।

षड्गर्भगर्भविन्यासं चक्रे चान्यस्य कर्षणाम् ॥१॥

सप्तमे रोहिणीं प्राप्ते गर्भे गर्भं ततो हरिः।

लोकत्रयोपकाराय देवक्याः प्रविवेश वै ॥२॥

योगनिद्रा यशोदायास्तस्मन्नेव ततो दिने।

सम्भूता जठरे तद्वद् यथोक्तं परमेष्ठिना ॥३॥

ततो ग्रहगणः सम्यक् प्रचचार दिवि द्विज।

विष्णोरंशे भुवं याते ऋतवश्चाभवन् शुभाः ॥४॥

न सेहे देवकीं द्रष्टुं कश्चिदप्यतितेजसा।

जाज्वल्यमानां तां दृष्ट्वा मनांसि क्षोभमाययुः ॥५॥

अदृष्यं पुरुषैः स्त्रीभिर्देवकीं देवतागणाः।

बिभ्राणां वपुषा विष्णुं तुष्टुवुस्तामहर्निशम् ॥६॥

देवता ऊचुः

प्रकृतिस्त्वं परा सूक्ष्मा ब्रम्हगर्भाऽभवः पुरा।

ततो वाणी जगद्धातुर्वेदगर्भासि शोभने ॥७॥

सूर्यस्वरूपगर्भासि सृष्टिभूता सनातनि।

बीजभूता तु सर्वस्य यज्ञभूताऽभवस्त्रयी ॥८॥

**पराशरजीले भन्नुभयो** – हे मैत्रेय! त्यसपछि जगद्धात्री योगमायाले परब्रम्ह परमात्मा देवाधिदेव भगवान् श्रीविष्णुले जसरी आज्ञा दिनुभएको थियो, त्यसैगरी पातालबाट ल्याएर छओटा गर्भ देवकीका पेटमा स्थापित गरिदिइन् र देवकीको सातौं गर्भलाई सङ्कर्षण गरेर अर्थात् तानेर निकालिदिइन् ॥१॥ यसरी देवकीको सातौं गर्भलाई रोहिणीको पेटमा स्थापित गरिसकेपछि परब्रह्म परमात्मा श्रीहरिले तीनोटै लोकहरूको कल्याण गर्नका लागि स्वेच्छापूर्वक देवकीका गर्भमा प्रवेश गर्नुभयो ॥२॥ त्यसपश्चात् परब्रम्ह परमात्मा श्रीपुरुषोत्तमको आज्ञानुसार योगमायाले पनि त्यसै दिन यशोदाका गर्भमा प्रवेश गरिन् ॥३॥ हे ब्राम्हणश्रेष्ठ! परब्रह्म परमात्मा श्रीविष्णुको अंश पृथ्वीमा आउनुभएकाले आकाशमा ग्रहहरू आआफ्नो उपयुक्त गतिमा चल्न थाले र सबै ऋतुहरू पनि मंगलमय रूप धारण गरेर शोभायमान हुन थाले ॥४॥ त्यस समयमा अत्यन्त तेजबाट जाज्वल्यमान भएकी देवकीलाई कसैले पनि हेर्न सक्दैनथे। उनीमा यस किसिमको ज्योति आएको देखेर उनका शत्रुहरूको मन पनि अत्यन्त भयभीत हुन्थ्यो ॥५॥ त्यसपछि त्यहाँ रहेका स्त्री वा पुरुष सबैबाट अदृश्य भएर देवताहरू परब्रह्म परमात्मा श्रीविष्णुलाई आफ्नो गर्भमा धारण गरेकी देवकीजीको दिनरात अत्यन्त एकाग्रतापूर्वक प्रार्थना गर्न थाले ॥६॥ **देवताहरूले भने** – हे शोभने ! पहिले तिमी ब्रम्हको प्रतिबिम्बलाई धारण गर्ने क्षमता भएकी सूक्ष्म प्रकृति भएकी थियौ र त्यसपश्चात् जगद्विधाताकी वेदगर्भा वाणी भयौ ॥७॥ हे सनातनी देवि! तिमी नै सूर्यस्वरूप गर्भ धारण गर्ने भएर सृष्टिका रूपमा विराजमान हुन्छ्यौ एवं तिमी नै सबैकी बीजस्वरूपा वेदत्रयी यज्ञस्वरूपा पनि हौ अर्थात् जति पनि सृज्य अथवा सृजना हुने पदार्थहरू छन्, ती सबै तिमीबाट उत्पन्न भएका हुन् ॥८॥ हे देवि! तिमी नै फल प्रदान गर्ने

फलगर्भा त्वमेवेज्या बह्निगर्भा तथारणिः ।

अदितिर्देवगर्भा त्वं दैत्यगर्भा तथा दितिः ॥९॥

ज्योत्स्ना वासरगर्भा त्वं ज्ञानगर्भासि सन्ततिः ।

नयगर्भा परा नीतिर्लज्जा त्वं प्रश्रयोद्वहा ॥१०॥

कामगर्भा तथेच्छा त्वं तुष्टिः सन्तोषगर्भिणी ।

मेधा च बोधगर्भासि धैर्यगर्भोद्वहा धृतिः ॥११॥

ग्रहर्क्षतारकागर्भा द्यौरस्यखिलहैतुकी ।

एता विभूतयो देवि ! तथान्याश्च सहस्रशः ॥१२॥

तथासंख्या जगद्धात्रि ! साप्रतं जठरे तव ।

समुद्रादिनदीद्वीपवनपत्तनभूषणा ॥१३॥

ग्रानमखर्वटखेटाद्या समस्ता पृथिवी शुभे ।

समस्तवह्नयोऽभ्भांसि सकलाश्च समीरणाः ॥१४॥

ग्रहर्क्षतारकाचित्रं विमानशतसङ्कुलम् ।

अवकाशमशेषस्य यद्ददाति नभः स्थलम् ॥१५॥

भूर्लोकश्च भुवर्लोकः स्वर्लोकोऽथ महर्जनः ।

तपश्च ब्रम्हलोकश्च ब्रह्मण्डमखिलं शुभे ॥१६॥

तदन्तरे स्थिता देवा दैत्यगन्धर्वचारणाः ।

महोरगास्तथा यक्षा राक्षसाः प्रेतगुह्यकाः ॥१७॥

यज्ञस्वरूपिणी र अग्निलाई आफूमा समाहित गराएर राख्ने अरणिस्वरूपा पनि हौ, तिमी नै अदितिका रूपमा देवताहरूलाई उत्पन्न गराउने माता र दितिका रूपमा दैत्यहरूकी माता पनि हौ ॥९॥ तिमी नै दिनकर अर्थात् सूर्यका किरणहरू एवं ज्ञान उपलब्ध गराउने गुरु सेवारूपी हौ। तिमी नै न्यायबाट सम्पन्न परम नीति र विनम्रताकी मूलस्रोत लज्जा हौ ॥१०॥ तिमी नै कामवासना उत्पन्न गराइदिने इच्छा, सन्तोष उत्पन्न गराइदिने तुष्टि, ज्ञान उत्पन्न गराइदिने प्रज्ञा र धैर्यधारण गर्नसक्ने शक्ति उपलब्ध गराइदिने धृति-स्वरूपा हौ ॥११॥ ग्रह, नक्षत्र र ताराहरूलाई आफूमा आश्रय दिने तथा वर्षाका माध्यमद्वारा सम्पूर्ण विश्वको कल्याण गराउने कारणका रूपमा रहेको आकाश पनि तिमी नै हौ ॥१२॥ हे जगद्धात्री अर्थात् दुर्गा ! हे देवि समुद्र, पर्वत, नदी, द्वीप, वन यी सबै तथा अन्य पनि हजारौं र असंख्य विभूतिहरू यस समयमा तिम्रो पेटमा अवस्थित रहेका छन् ॥१३॥ बस्तीबाट पूर्ण रूपमा सुशोयमान भएको गाउँ, खर्बट अर्थात् पहाडमा बसेको गाउँ एवं खेट अर्थात् कृषकको बस्ती भएको गाउँ आदिबाट सम्पन्न भएको सम्पूर्ण पृथ्वी, सम्पूर्ण अग्नि, जल एवं वायु पनि तिम्रै पेटमा समाहित भएर रहेका छन् ॥१४॥ ग्रह, नक्षत्र एवं ताराहरूबाट पूर्ण रूपमा सजिएको एवं सबैलाई आफूमा स्थान दिने त्यो सैकडौं विमानहरूबाट सुशोभित भएको आकाश ॥१५॥ हे शुभे ! भूर्लोक, भुवर्लोक, स्वर्गलोक, महर्लोक, जनलोक तथा ब्रह्मलोकसम्मका सबै ब्रह्मण्डहरू तिमीमा नै समाहित भएर रहेका छन् ॥१६॥ एवं ती लोकहरूमा निवास गर्ने देवता, असुर, गन्धर्व, चारण अर्थात् वंशको घुम्दै गुणगान गर्ने भाट, नाग यक्ष, राक्षस, प्रेत एवं गुह्यक अर्थात् कुबेर वा ब्रह्मको सभामा बस्ने एक यक्ष आदि पनि तिमीमा नै समाहित भएर रहेका छन् ॥१७॥ हे यशस्विनि! मनुष्य, पशु र अन्य सबै किसिमका जीवहरू

मनुष्याः पशवश्चान्ये ये च जीवा यशस्विनि ।

तैरन्तः स्थैरनतोऽसौ सर्वेशः सर्वभावनः ॥१८॥

रूपकर्मस्वरूपाणि न परिच्छेदगोचरे ।

यस्याखिलप्रमाणानि स विष्णुर्गर्भगस्तव ॥१९॥

त्वं स्वाहा त्वं स्वधा विद्या सुधा त्वं ज्योतिरम्बरे ।

त्वं सर्वलोकरक्षार्थमवतीर्णा महीतले ॥२०॥

प्रसीद देवि! सर्वस्य जगतः शं शुभे ! कुरु ।

प्रीत्या त्वं धारयेशानं धृतं येनाखिलं जगत् ॥२१॥

आफैंभित्र समाहित भएकाले जो अनन्त सर्वगामी र सर्वभावन परमात्मा हुनुहुन्छ तथा रूप, कर्म, स्वभाव र बालकपनको महिमा आदि सबै परिणामको विषय हुन सक्नुहुन्न उहाँ परब्रह्म परमात्मा श्रीविष्णु स्वयं नै वर्तमान अवस्थामा तिम्रो गर्भमा विराजमान हुनुभएको छ ॥१८-१९॥ तिमी नै स्वाहा, स्वधा, विद्या, सुधा अर्थात् अमृत र आकाशमा अवस्थित भएको ज्योति हौ । सबै लोकहरूको कल्याण गर्नका लागि मात्र तिमीले पृथ्वीमा अवतार लिएकी हौ ॥२०॥ हे देवि! तिमी प्रसन्न होऊ । हे शुभे ! तिमीले यो सम्पूर्ण जगत्को कल्याण गर । जसले यो सम्पूर्ण जगत्लाई आफ्नो एक अंशमा धारण गर्नुभएको छ, तिमीले उहाँ परमात्मालाई अत्यन्त श्रद्धा र प्रेमपूर्वक आफ्नो गर्भमा धारण गर ॥२१॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे द्वितीयोऽध्यायः ।



तृतीयोऽध्यायः अध्याय – ३

## "भगवत आविर्भावः, योगमायाद्वारा कंसस्य वञ्चना च"

(भगवान् अवतिर्ण तथा योगमायाद्वारा कंसलाई चेतावनी)

पराशर उवाच

एवं संस्तूयमाना सा देवैर्देवमधारयत्।

गर्भेण पुण्डरीकाक्षं जगतस्त्राणकारणम् ॥१॥

ततोऽखिलजगत्पद्मबोधायाच्युतभानुना।

देवकीपूर्वसन्ध्यामाविर्भूतं महात्मना ॥२॥

तज्जन्मदिनमत्यर्थमाह्लाद्यमलदिङ्मुखम्।

वभूव सर्वलोकस्य कौमुदी शशिनो यथा ॥३॥

सन्तः सन्तोषमधिकं प्रशमं चण्डमारुताः।

प्रसादं निम्नगा याता जायमाने जनार्दने ॥४॥

सिन्धवो निजशब्देन वाद्यं चक्रुर्मनोहरम्।

जगुर्गन्धर्वपतयो ननृतुश्चाप्सरोगणाः ॥५॥

ससृजुः पुष्पवर्षाणि देवा भुव्यन्तरिक्षगाः।

जज्वलुश्चाग्नयः शान्ता जायमाने जनार्दने ॥६॥

मध्यरात्रेऽखिलाधारे जायमाने जनार्दने।

मन्दं जगर्जुर्जलदाः पुष्पवृष्टिमुचो द्विज ॥७॥

**पराशरजीले भन्नुभयो** – हे मैत्रेय ! देवताहरूद्वारा यस प्रकारको स्तुति गरिएपछि देवकीले संसारको रक्षा एवं कल्याण गर्नका लागि अवतार लिन लाग्नुभएका परब्रह्म परमात्मा भगवान् श्रीपुण्डरीकाक्षलाई आफ्नो गर्भमा धारण गरिन् ॥१॥ त्यसपश्चात् सम्पूर्ण संसारस्वरूप कमललाई पूर्ण रूपमा विकसित गराउनका लागि देवकीरूपवी पूर्वसन्ध्याबाट श्रीअच्युतरूपी सूर्यदेवले अर्थात् भगवान् श्रीविष्णुले अवतार लिनुभयो ॥२॥ जसरी चन्द्रमाको किरण सम्पूर्ण लोकहरूका लागि अत्यन्त आनन्ददायक हुन्छ, त्यसरी नै परब्रह्मपरमात्मा श्रीविष्णुले अवतार लिनुभएको दिन पनि सम्पूर्ण लोकहरूका लागि अत्यन्तै आनन्ददायक भयो र त्यस समयमा सबै दिशाहरू अत्यन्त निर्मल भएका थिए ॥३॥ परब्रह्मपरमात्मा श्रीजनार्दनले जन्म लिनुभइसकेपछि सन्त–महात्माहरूले अत्यन्तै आनन्दको अनुभूति गरे, अत्यन्त प्रचण्ड रूपमा बहिरहेको वायु पनि पूर्ण रूपमा शान्त भयो तथा नदीहरू पनि अत्यन्त स्वच्छ भएर बहन थाले ॥४॥ समुद्रहरूले आफ्नो अत्यन्त सुमधुर शब्दहरूमा अत्यन्त मनमोहक बाजा बजाउन थाले, गन्धर्वहरू गीत गाउन थाले तथा यो अवसरलाई पूर्ण रूपमा रमणीय बनाउनका लागि स्वर्गका अप्सराहरू आकर्षक नृत्य गर्न थाले ॥५॥ परब्रह्मपरमात्मा श्रीजनार्दन प्रकट भइसक्नुभएपछि देवताहरूले आकाशबाट पृथ्वीमा फूलहरूको वर्षा गराउन थाले तथा यज्ञमा बालिएका अग्निहरू अत्यन्त शान्त रूप धारण गरेर प्रज्वलित हुन थाले ॥६॥ हे ब्राह्मण श्रेष्ठ! मध्यारात्रिका समयमा सम्पूर्ण संसार एवं जीवमात्रका परमाधार अर्थात् परम आश्रय परब्रह्म परमात्मा श्रीवष्णुको भगवान् श्रीकृष्णका रूपमा जन्म हुँदाका समयमा मेघ अर्थात् बादलहरू पुष्पवृष्टि अर्थात् फूलको वर्षा गराउनुका साथै मन्द–मन्द आवाजमा गर्जन थाले ॥७॥ आनकदुन्दुभि वसुदेवजीले उहाँलाई

फुल्लेन्दीवरपत्राभं चतुर्बाहुमुदीक्ष्य तम्।

श्रीवत्सवक्षसं जातं तुष्टवानकदुन्दुभिः ॥८॥

अभिष्टूय च तं वाग्भिः प्रसन्नाभिर्महामतिः।

विज्ञापयामास तदा कंसाद्भीतो द्विजोत्तमः ॥९॥

वसुदेव उवाच

ज्ञातोऽसि देवदेवेश ! शङ्खचक्रगदाधर।

दिव्यरूपमिदं देव प्रसादेनोपसंहर ॥१०॥

अद्यैव देव! कंसोऽयं कुरुते मम घातनम्।

अवतीर्ण इति ज्ञात्वा त्वमस्मिन् मम मन्दिरे ॥११॥

देवक्युवाच

योऽनन्तरूपोऽखिलविश्वरूपो

गर्भेषु लोकान् वपुषा विभर्ति।

प्रसीदतामेष स देवदेवः

स्वमाययाविष्कृतबालरूपः ॥१२॥

उपसंहर सर्वात्मन् ! रूपमेतच्चतुर्भुजम्।

जानातु मावतारं ते कंसोऽयं दितिजाधमः ॥१३॥

श्रीभगवानुवाच

स्तुतोऽहं यत् त्वया पूर्वं पुत्रार्थिन्या तदद्य ते।

सफलं देवि! सञ्जातं जातोऽहं यत् तवोदरात् ॥१४॥

पूर्ण रूपमा फुलेका कमलको फूलका समान अत्यन्त शोभायमान चतुर्भुज स्वरूपमा र आफ्नो हृदयको केन्द्रविन्दु अर्थात् छातीमा श्रीवत्स (पुराणहरूका अनुसार विष्णुको छातीमा रहेको भृगु ऋषिको लात्तीको चिन्ह) अङ्कित गराएर उत्पन्न हुनुभएका परब्रह्म परमात्मा श्रीविष्णुको दर्शन गरेपछि उहाँको स्तुति गर्न थाले ॥८॥ हे ब्राह्मणश्रेष्ठ! तत्त्वका ज्ञाता वसुदेवजीले अत्यन्त पवित्र वाक्यहरूद्वारा सम्पूर्ण जगत्का परमाधिपति परब्रह्मपरमात्मा श्रीविष्णुको स्तुति गरेर कंसको भयका कारणले अत्यन्त भयभीत हुँदै त्यस समयमा भगवान्सँग विनम्रतापूर्वक विन्ती गर्दै भने ॥९॥ **वसुदेवले भने–** हे देवदेवेश! मलाई हजुरका विषयमा यथार्थ ज्ञान भइसक्यो। यद्यपि हजुर साक्षात् परमेश्वर प्रकट हुनुभएको छ, तथापि हे देव ! हजुर मबाट प्रसन्न भएर अब आफ्नो यो शङ्ख, चक्र, गदा धारण गर्नुभएको दिव्य स्वरूपको उपसंहार गरिदिनुहोस् ॥१०॥ हजुरले मेरो घरमा अवतार लिनुभएको जानकारी पायो भने त्यो अत्यन्त दुष्टबुद्धि भएको कंसले आजै मेरो पूर्ण रूपमा विनाश गरिदिनेछ। त्यसकारण हे देव! आफ्नो यो चतुर्भुज स्वरूपको अन्त्य गरिदिनुहोस् ॥११॥ **देवकीले भनिन्–** जो अनन्तस्वरूप एवं विश्वस्वरूप हुनुहुन्छ, जसले गर्भमा निवास गरे तापनि आफ्नो शरीरको कुनै एक अंशमा सम्पूर्ण ब्रह्मण्डहरूलाई धारण गर्नुहुन्छ। हे देवाधिदेव! यस प्रकारका हजुर आफ्नो योगमायाबाट बालकको स्वरूपमा विराजमान भएर हामीबाट प्रसन्न भइदिनुहोस् ॥१२॥ हे सर्वात्मन् परमात्मा! हजुरले आफ्नो यो चतुर्भुज स्वरूपको अन्त्य गरिदिनुहोस्। हे भगवान् ! यो राक्षसको अंशबाट उत्पन्न (द्रुमिल नाम भएको राक्षसले राजा उग्रसेनको स्वरूप धारण गरेर उनकी पत्नीसँग सहवास अर्थात् सम्भोग गरेको थियो। त्यसैको वीर्यबाट कंस उत्पन्न भयो। यसको कथा हरिवंशपुराणमा आएको छ) कंसले हजुरको अवतारका विषयमा अलिकति मात्र पनि जान्न नपाओस् ॥१३॥ **श्रीभगवान्ले भन्नुभयो–** हे देवि! तिमीले प्राचीन कालमा पुत्रको रूपमा प्राप्त गर्ने कामना राखेर मसँग प्रार्थना गरेकी थियौ। त्यो तिम्रो प्रार्थना आज सफल भयो, किनकि आज म तिम्रा गर्भबाट तिम्रो पुत्रका रूपमा उत्पन्न भएको छु ॥१४॥

पराशर उवाच

इत्युक्त्वा भगवांस्तूष्णीं बभूव मुनिसत्तम।

वसुदेवोऽपि तं रात्रावादाय प्रययौ बहिः ॥१५॥

मोहिताश्चाभवंस्तत्र रक्षिणो योगनिद्रया।

मथुराद्वारपालाश्च बज्रत्यानकदुन्दुभौ ॥१६॥

वर्षतां जलदानञ्च तोयमत्युल्वणं निशि।

संछाद्यानुययौ शेषः फणैरानकदुन्दुभिम् ॥१७॥

यमुनां चातिगम्भीरां नानावर्तसमाकुलाम्।

वसुदेवो बहन् विष्णुं जानुमात्रवहां ययौ ॥१८॥

कंसस्य करमादाय तत्रैवाभ्यागतांस्तटे।

नन्दादीन् गोपवृद्धांश्च यमुनाया ददर्श सः ॥१९॥

तस्मिन् काले यशोदापि मोहिता योगनिद्रया।

तामेव कन्यां मैत्रेय ! प्रसूता मोहिते जने ॥२०॥

वसुदेवोऽपि विन्यस्य बालमादाय दारिकाम्।

यशोदाशयने तूर्णमाजगामामितद्युतिः ॥२१॥

ददृशे च प्रबुद्धा सा यशोदा जातमात्मजम्।

नीलोत्पलदलश्यामं ततोऽत्यर्थं मुदं ययौ ॥२२॥

आदाय वसुदेवोऽपि दारिकां निजमन्दिरम्।

देवकीशयने न्यस्य यथापूर्वमतिष्ठत ॥२३॥

**पराशरजीले भन्नुभयो –** हे मुनिश्रेष्ठ ! यसरी बताइसकेपछि परब्रह्मपरमात्माले मौनता धारण गर्नुभयो एवं वसुदेवजी पनि त्यस समयमा अर्थात् आधा रातमा नै उहाँलाई लिएर बाहिर जानुभयो ॥१५॥ वसुदेव बाहिर जाँदाका अवस्थामा कंसको कारागारमा रहेका सुरक्षाकर्मीहरू र मथुराका द्वारपालहरू योगमायाका प्रभावले पूर्ण रूपमा मोहित भएका थिए अर्थात् उनीहरू अत्यन्त गहिरो निद्रामा परेका थिए ॥१६॥ त्यस रात वर्षा गराउँदै रहेका मेघहरूको जलधारालाई छाताको रूप धारण गरेर आफ्ना फणाहरूले रोक्दै श्रीशेषनाग आनकदुन्दुभि अर्थात् वसुदेवजीका पछिपछि हिँड्न थाले ॥१७॥ परब्रह्म परमात्मा श्रीविष्णुलाई आफ्ना शिरमा बोकेर गएका वसुदेवजीले यमुना नदी तर्दाका अवस्थामा त्यो अनेकौं प्रकारका जलजन्तुहरूले निवास गरेको नदीमा उनको घुँडासम्म मात्र पानी रहेको थियो अर्थात् यमुनाको पानी उनको घुँडाभन्दा माथि आएन ॥१८॥ उनले त्यहाँ अर्थात् यमुनाजीका किनारमा नै कंसलाई कर बुझाउनका लागि आएका नन्द आदि वयोवृद्ध गोपहरूलाई पनि देखेका थिए ॥१९॥ हे मैत्रेय! यसै समयमा योगमायाको प्रभावले सबै मनुष्यहरू पूर्ण रूपमा मोहित भएका अवस्थामा त्यसरी नै मोहित भएकी यशोदाले पनि तिनै कन्यालाई जन्म दिइन् ॥२०॥ त्यसपछि अत्यन्त तेजिलो कान्तिबाट सम्पन्न वसुदेवजी पनि आफूले ल्याएको बालकलाई यशोदाका ओछ्यानमा सुताइदिएर एवं ती कन्यालाई लिएर तत्कालै यशोदाको शयनकक्षबाट निस्किएर हिँडे ॥२१॥ जब यशोदा योगमायाको प्रभावबाट बाहिर निस्किइन् अर्थात् होसमा आइन् त्यस समयमा आफूबाट एक नीलकमलको फूलका समान श्यामवर्ण भएको बालक अर्थात् पुत्र उत्पन्न भएको देखेर उनी अत्यन्त प्रसन्न भइन् ॥२२॥ यता वसुदेवजीले ती कन्यालाई आफ्नो घरमा ल्याएर देवकीको विछ्यौनामा सुताइदिए। त्यसपछिको अवस्था पहिलेपहिलेको जस्तै साधारण किसिमको भयो ॥२३॥ हे द्विज ! त्यसपश्चात् बालक रोइरहेको आवाज सुनेर कंसको कारागरका

ततो बालध्वनिं श्रुत्वा रक्षिणः सहसोत्थिताः।

कंसायावेदयामासुर्देवकीप्रसवं द्विज ॥२४॥

कंसस्तूर्णमुपेत्यैनां ततो जग्राह बालिकाम्।

मुञ्च मुञ्चेति देव्या सन्नकण्ठ्या निवारितः ॥२५॥

चिक्षेप च शिलापृष्ठे सा क्षिप्ता वियति स्थितिम्।

अवाप रूपञ्च महत् सायुधाष्टमहाभुजम् ॥२६॥

प्रजहास तथैवोच्चैः कंसञ्च रुषिताब्रवीत्।

किं मया क्षिप्तया मूढ! जातो यस्त्वां वधिष्यति ॥२७॥

सर्वस्वभूतो देवानामासीन्मृत्युः पुरा स ते।

तदेतत् सम्प्रधार्याशु क्रियतां हितमात्मनः ॥२८॥

इत्युक्त्वा प्रययौ देविदिव्यस्रग्गन्धभूषणा।

पश्यतो भोजराजस्य स्तुता सिद्धैर्विहायसि ॥२९॥

सुरक्षाकर्मीहरू अत्यन्त हडबडाउँदै उठे र देवकीको सन्तान उत्पन्न भइसकेको खबर कंसलाई सुनाइदिए ॥२४॥ यसपछि कंसले अत्यन्त शीघ्रतापूर्वक आएर देविदेवकीद्वारा “छोडिदिनुस्, छोडिदिनुस्” भन्दै रोक्ने प्रयास गरे तापनि ती कन्यालाई समाएर ढुङ्गामाथि फ्याँकिदियो। कंसद्वारा त्यसरी फ्याँकिएकी ती कन्या आकाश मार्गमा गएर अवस्थित भइन्। त्यसपछि उनले अस्त्रशस्त्रबाट पूर्ण रूपमा सम्पन्न अत्यन्त उग्र अष्टभुज स्वरूप धारण गरिन् ॥२५–२६॥ त्यसपछि उनले अत्यन्त उच्च स्वरमा अट्टहास गरिन् र कंससँग रोष–पूर्ण भावमा भनिन्– “हे अत्यन्त दुरात्मा एवं मूर्ख कंस! तैंले मलाई ढुङ्गामाथि फ्याँकेर तेरो कुनचाहिं कार्य सिद्ध भयो? जसले निश्चित रूपमा तेरो बध गर्नुहुनेछ, उहाँले त यसभन्दा पहिले नै जन्म लिइसक्नुभएको छ। देवताहरूका पनि देवता अर्थात् सम्पूर्ण संसारका अधिपति परमपुरुष श्रीहरि नै तेरो पूर्वजन्म अर्थात् कालनेमि रूपको पनि काल हुनुहुन्थ्यो अर्थात् त्यो जन्ममा पनि तँ उहाँकै हातबाट मारिएको थिइस्। त्यसकारण यी सबै कुराहरूमा विशेष ध्यान दिएर तैंले अहिलेदेखि नै आफ्नो कल्याणका विषयमा चिन्तन गर” ॥२७–२८॥ भोजराजसँग यति कुरा बताइसकेपछि दिव्य माला र अत्यन्त सुगन्धित चन्दनबाट विभूषित भएकी ती देविसिद्धद्वारा प्रार्थना गरिएको अवस्थामा नै आकाशमार्गमा अन्तर्ध्यान भइन् ॥२९॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे तृतीयोऽध्यायः।



## चतुर्थोध्यायः　　　　अध्याय – ४

### "कारागाराद् वसुदेवदेवक्योर्मुक्तिलाभः"

(कंसको कारागारमा वसुदेव र देवकीलाई मुक्ति प्राप्त)

पराशर उवाच

कंसस्ततोद्विग्नमनाः प्राह सर्वान् महासुरान्।

प्रलम्बकेशिप्रमुखानाहूयासुरपुङ्गवान् ॥१॥

कंस उवाच

हे प्रलम्ब महाबाहो केशिन् धेनुक पूतने।

अरिष्टाद्यास्तथैवान्ये श्रूतयां वचनं मम ॥२॥

मां हन्तुममरैर्यत्नः कृतः किल दुरात्मभिः।

मद्वीर्यतापितैर्वीरो न त्वेतान् गणयाम्यहम् ॥३॥

किमेन्द्रेणाल्पवीर्येण किं हरेणैकचारिणा।

हरिणा वापि किं साध्वं छिद्रेष्वसुरघातिना ॥४॥

किमादित्यैः किं वसुमिरल्पवीर्यैः किमग्निभिः।

किञ्चान्यैरमरैः सर्वैर्मद्बाहुबलनिर्जितैः ॥५॥

किं न दृष्टोऽमरपतिर्मया संयुगमेत्य सः।

पृष्ठेनैव वहन् वाणानपागच्छन्न वक्षसा ॥६॥

**पराशरजीले भन्नुभयो–** यसपश्चात् अत्यन्त उदास मन भएको कंसले प्रलम्ब, केशीजस्ता आफ्ना परममित्रका रूपमा रहेका सबै मुख्य-मुख्य असुरहरूलाई बोलाएर भन्न थाल्यो ॥१॥ **कंसले भन्यो–** हे अत्यन्त पराक्रमी प्रलम्ब ! हे केशिन् ! हे धेनुक! हे पूतने ! अरिष्ट आदि अन्य असुरहरूसहित तपाईंहरूले कृपया मेरो कुरा विशेष ध्यानपूर्वक सुन्नुहोला....... ॥२॥ हामीहरूको शक्तिबाट पूर्ण रूपमा पराजित भएका दुरात्मापन भएका देवताहरू मेरो बध गराउने कार्यमा अत्यन्त तत्परतापूर्वक लागिरहेका छन्। तर म स्वयं अत्यन्त वीर पुरुष भएकाले आफ्नो शक्तिबाट सताइएका यिनीहरूलाई केही पनि सम्भिन्न अर्थात् यिनीहरू मेरो अगाडि हात्तीका छेउमा आएको भुसुनु बराबर हुन् ॥३॥ अत्यन्त थोरैमात्र पराक्रम भएका इन्द्र, तपस्यामात्र गरिरहने महादेव अथवा अत्यन्त असावधान भएको अवस्थामा मौका पारेर दैत्यहरूको हत्या अर्थात् विनाश गर्ने विष्णुबाट उनीहरूको कुनै पनि कार्य सिद्ध होला जस्तो मलाई लाग्दैन ॥४॥ मेरो पराक्रमबाट थिचिएका आदित्यहरू, अत्यन्तै अल्पशक्ति भएका वसुहरू, अग्निहरू अथवा मेरो पराक्रमबाट पराजित भइसकेका सम्पूर्ण देवताहरूबाट पनि मलाई कुनै हानि होला जस्तो लागिरहेको छैन ॥५॥ के तपाईंहरूले देख्नुभएको थिएन, देवताहरूका राजा इन्द्र मसँग युद्ध गर्दाका समयमा आफ्नो छातीमा नभएर पछाडि ढाडमा वाणहरूको वर्षालाई सहन गर्दै युद्धभूमिबाट भागेका थिए ॥६॥ जुन समयमा इन्द्रले मेरो राज्यमा वर्षा

मद्राष्ट्रे बारिता वृष्टिर्यदा शक्रेण किं तदा।

मद्बाणभिन्नैर्जलदैरापोऽमुक्ता यथेप्सिताः? ॥७॥

किमुर्व्यामवनीपाला मद्बाहुबलभीरवः।

न सर्वे सन्नतिं याता जरासन्धमृते गुरुम् ? ॥८॥

अमरेषु च मेऽवज्ञा जायते दैत्यपुङ्गवा।

हास्यं मे जायते वीरास्तेषु यत्नपरेष्वपि ॥९॥

तथापि खलु दुष्यनां तेषामभ्यधिकं मया।

अपकाराय दैत्येन्द्रा यतनीनयं दुरात्मनाम् ॥१०॥

तद् यै यशस्विनः केचित् पृथिव्यां ये च यज्विनः।

कार्यो देवापकाराय तेषां सर्वात्मना वधः ॥११॥

उत्पन्नश्चापि मुत्युर्मे भूतपूर्वः स वै किल।

इत्येतद् बालिका प्राह देवकीगर्भसम्भवा ॥१२॥

तस्माद् बालेषु परमो यत्नः कार्यो महीतले।

यत्रोद्रिक्तं बलं बाले स हन्तव्यः प्रयत्नतः ॥१३॥

पराशर उवाच

इत्याज्ञाप्यासुरान् कंसः प्रविष्यात्मगृहं ततः।

मुमोच वसुदेवञ्च देवकीञ्च निरोधतः ॥१४॥

गराउन प्रतिबन्ध लगाएका थिए, त्यसै समयमा मैले एउटामात्र वाणको प्रयोग गरेपछि त्यसको असरबाट पीडित भएका मेघहरूले कसरी पूर्ण रूपमा जल बर्साएका थिए ? त्यो तपाईंहरूले देखेकै कुरा हो ॥७॥ मेरा गुरु एवं ससुरा जरासन्धलाई परित्याग गरेर मेरो पराक्रमबाट अत्यन्त भयभीत भएका सम्पूर्ण पृथ्वीमा भएका सबै राजाहरूले मेराअगाडि आफ्नो शिर झुकाएको कुरा त यहाँहरूलाई ज्ञान भएकै विषय हो ॥८॥ हे दैत्यश्रेष्ठहरू! देवताहरूप्रति मेरो अन्तरात्मामा अवज्ञा अर्थात् हेलापूर्ण भाव अवश्य पनि रहेको छ, तर हे वीरहरू! उनीहरू पनि मेरो वध गर्ने प्रयासमा अत्यन्त तत्परतापूर्वक लागिरहेको देख्दा मलाई कताकता हाँस्न मन पनि लाग्दछ ॥९॥ त्यसैले हे दैत्येन्द्र! तथापि ती अत्यन्त दुष्ट एवं दुरात्माहरूको संहार गर्ने कार्यमा हामी अझै पनि अत्यन्त उत्साह एवं तत्परतापूर्वक लागिरहन अत्यन्त आवश्यक देखिएको छ ॥१०॥ त्यसकारण पृथ्वीमा जोसुकै पनि यशस्वी अर्थात् चारैतिर जस फैलिएका र यज्ञकर्ता रहेका छन्, देवताहरूको पूर्ण रूपमा विनाश गर्नका लागि तिनीहरूको अनिवार्य रूपमा वध गर्नैपर्छ, यसमा कुनै किसिमको सन्देह राख्नु हुँदैन ॥११॥ देवकीका गर्भबाट उत्पन्न भएकी बालिकाले बताएअनुसार मेरो पहिलो जन्मको अर्थात् भूतपूर्व हत्याकर्ता पुरुष फेरि उत्पन्न भइसकेको छ ॥१२॥ त्यसकारण हिंजोआज पृथ्वीमा उत्पन्न भएका बालकहरूमा विशेष ध्यान पुऱ्याउन अत्यन्त आवश्यक छ। जुन बालकमा अत्यधिक मात्रामा बल रहेको देखिन्छ, त्यसलाई यत्नपूर्वक मारिदिनुपर्दछ। अर्थात् जस्तोसुकै अवस्थामा पनि त्यस्तो बालकलाई जीवित रहन दिनु हुँदैन ॥१३॥ **पराशरजीले भन्नुभयो** – आफ्ना परम मित्र असुरहरूलाई यस प्रकारको आज्ञा दिइसकेपछि कंसले आफ्नो कारागारमा प्रवेश गरेर तत्कालै वसुदेव र देवकीलाई कारागारबाट मुक्त गरिदियो ॥१४॥ **कंसले भन्यो**– मैले आजसम्म

कंस उवाच

युवयोर्घातिता गर्भा वृथैवैते मयाधुना।

कोऽप्यन्य एव नाशाय बालो मम समुद्गतः? ॥१५॥

तदलं परितापेन नूनं तद्भाविनो हि ते।

अर्भका युवयोर्दोषाच्चायुषो यद्वियोजिताः ॥१६॥

पराशर उवाच

इत्याश्वास्य विमुक्त्वा च कंसस्तौ परिशङ्कितः।

अन्तर्गृहं द्विजश्रेष्ठ प्रविवेश पुनः स्वकम् ॥१७॥

तपाईंहरूका बालकहरूको अनावश्यक रूपमा हत्या गरें। किनकि मेरो पूर्ण रूपमा विनाश गराउने बालक त अन्यत्र कतै उत्पन्न भइसकेको रहेछ ॥१५॥ तर यसमा तपाईंहरूले कुनै किसिमको दुःख नमान्नु होला। किनकि ती बालकहरूको भाग्यमा नै त्यस्तै लेखिएको थियो, त्यसैले यस्तो भयो। तपाईंहरूको प्रारब्धको दोषका कारणले गर्दा नै ती बालकले जन्मानासाथै मृत्युको मुखमा जान बाध्य हुनुपर्‍यो ॥१६॥ पराशरजीले भन्नुभयो – हे ब्राह्मणश्रेष्ठ! कंसले यस किसिमले वसुदेव र देवकीलाई आश्वासन अर्थात् सान्त्वना दिँदै उनीहरूलाई कारागारबाट मुक्त गरिदिएर अत्यन्त सशङ्कित र पूर्ण रूपमा उदास मनका साथ आफ्नो घरमा प्रवेश गर्‍यो ॥१७॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे चतुर्थोऽध्यायः।

ॐ

## पञ्चमोऽध्यायः

## अध्याय – ५

### "पूतनावधः"

(पूतनाको वध)

पराशर उवाच

विमुक्तो वसुदेवोऽथ नन्दस्य शकटं गतः ।
प्रहृष्टं दृष्टवान् नन्दं पुत्रो जातो ममेति वै ॥१॥

वसुदेव उवाच

वसुदेवोऽपि तं प्राह दिष्ट्या दिष्ट्येति सादरम् ।
वार्द्धकेऽपि समुत्पन्नस्तनयोऽयं तवाधुना ॥२॥
दत्तो हि वार्षिकः सर्वो भवद्भिर्नृपतेः करः ।
यदर्थमागतास्तस्मान्नावस्थेयं महाधना ॥३॥
यदर्थमागताः कार्यं तन्निष्पन्नं किमास्यते ।
भवद्भिर्गम्यतां नन्द ! तच्छीघ्रं निजगोकुलम् ॥४॥
ममापि बालकस्तत्र रोहिणीप्रसवो हि यः ।
स रक्षणीयो भवता यथायं तनयो निजः ॥५॥

पराशर उवाच

इत्युक्ताः प्रययुर्गोपा नन्दगोपपुरोगमा ।
शकटारोपितैर्भाण्डैः करं दत्वा महाबलाः ॥६॥
वसतां गोकुले तेषां पूतना बालघातिनी ।
सुप्तं कृष्णमुपादाय रात्रौ तस्मै ददौ स्तनम् ॥७॥
यस्मै यस्मै स्तनं रात्रौ पूतना सम्प्रयच्छति ।
तस्य तस्य क्षणेनाङ्गं बालकस्योपहन्यते ॥८॥

**पराशरजीले भन्नुभयो** – कंसको कारागारबाट मुक्त भएपछि तत्कालै वसुदेवजी नन्दजीको गोरुगाडाका नजिकमा गए र आफ्ना घरमा पुत्र उत्पन्न भएको खुसीमा अत्यन्त आनन्दित भएका नन्दजीको दर्शन गरे ॥१॥ त्यसपछि वसुदेवजीले नन्दजीसँग अत्यन्त आदरपूर्वक भने – यो वृद्धावस्थामा तपाईंको पुत्र जन्मियो, यो पनि अत्यन्त ठूलो सौभाग्यको कुरा हो ॥२॥ तपाईंले राजालाई बुझाउनुपर्ने वार्षिक कर सबै बुझाइसक्नुभएको छ। हे महाधनपति! तपाईं यहाँ धेरै समयसम्म नबस्नुहोस् अर्थात् चाँडै गइहाल्नुहोस् ॥३॥ यहाँ तपाईं जुन कार्य सम्पन्न गर्न आउनुभएको थियो, त्यो पूर्ण भइसकेको छ। त्यसैले अब यहाँ धेरै समयसम्म बसिरहन उचित छैन। त्यसकारण हे नन्दजी तपाईंहरू तत्कालै फर्किएर आफ्नो गोकुलमा जानुहोस् ॥४॥ गोकुलमा रोहिणीका गर्भबाट उत्पन्न भएको जुन मेरो एउटा बालक रहेको छ, तपाईंले यस बालकका जसरी नै त्यस बालकको पनि रक्षा गर्नुहोला ॥५॥ **पराशरजीले भन्नुभयो** – वसुदेवजीले यसरी बताइसकेपछि नन्द आदि अत्यन्त बलवान् गोपहरू राजालाई तिर्नुपर्ने कर बुझाइसकेपछि आफ्नो हाँडाभाँडा गोरुगाडामा राखेर गोकुलतिर गए ॥६॥ नन्द आदि सबै गोकुलमा बसिरहेको अवस्थामा नै बालघातिनी पूतनाले रात्रिका समयमा सुतिरहनुभएका भगवान् श्रीकृष्णलाई आफ्ना काखमा लिएर उहाँका मुखमा आफ्नो स्तनको मुन्टो हालिदिई ॥७॥ रात्रियका समयमा त्यो बालघातिनी पूतनाले जुन जुन बालकका मुखमा आफ्नो स्तनको मुन्टो राखिदिन्थी त्यो त्यो बालकको शरीर त्यसै समयमा पूर्ण रूपमा नष्ट हुन्थ्यो ॥८॥ परब्रह्म परमात्मा भगवान्

कृष्णस्तस्याः स्तनं गाढं कराभ्यामवपीडितम् ।
गृहीत्वा प्राणसहितं पपौ कोपसमन्वितः ॥९॥
सा विमुक्तमहारावा विच्छिन्नस्नायुबन्धना ।
पपात पूतना भूमौ म्रियमाणातिभीषणा ॥१०॥
तन्नादश्रुतिसन्त्रासात् प्रबुद्धास्ते व्रजौकसः ।
ददृशुः पूतनोत्सङ्गे कृष्णं ताञ्च निपातिताम् ॥११॥
आदाय कृष्णं सन्त्रस्ता यशोदापि द्विजोत्तम ।
गोपुच्छं भ्राम्य हस्तेन बालदोषमपाकरोत् ॥१२॥
गोः करीषमुपादाय नान्दगोपोऽपि मस्तके ।
कृष्णस्य प्रददौ रक्षां कुर्वश्चैदुदीरयन् ॥१३॥
नन्दगोप उवाच
रक्षतु त्वामशेषाणां भूतानां प्रभवो हरिः ।
यस्य नाभिसमुद्भूतपङ्कजादभवज्जगत् ॥१४॥
येन दंष्ट्राग्रविधृता धारयत्यवनी जगत् ।
वराहरूपधृग् देवः स त्वां रक्षतु केशवः ॥१५॥
नखाङ्कुरविनिर्भिन्नवैरिवक्षस्थलो विभुः ।
नृसिंहरूपी सर्वत्र स त्वां रक्षतु केशवः ॥१६॥
वामनो रक्षतु सदा भवन्तं यः क्षणादभूत् ।
त्रिविक्रमः क्रमाक्रान्त–त्रैलोक्यः स्फुरदायुधः ॥१७॥

श्रीकृष्णले पनि अत्यन्त क्रोधित भएर आफ्ना हातले अत्यन्तै बलियोसँग त्यसको स्तनमा समाएर पूतनाका प्राणहरूसहित स्तनपान गर्न थाल्नुभयो । अर्थात् त्यसको स्तन चुस्न थाल्नुभयो ॥९॥ त्यस समयमा पूतनाको शरीरका नसाको जोर्नी फुस्किएपछि अत्यन्त भयानक स्वरूप भएकी पूतना मृत्यु हुनै लाग्दा अत्यन्त भयानक आवाजमा चिच्याउँदै पृथ्वीमा ढली अर्थात् श्रीकृष्णको नाश गर्न आएकी पूतनाको आफ्नै विनाश भयो ॥१०॥ उसले चिच्याउँदा निस्किएको अत्यन्त भयानक आवाज सुनेर अत्यन्त भयभीत भएर बिउँझिएपछि उनीहरूले भगवान् श्रीकृष्णलाई मृतावस्थामा रहेकी पूतनाका काखमा खेलिरहनुभएको तथा पूतना मरिरहेकी देखे ॥११॥ हे ब्राह्मणश्रेष्ठ ! त्यसपछि अत्यन्त भयभीत भएकी यशोदाले श्रीकृष्णलाई आफ्नो काखमा लिइन्, त्यसपछि भगवान् श्रीकृष्णलाई गाईको पुच्छरले चारैतिर छुवाएर दोष निवारण गराइन् ॥१२॥ त्यस समयमा नन्दजीले गोबरको धुलो हातमा लिएर अगाडि लेखिएका मन्त्रहरू उच्चारण गर्दै रक्षाको विधिअनुसार भगवान् श्रीकृष्णको शिरमा राखिदिए ॥१३॥ **नन्दोगोपले भने–** जसका नाभिबाट उत्पन्न भएको कमलबाट सम्पूर्ण संसार उत्पन्न भएको छ तथा जो सम्पूर्ण प्राणीमात्रको उत्पत्तिको आदिकारण हुनुहुन्छ, उहाँ परब्रह्म परमात्मा श्रीहरिले तिम्रो रक्षा गरिदिनुहोस् ॥१४॥ जसका दाँतहरूका अगाडिको भागमा अवस्थित रहेकी पृथ्वीले सम्पूर्ण प्राणी धारण गर्दछिन् अर्थात् जुन पृथ्वीमा सम्पूर्ण जगत् समाहित भएको छ, उहाँ वराह स्वरूप धारण गर्नुहुने भगवान् केशवले तिम्रो रक्षा गरिदिनुहोस् ॥१५॥ जुन परमात्माले आफ्ना हातका नङ्ग्राद्वारा शत्रुको छाती चिराचिरा पारिदिनुभएको थियो, उहाँ सर्वव्यापी नृसिंह स्वरूप धारण गर्नुभएका भगवान् श्रीकेशवले सधैँ तिम्रो रक्षा गरिदिनुहोस् ॥१६॥ जुन परमात्माले क्षणभरमा आफ्नो पादको स्थापनाद्वारा त्रैलोक्यलाई अधिकारमा लिएर शस्त्रहरूसहित विराजमान त्रिविक्रम स्वरूप धारण गर्नुभएको थियो, उहाँ भगवान् वामनदेवले सधैँ तिम्रो रक्षा गरिदिनुहोस् ॥१७॥ परब्रह्म परमात्मा श्रीगोविन्दले

शिरस्ते पातु गोविन्दः कण्ठं रक्षतु केशवः।

गुह्यञ्च जठरं विष्णुर्जङ्घा पादौ जनार्दनः ॥१८॥

मुखं बाहू प्रवाहू च मनः सर्वेन्द्रियाणि च।

रक्षत्वव्याहतैश्वर्यस्तव नारायणोऽव्ययः ॥१९॥

शार्ङ्ग-चक्र-गदा-खड्ग-शङ्खनादहताः क्षयम्।

गच्छन्तु प्रेत-कूष्माण्ड-राक्षसा ये तवाहिताः ॥२०॥

त्वां पातु दिक्षु वैकुण्ठो विदिक्षु मधुसूदनः।

हृषीकेशोऽम्बरे भूमौ रक्षतु त्वां महीधर : ॥२१॥

पराशर उवाच

एवं कृतस्वस्त्ययनो नन्दगोपेन बालकः।

शायितः शकटस्याधो बालपर्य्यङ्किकातले ॥२२॥

ते च गोपा महद् दृष्ट्वा पूतनायाः कलेवरम्।

मृतायाः परमं त्रासं विस्मयं च परं ययुः ॥२३॥

तिम्रा शिरको, श्रीकेशवले तिम्रा घाँटीको, श्रीविष्णुले तिम्रा गुह्य (छिपाउन योग्य वा छिपेको) एवं पेटको तथा श्रीजनार्दनले तिम्रा जाँघ र चरणहरूको सधैं रक्षा गरिदिनुहोस् ॥१८॥ *अविनाशी एवं अखण्डित ऐश्वर्यबाट* सम्पन्न हुनुभएका भगवान् श्रीनारायणले तिम्रो मुख, हात, घुँडाभन्दा तलको भाग, मन तथा सबै इन्द्रियहरूको रक्षा गरिदिनुहोस् ॥१९॥ जुन तिम्रो अनिष्ट गराउने यी सबै प्रेत, कूष्माण्ड (अर्थात् शिवको एउटा गण) एवं राक्षसहरू भगवान् श्रीविष्णुको शार्ङ्ग धनुष, चक्र, गदा, तरबार (खड्ग) र शङ्खको ध्वनिबाट अत्यन्त भयभीत भएर विनष्ट होउन् ॥२०॥ भगवान् श्रीवैकुण्ठले सबै दिशाहरूमा, श्रीमधुसूदनले विदिशाहरू अर्थात् कोणहरूमा, श्रीहृषिकेशले आकाशमा तथा पृथ्वीलाई धारण गर्ने श्रीशेषनारायणले पृथ्वीमा तिम्रो रक्षा गरिदिनुहोस् ॥२१॥ **पराशरजीले भन्नुभयो** - यस किसिमले स्वस्तिवाचन गरिसकेपछि नन्दजीले बालक श्रीकृष्णलाई गोरुगाडाको मुन्तिर खाटमा सुताइदिए ॥२२॥ ती सबै गोपगोपीहरू मरिसकेकी पूतनाको अत्यन्त भयानक शरीरलाई देखेर अत्यन्त भयभीत हुनुका साथै आश्चर्यचकित भए ॥२३॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे पञ्चमोऽध्यायः।



## षष्ठोऽध्यायः

## अध्याय – ६

### "शकटभञ्जनम्, बलदेवकृष्णयोर्नामकरणञ्च"

(गोरुगाडा टुक्रा–टुक्रा तथा बलराम र श्रीकृष्णको नामकरण)

पराशर उवाचः

कदाचिच्छकटाधस्ताच्छयानो मधुसूदन : ।

चिक्षेप चरणावूर्ध्वं स्तन्यार्थी प्ररुरोद च ॥१॥

तस्य पादप्रहारेण शकटं परिवर्तितम् ।

विध्वस्तकुम्भभाण्डं वै विपरीतं पपात च ॥२॥

ततो हहाकृतं सर्वो गोपगोपीजनो द्विज ।

आजगामाथ ददृशे बालमुत्तानशायिनम् ॥३॥

गोपाः केनेति केनेदं शकटं परिवर्तितम् ।

तत्रैव बालकाः प्रोचुर्बालेनानेन पातितम् ॥४॥

रुदता दृष्टमस्माभिः पादविक्षेपताडितम् ।

शकटं परिवृत्तं वै नैतदन्यस्य चेष्टितम् ॥५॥

ततः पुनरतीवासन्गोपा विस्मितचेतस : ।

नन्दगोपोऽपि जग्राह बालमत्यन्तविस्मित : ॥६॥

यशोदा शकटारूढभग्नभाण्डकपालिकाः ।

शकटं चार्चयामास दधिपुष्पफलाक्षतै : ॥७॥

गर्गश्च गोकुले तत्र वसुदेवप्रणोदितः ।

प्रच्छन्न एव गोपानां संस्कारानकरोत्तयो : ॥८॥

**पराशरजीले भन्नुभयो** – एकदिन गोरुगाडाको मुन्तिर सुताइनुभएका परब्रह्म परमात्मा श्रीमधुसूदन माताको दूध पिउने चाहना भएकाले आफ्ना दुवै चरणहरू माथितिर फ्याँक्दै रुन थाल्नुभयो ॥१॥ उहाँका चरणहरूको प्रहारले गर्दा त्यो गोरुगाडा ठीक विपरीत दिशातिर घुम्यो तथा त्यसमाथि राखिएका माटाका विभिन्न किसिमका भाँडाहरू सबै फुटेर चकनाचुर भए अर्थात् पूर्ण रूपमा नष्ट भए ॥२॥ हे ब्राह्मणश्रेष्ठ! त्यसपछि त्यस समयमा गोप र गोपीहरू अत्यन्त भयभीत भएर हाहाकार गर्दै आएर हेर्दा बालक कृष्ण उत्तानो परेर सुतिरहनु भएको देखे ॥३॥ त्यस समयमा उनीहरूले यो गाडा कसले यतातिर फर्काएको हो, यसरी पटक–पटक जिज्ञासा व्यक्त गरे। त्यसपछि त्यही नजिकै खेलिरहेका बालकहरूले भने– यो गाडालाई यही सुतिरहेको बालकले विपरीत दिशातिर फर्काएको हो ॥४॥ यो बालक श्रीकृष्णले रूँदारूँदै यसको खुट्टाले लागेका कारणले यो गाडा घुमेर उल्टो भएको हामीहरूले आफ्नै आँखाले देखेका हौं । यो अन्य कसैले पनि गरेको होइन ॥५॥ ती बालकहरूको यस प्रकारको कुरा सुनेपछि, गोपगोपीहरू पूर्ण रूपमा आश्चर्यचकित भए तथा नन्दगोपालले आश्चर्यभित्र रुमल्लिँदै बालकरूपी श्रीकृष्णलाई उठाएर आफ्नो छातीमा लगाए ॥६॥ त्यसपश्चात् देवी यशोदाले गाडीमा राखिएका विभिन्न किसिमका भाँडाहरूका टुक्राटुक्रीहरूको र त्यस गाडीको दही, अक्षता, फूल र फल आदिले विधिपूर्वक पूजाआजा गरिन् ॥७॥ यसै समयमा वसुदेवको अनुरोध अनुसार गर्ग ऋषिले गोकुलमा आएर कसैले थाहा नपाउने गरी अर्थात् अत्यन्त गोपनीय किसिमबाट ती दुवै बालकहरूको ब्राह्मणोचित संस्कार गरिदिए ॥८॥ ज्ञानीहरूमा

ज्येष्ठञ्च राममित्याह कृष्णञ्चैव तथापरम् ।

गर्गो मतिमतां श्रेष्ठो नाम कुर्वन्नमहामतिः ॥९॥

स्वल्पेनैव हि कालेन रिङ्गिणौ तौ तदा व्रजे ।

घृष्टजानुकरौ तौ हि बभूवतुरुभावपि ॥१०॥

करीषभस्मदिग्धाङ्गौ भ्रममाणावितस्ततः ।

न निवारयितुं शेके यशोदा न च रोहिणी ॥११॥

गोवाटमध्ये क्रीडन्तौ वत्सवाटं गतौ पुनः ।

तदहर्जातगोवत्सपुच्छाकर्षणतत्परौ ॥१२॥

यदा यशोदा तौ बालावेकस्थानचरावुभौ ।

शशाक नो वारयितुं क्रीडन्तावतिचञ्चलौ ॥१३ ॥

यशोदा यष्टिमादाय कोपेनानुगता च तम् ।

कृष्णं कमलपत्राक्षं तर्जयन्ती रुषा तदा ॥१४॥

डाम्ना बद्ध्वा तदा मध्ये बबन्ध तमुलूखले ।

कृष्णमक्लिष्टकर्माणमाह चेदममर्षिता ॥१५॥

यदि शक्नोषि गच्छ त्वमतिचञ्चलचेष्टित ।

इत्युक्त्वा च निजं कर्म सा चकार कुटुम्बिनी ॥१६॥

व्यग्रायामथ तस्यां स कर्षमाण उलूखलम् ।

यमलार्जुनमध्येन जगाम कमलेक्षण : ॥१७॥

कर्षता वृक्षयोर्मध्ये तिर्यग्प्रातमुलूखलम् ।

भग्नावुत्तुङ्गशाखाग्रौ तेन तौ यमलार्जुनौ ॥१८॥

सर्वोत्तम महाबुद्धिसम्पन्न गर्ग ऋषिले ती बालकहरूको संस्कार कर्म गर्दाका अवस्थामा जेठाको नाम राम र कान्छाको नाम कृष्ण राखिदिनुभयो ॥९॥ यसपछि थोरै समय बितेपछि यी दुवै बालकहरू हात र घुँडा टेकेर कहिले गाईको गोठतिर कहिले कता यसरी व्रजको यताउता घुम्न थाले ॥१०॥ जुन समयमा ती दुवै बालकहरू सम्पूर्ण शरीरमा गोबर र खरानी दलेर यताउता घुमिरहेका हुन्थे, त्यस समयमा यशोदा अथवा रोहिणी कसैले पनि उनीहरूलाई रोक्न सक्दैनथे ॥ ११ ॥ ती दुवै बालकहरू कहिले गोपीहरूका घर-घरमा जान्थे भने कहिले गाईको गोठमा खेल्दथे तथा कहिले त्यसै समयमा मात्र जन्मिएको गाईको बाच्छाको पुच्छर समाएर अत्यन्त प्रसन्न हुँदै बालक्रीडा गर्दथे ॥१२॥ एक दिन जब यशोदा सँगसँगै अत्यन्त आनन्दपूर्वक खेलिरहेका अति नै चञ्चल स्वभाव भएका ती दुवै बालकहरूलाई आफ्नो नियन्त्रणमा राख्न पूर्ण रूपमा असफल भइन्, त्यसपछि अत्यधिक मात्रामा क्रोधित हुँदै हातमा लौरो लिएर कमलनयन परब्रह्म परमात्मा भगवान् श्रीकृष्णका नजिकमा गएर उहाँलाई गाली गर्दै एउटा डोरीले एकातिरबाट भगवान् श्रीकृष्णको कम्मरमा र अर्कोतिरबाट ओखलमा बाँधेर राखिन् एवम् सधैं उपकारयुक्त कार्य मात्र गर्नुहुने भगवान् श्रीकृष्णसँग क्रोधपूर्ण भावमा भन्न थालिन् ...॥१३–१५॥ "हे अत्यन्त चञ्चल बालक! अब पनि तिमीमा शक्ति रहेको छ भने यहाँबाट अन्यत्र गएर देखाउ ।" यसो भनर ती यशोदा आफ्नो घरभित्रको कार्यमा अत्यन्त व्यस्त भइन् अर्थात् एकाग्रतापूर्वक घरको काम गर्न थालिन् ॥१६॥ जब यशोदा घरको कार्यमा अत्यन्त व्यस्त भएर लागिन् त्यसपछि कमलनयन भगवान् श्रीकृष्ण त्यो ओखललाई तान्दै दुईओटा यमलार्जुन (कुबेरका दुई छोराको नाम, नारदको श्रापले गोकुलमा अर्जुन वृक्ष भएका यिनलाई श्रीकृष्णले उद्धार गर्नुभयो) रूखहरूका बीचबाट अगाडि जानुभयो ॥१७॥ र, ती दुई रुखहरूका बीचमा जुवाजस्तो भएर अड्किएको ओखललाई पूर्ण बल लगाएर तान्दा अत्यन्त ठूल-ठूला हाँगा भएका ती दुवै अर्जुन वृक्षलाई पूर्ण रूपमा उखेलिदिनु भयो र ती रूखहरू जमीनमा लडे ॥१८॥ त्यसपछि व्रजवासीहरू

ततः कटकटाशब्दं समाकर्ण्य च कातरः।
आजगाम व्रजजनो ददर्श च महाद्रुमौ ॥१९॥
भग्नस्कन्धौ निपतितौ भग्नशाखौ महीतले।
नवोद्गताल्पदन्तांशु- सितहासञ्च बालकम् ॥२०॥
तयोर्मध्यगतं दाम्ना बद्धं गाढं तथोदरे।
ततश्च दामोदरतां स ययौ दामबन्धनात् ॥२१॥
गोपवृद्धास्ततः सर्वे नन्दगोपपुरोगमा ः।
मन्त्रयामासुरुद्विग्ना महोत्पातातिभीरव ः ॥२२ ॥
स्थानेनेह न नः कार्यं गच्छामोन्यन्महावनम्।
उत्पाता बहवो ह्यत्र दृश्यन्ते नाशहेतवः ॥२३॥
पूतनाया विनाशश्च शकटस्य विपर्ययः।
विना वातादिदोषेण द्रुमयोः पतनं तथा ॥ २४॥
वृन्दावनमितः स्थानात् तस्माद् गच्छाम मा चिरम्।
यावद्भौमहोत्पातदोषो नाभिभवेद् व्रजम् ॥२५॥
इति कृत्वा मतिं सर्वे गमने ते व्रजौकसः।
ऊचुः स्वं स्वं कुलं शीघ्रं गम्यतां मा विलम्ब्यताम्॥ २६ ॥
ततः क्षणेन प्रययुः शकटैर्गोधनैस्तथा।
यूथशो वत्सबालांश्च कालयन्तो व्रजौकसः ॥२७॥
द्रव्यावयवनिर्धूतं क्षणमात्रेण तत् तथा।
काककाकीसमीकीर्णं व्रजस्थानमभूद् द्विज ॥२८॥

ती अत्यन्त भयानक रूखहरू जमिनमा ढल्दा निस्किएको भयङ्कर कटकट आवाज सुनेर अत्यन्त भयभीत हुँदै त्यहाँ गएर लडेको फेद एवं हाँगाहरू सहित दुवै रूखहरूका बीच भागमा अवस्थित र डोरीले कम्मरमा अत्यन्त बलियोसँग बाँधिनुभएका बालकरुपी भगवान् श्रीकृष्णलाई मन्द मन्द हासिरहनुभएको देखे। डोरीले बाँधिनुभएका कारणले गर्दा त्यसै समयदेखि उहाँको नाम दामोदर भयो ॥१९-२१॥ यसपछि ठूला-ठूला उत्पात भएको देखेर अत्यन्त भयभीत भएका नन्दजी जस्ता वृद्ध गोपहरू अत्यधिक रूपमा व्याकुल भएर एक-आपसमा सरसल्लाह गर्न थाले ॥२२॥ अब हामीले यस स्थानमा बसिरहनुको कुनै अर्थ रहेको देखिदैन। यसप्रकार हामीले यस स्थानलाई पूर्ण रूपमा परित्याग गरिदिएर अन्य कुनै अत्यन्त महान् वनमा जानुपर्दछ ॥२३॥ किनकि यस स्थानमा विनाशको कारणस्वरूप पूतना विनाश, गाडी आफैं विपरीत दिशातिर घुम्नु तथा वातावरणमा कुनै किसिमको परिवर्तन नआई अर्थात् आँधी-बेहरी नचलेका अवस्थामा दुवै अर्जुन रूखहरू ढल्नु जस्ता अनेकौं किसिमका उत्पातहरू देखिइरहेका छन् ॥२४॥ त्यसकारण कुनै किसिमको ढिलाइ नगरिकन जबसम्म जमिनसँग सम्बन्ध राख्ने उत्पात ले व्रजलाई दबाउन छोड्दैन त्यसभन्दा पहिले नै यस स्थानलाई पूर्ण रूपमा परित्याग गरेर हामीले वृन्दावनमा जानुपर्दछ ॥२५॥ यसप्रकार सबै व्रजवासीहरूले गोकुललाई पूर्ण रूपमा परित्याग गरेर वृन्दावनमा जाने निश्चय गरिसकेपछि उनीहरूले आ-आफ्नो परिवारका सदस्यलाई भने - "चाडै हिड, ढिलाइ नगर।" ॥२६॥ त्यसपछि ती व्रजवासीहरूले अत्यन्त शीघ्रतापूर्वक आफ्ना गाडा र गाईहरू सहितको दल बनाएर गोवत्स अर्थात् बाच्छा र बालकहरूलाई लिँदै त्यहाँबाट वृन्दावनतिर प्रस्थान गरे ॥२७॥ हे ब्राह्मणश्रेष्ठ! त्यस समयमा द्रव्य अर्थात् रूखहरूको अवशिष्ट अर्थात् उब्रेपाब्रेको अंशबाट पूर्ण रूपमा सजिएर रहेको त्यो व्रजभूमि क्षणभरमा नै कागहरूबाट पूर्ण रूपमा भरियो अर्थात् ढाकियो ॥२८॥ त्यसपछि लीलानायक परब्रह्म परमात्मा श्रीकृष्णले

वृन्दावनं भगवता कृष्णेनाक्लिष्टकर्मणा ।
शुभेन मनसा ध्यातं गवां वृद्धिमभीप्सता ॥२९॥

ततस्तत्रातिरूक्षेऽपि धर्मकाले द्विजोत्तम ।
प्रावृट्काल इवोद्भूतं नव शष्पं समन्ततः ॥ ३० ॥

स समावासितः सर्वो व्रजो वृन्दावने ततः ।
सकटीवाटपर्यन्तश्चन्द्रार्द्धाकारसंस्थितिः ॥ ३१ ॥

वत्सपालौ च संवृत्तौ रामदामोदरौ ततः ।
एकस्थानस्थितौ गोष्ठे चेरतुर्बाललीलया ॥३२॥

बर्हिपत्रकृतापीडौ वन्यपुष्पावतंसकौ ।
गोपवेणुकृतातोद्यपत्रवाद्यकृतस्वनौ ॥ ३३ ॥

काकपक्षधरौ बालौ कुमाराविव पावकौ ।
हसन्तौ च रमन्तौ च चेरतुस्तौ महावने ॥ ३४ ॥

क्वचिद्धसन्तावन्योन्यं क्रीडमानौ तथापरैः ।
गोपपुत्रैः समं वत्सांश्चारयन्तौ विचेरतुः ॥३५॥

कालेन गच्छता तौ तु सप्तवर्षौ महाव्रजे ।
सर्वस्य जगतः पालौ वत्सपालौ बभूवतुः ॥३६॥

गाईहरूको पूर्ण रूपमा अभिवृद्धि गराउने आफ्नो चाहना अनुसार अत्यन्त शुद्ध चित्तबाट वृन्दावनको चिन्तन गर्नुभयो ॥२९॥ हे ब्राह्मणश्रेष्ठ! यसपछि चारैतिर ग्रीष्मऋतुको समयमा अत्यन्त रूखो रहेको वृन्दावन वर्षाऋतुकालमा जसरी प्रकृतिको सुन्दर छटाका साथै हरियो घाँसपात आदिबाट पूर्ण रूपमा सम्पन्न भएको देखिन थाल्यो ॥३०॥ त्यसपछि सम्पूर्ण वृन्दावनलाई चारैतिरबाट अर्धचन्द्राकार रूपमा गोरुगाडाहरूको घेरा लगाएर अवस्थित भएका व्रजवासिहरू वृन्दावनमा बस्न थाले ॥३१॥ त्यसपछि राम र दामोदर अर्थात् परब्रह्म परमात्मा भगवान् श्रीकृष्ण बाच्छाहरूको रक्षक भएर एकै ठाउँमा बसेर बालक्रीडा गर्दै गोठको मध्यभागमा अर्थात् बीचमा घुमफिर गर्न थाल्नुभयो ॥३२॥ महापराक्रमी शेषका अंशावतार राम र परब्रह्म परमात्मा श्रीकृष्ण शिरमा मयूरका पुच्छरको कल्की र कानमा नवीन पुष्प अर्थात् फूल धारण गरेर गोपीहरूका बीचमा वेणुद्वारा मृदङ्ग (अर्थात् कम्मरमा भुण्ड्याएर दुई हातले दुईतिर ठोकेर डोलो छाँटको पेट ठूलो भएको र मुख सानो दुवै मुखमा छालाले मोडेको बाजाविशेष/मृदङ्ग माटाको बनाएको हुन्छ ।) को बाजा एवं पत्रमय वाद्ययन्त्रद्वारा विभिन्न प्रकारका ध्वनि निकाल्दै काकपक्ष (अर्थात् कपालको पट्टा, जुन पुरानो जमानामा दुवै कानमाथि लगाइन्थ्यो) धारण गरेर स्कन्ध (अर्थात् रूखहरूको त्यो माथिल्लो भाग, जसबाट हाँगाहरू फैलिन्छन्) को अंशस्वरूप हाँगाहरूमा कुमारहरूसँग हाँस्दै र खेल्दै त्यो महावनमा घुमफिर गर्न थाल्नुभयो ॥३३–३४॥ कहिले एकले अर्कालाई आफ्नो पिठ्यूँमा बोकेर बालक्रीडा गनुहुन्थ्यो तथा कहिले अन्य गोपकुमारहरूसँग खेल्दै बाच्छाहरू चराउँदै एकसाथ घुमफिर गर्नुहुन्थ्यो ॥३५॥ यस प्रकार त्यो महाव्रजमा बस्ताबस्तै केही समय बितेपछि उहाँ सम्पूर्ण लोकहरूको पालनकर्ता परमात्मा श्रीकृष्ण सात वर्षको हुनुभयो ॥३६॥ त्यस समयमा मेघहरू अर्थात् बादलहरूबाट आकाश पूर्ण रूपमा ढाकियो तथा

प्रावृट्कालस्ततोऽतीव मेघौघस्थगिताम्बरः ।
बभूव वारिधाराभिरैक्यं कुर्वन् दिशामिव ॥३७॥

प्ररूढनवशष्पाढ्या शक्रगोपाचितामही ।
तदामारकतीवासीत् पद्मरागविभूषिता ॥३८॥

जग्मुरुन्मार्गवाहीनि निम्नगाम्भांसि सर्वत ः ।
मनांसि दुर्विनीतानां प्राप्य लक्ष्मीं नवामिव ॥३९॥

न रेजेऽन्तरितश्चन्द्रो निर्मलो मलिनैर्घनैः ।
सद्वादिवादो मूर्खाणां प्रगल्भाभिरिवोक्तिभिः ॥४०॥

निर्गुणेनापि चापेन शक्रस्य गगने पदम् ।
अवाप्यताविवेकस्य नृपस्येव परिग्रहे ॥ ४१॥

मेघपृष्ठे बलाकानां रराज विमला ततिः ।
दुर्वृत्ते वृत्तचेष्टेव कुलीनस्यातिशोभना ॥४२॥

न बबन्धाम्बरे स्थैर्यं विद्युदत्यन्तचञ्चला ।
मैत्रीव प्रवरे पुंसि दुर्जनेन प्रयोजिता ॥४३॥

मार्गा बभूवुरस्पष्य नवशस्यचयावृताः ।
अर्थान्तरमनुप्राप्ताः प्रजड्नामिवोक्तयः ॥४४॥

उन्मत्तशिखिसारङ्गे तस्मिन् काले महावने ।
कृष्णरामौ मुदा युक्तौ गोपालैश्चेतरतुसह ॥४५॥

क्वचिद् गोपैः समं रम्यं गेयनृत्यरतावुभौ ।
चेरतुः क्वचिदत्यर्थं शीतवृक्षतलाश्रितौ ॥४६॥

अत्यन्त ठूलो अर्थात् मुसलधारे पानी परेकाले दिशाहरू छुट्याउन पनि अत्यन्त कठिन भयो अर्थात् अत्यधिक मात्रामा वर्षा भयो ॥३७॥ त्यस समयमा हरियो दुवो अत्यन्त बढेकाले र इन्द्रगोपबाट पूर्ण रूपमा व्याप्त भएको पृथ्वी त्यस समयमा पद्मरागमणि अर्थात् माणिकबाट विभूषित मरकतमणि अर्थात् पन्ना जस्तै देखिन थाल्यो ॥३८॥ जसरी अत्यधिक मात्रामा धनको प्राप्ति भएपछि दुष्ट पुरुषहरूको चित्त अत्यन्त उच्छृङ्खल भएको हुन्छ, त्यसरी नै नदीहरूको पानी पनि आफ्नो यथार्थ बाटोलाई छाडेर जताततै बग्न थाल्यो ॥३९॥ जसरी मूर्खहरूको धृष्टतापूर्ण अर्थात् यथार्थ रूपमा घमण्डले व्याप्त भएको वचनका अगाडि विद्वान्को अत्यन्त सुन्दर वचनको अस्तित्व रहन सक्दैन, त्यसरी नै अत्यन्त निर्मल चन्द्रमा अत्यन्त कालो वर्ण भएका बादलहरूबाट पूर्ण रूपमा ढाकिएर अस्तित्वविहीन भए ॥४०॥ जसरी अविवेकी राजाको राजसभामा गुणहीन पुरुषको पनि प्रतिष्ठा रहन्छ अर्थात् उसले सम्मान पाउँछ, त्यसरी नै आकाशमण्डलमा वास्तविक इन्द्र धनुषको ठाउँ गुणहीन इन्द्रधनुषले लियो ॥४१॥ अत्यन्त दुराचारी पुरुषहरूका बीचमा कुलीन व्यक्तिको निष्कपट सुन्दर चेष्टा जस्तै मेघमण्डलमा वकुल्लाको पङ्क्ति सुशोभित भइरहेको थियो ॥४२॥ सज्जन पुरुषहरूसँग गासिएको दुर्जन दुराचारी पुरुषहरूको क्षणिक मित्रता जस्तै अत्यन्त चञ्चल विद्युत् आकाशमण्डलमा स्थिर भएर रहन सकिरहेको थिएन ॥४३॥ महामूर्ख मनुष्यहरूका दोहोरो अर्थ लाग्ने किसिमका युक्तिहरू जस्तै मार्ग पनि तृण र दुवोहरूको समूहबाट पूर्ण रूपमा ढाकिएर अस्पष्ट भएको थियो अर्थात् स्पष्ट रूपमा बाटो देख्न सकिँदैनथ्यो ॥४४॥ त्यस समयमा अत्यन्त उन्मत्त भएका मयूर एवम् मृग–विशेषद्वारा अत्यन्त सुशोभित भएको त्यो महावनमा परमात्मा श्रीकृष्ण र रामहरूसँग गोपकुमारहरू अत्यन्त प्रसन्नतापूर्वक घुमफिर गर्न थाले ॥४५॥ उहाँहरू दुवै कुनै समयमा गोपकुमारहरूसँग रमणीय गीत र नृत्यमा तल्लीन रहनुहुन्थ्यो भने कहिले अत्यन्त शीतलदायक रूखका आश्रयमा दुवैले घुमफिर गर्नुहुन्थ्यो ॥४६॥ उहाँहरू

क्वचित् कदम्बस्रक्चित्रौ मयूरस्रग्धरौ क्वचित्।
विचित्रौ क्वचिदासातां विविधैर्गिरिधातुभिः ॥४७॥
पर्णशयासु संसुप्तौ क्वचिन्निद्रान्तरैषिणौ।
क्वचिद् गर्जति जीमूते हाहाकाररवाकुलौ ॥४८॥
गायतामन्यगोपानां प्रशंसापरमौ क्वचित्।
मयूरकेकानुगतौ गोपवेणुप्रवादकौ ॥४९॥
इति नानाविधैर्भावैरुत्तमप्रीतिसंयुतौ।
क्रीडासक्तौ वने तस्मिन् चेरतुः प्रीतमानसौ ॥५०॥
विकाले तु समं गोभिर्गोपवृन्दसमन्वितौ।
आजग्मतुः कृष्णबलौ गोपवंशधरावुभौ ॥५१॥
विकाले च यथाजोषं व्रजमेत्य महाबलौ।
गौपैः समानैः सहितौ चिक्रीडातेऽमराविव ॥५२॥

कहिले कदमका फूलको माला, कहिले मयूरको प्वाँख र विभिन्न किसिमका धातुहरूको रङ्गबाट विभूषित भएर अनौठो किसिमको स्वरूप बनाएर विराजमान हुनुभएको थियो ॥४७॥ कहिले निदाउने मनसायले पत्करको ओछ्यान बनाएर सुत्नुहुन्थ्यो। कहिले उहाँहरू दुवैले मेघ गर्जिएको आवाज सुनेर हाहाकार गर्नुहुन्थ्यो ॥४८॥ कहिले गोपकुमारहरूले गीत गाउँदा उहाँहरू दुवैले त्यसको प्रशंसा गर्नुहुन्थ्यो र कहिले गोपकुमारहरूका जसरी नै बाँसुरी बजाउँदै मयूरको आवाजको अनुकरण गर्न थाल्नुहुन्थ्यो ॥४९॥ यसप्रकार उहाँहरू दुवै अत्यन्त सौहार्दपूर्ण वातावरणमा प्रसन्नतापूर्वक विभिन्न किसिमका भावहरूबाट एक-आपसमा खेल्दै प्रसन्न चित्तले त्यस वनमा घुमफिर गर्न थाल्नुभयो ॥५०॥ जब साँझ पर्दथ्यो, त्यस समयमा गाईहरू र गोपकुमारहरू सहित गोपहरूको भेषभूषा धारण गर्नुभएका राम र परमात्मा श्रीकृष्ण फर्किएर आफ्नो निवासस्थानमा आउनुहुन्थ्यो ॥५१॥ साँझपख व्रजमा आएर आफ्ना दौंतरी अर्थात् आफ्नो उमेरसँग उमेर मिल्दाजुल्दा गोपकुमारहरूसँग मिलेर अत्यन्त पराक्रमशाली राम र साक्षात् परमात्मा श्रीकृष्ण देवताहरूको जस्तै क्रीडा गर्न थाल्नुहुन्थ्यो ॥५२॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे षष्ठोध्यायः।

ॐ

## सप्तमोऽध्यायः अध्याय – ७

### "कालियदमनम्"
(कालियनागको दमन)

पराशर उवाच

एकदा तु विना रामं कृष्णो वृन्दावनं ययौ।
विचचार वृतो गोपैर्वन्यपुष्पस्रगुज्ज्वलः ॥१॥
स जगामाथ कालिन्दीं लोलकल्लोलशालिनीम्।
तीरसंलग्नफेनौघैर्हसन्तीमिव सर्वत ः ॥२॥
तस्यां चातिमहाभीमं विषाग्निश्रितवारिणम्।
ह्रदं कालियनागस्य ददृशेऽतीव भीषणम् ॥३॥
विषाग्निना विसरता दग्धतीरमहातरुम्।
वाताहताम्बुविक्षेप–स्पर्शदग्धविहङ्गमम् ॥४॥
तमतीव महारौद्रं मृत्युवक्त्रमिवापरम्।
विलोक्य चिन्तयामास भगवान् मधुसूदनः ॥५॥
अस्मिन् वसति दुष्टात्मा कालियोऽसौ विषायुधः।
यो मया निर्जितस्त्यक्त्वा दुष्ये नष्टः पयोनिधिम् ॥६॥
तेनेयं दूषिता सर्वा यमुना सागरङ्गमा।
न गोपैर्गोधनैर्वापि तृष्णार्तैरुपयुज्यते ॥७॥
तदस्य नागराजस्य कर्तव्यो निग्रहो मया।
निस्त्रासास्तु सुखं येन चरेयुर्व्रजवासिन ः ॥८॥

**पराशरजीले भन्नुभयो–** एक दिन परमात्मा श्रीकृष्ण वृन्दावनमा जानुभयो र त्यहाँ जङ्गली फूलको मालाबाट सुशोभित भएर गोपकुमारका घेरामा रहँदा उहाँले चिन्तन गर्नुभयो ॥१॥ यसरी विचार गर्दा–गर्दै उहाँ अत्यन्त चञ्चल तरङ्गहरूबाट पूर्ण रूपले सुशोभायमान भएकी यमुनाजीका किनारमा पुग्नुभयो र त्यहाँ उहाँले किनारमा जम्मा भएको फिँजका माध्यमद्वारा यमुनाजी हाँसिरहेकी देख्नुभयो ॥२॥ त्यसपछि उहाँले विषाग्निका प्रभावले जसको जल अत्यन्त प्रताडित अर्थात् पीडित भइरहेको छ, त्यस्ती यमुनाजीमा कालियनागको अत्यन्त भयानक विषकुण्ड देख्नुभयो ॥३॥ त्यसको ह्रदयबाट निस्किएको विषाग्निको अर्थात् विषरूपी अग्निको प्रभावले यमुनाजीको किनारमा रहेका रूख, विरुवाहरू जलेर भष्म भएका थिए र हावाको झोंकाका प्रभावले माथितिर उछिट्टिएका जलका थोपाको स्पर्शले आकाशमार्गमा आवागमन गर्ने पंक्षीहरू पनि जलेर भष्म भइरहेका थिए ॥४॥ अद्वितीय मृत्युको मुखका समान रहेको त्यो विषकुण्डलाई देखेपछि भगवान् श्रीमधुसूदनले मनमनै विचार गर्न थाल्नुभयो ... ॥५॥ यो दुष्टात्मा मेरो विभूति गरुडद्वारा पराजित भएर तथा समुद्रलाई पूर्ण रूपमा परित्याग गरेर भागेर यहाँ आएको छ र विष नै जसको अत्यन्त महत्त्वपूर्ण हतियार (अस्त्र) रहेको छ, त्यही कालियनाग यहाँ आएर बसेको छ ॥६॥ यसले सागरमा गएर मिसिने यमुनाजीलाई पनि दूषित पारिरहेको छ। गाईहरू तथा गोपहरूले अत्यन्त तिर्खाएका अवस्थामा यी यमुनाजीको जल पिउन सक्दैनन् ॥७॥ त्यसकारण अब मैले यो नागराजलाई दमन गर्नुपर्दछ अर्थात् जस्तोसुकै अवस्थामा पनि यी यमुना नदीलाई पवित्र बनाउनु पर्दछ; जसले गर्दा व्रजवासीहरूले पूर्ण रूपमा निर्भय भएर सुखपूर्वक यो नदीको उपभोग गर्न सक्ने अवस्था सृजना होस् ॥८॥ यी सबै कुमार्गमा लागेका दुरात्माहरूलाई

एतदर्थं नृलोकेऽस्मिन्नवतारो मया कृतः ।

यदेषामुत्पथस्थानां कार्या शास्तिर्दुरात्मनाम् ॥९॥

यदेनं नातिदूरस्थं कदम्बमुरुशाखिनम् ।

अधिरुह्योत्पतिष्यामि ह्रदेऽस्मिन्ननिलाशिनः ॥१०॥

पराशर उवाच

इत्थं विचिन्त्य बद्ध्वा च गाढं परिकरं ततः ।

निपपात ह्रदे तत्र सर्पराजस्य वेगितः ॥११॥

तेनापि पतता यत्र क्षोभितः स महाह्रद ः ।

अत्यर्थं दूरजातांस्तु समसिञ्चन्महीरुहान् ॥१२॥

ते हि दुष्टविषज्वालातप्ताम्बुपवनोक्षिताः ।

जज्वलुः पादपाः सद्यो ज्वालाव्याप्तदिगन्तराः ॥१३॥

आस्फोटयामास तदा कृष्णो नागह्रदे भुजम् ।

तच्छब्दश्रवणाच्चाशु नागराजोऽप्युपागमत् ॥१४॥

आताम्रनयनो दुष्ट–विषज्वालाकुलैर्मुखैः ।

वृतो महाविषैश्चान्यैरुरगैरनिलाशिभिः ॥१५॥

नागपत्न्यश्च शतशो हारिहारोपशोभिता ः ।

प्रकम्पितनुक्षेपचलत्कुण्डलकान्तयः ॥१६॥

ततः प्रवेष्टितः सर्पैः स कृष्णो भोगबन्धनैः ।

ददंशुश्चापि ते कृष्णं विषज्वालाकुलैर्मुखैः ॥१७॥

मैले पूर्ण रूपमा शान्त गराउनु पर्दछ। यस्तै किसिमका कार्यहरू सम्पन्न गर्नका लागि मैले पृथ्वीमा अवतार लिएको हुँ ॥९॥ "त्यसकारण अब म यमुनाजीका नजिकमा रहेको यस कदमका रूखको सर्वोत्कृष्ट हाँगामा चढेर यस वायुलाई आफ्नो भोजना बनाउने नागराजको विषकुण्डमा हाम फाल्दछु अर्थात् त्यसमा प्रवेश गर्दछु " ॥१०॥ **पराशरजीले भन्नुभयो** – यस प्रकारको चिन्तन गरेर भगवान् श्रीकृष्ण आफ्नो कम्मरमा कपडाले अत्यन्त बलियोसँग बाँधेर अत्यन्त वेगपूर्वक सर्पराजको त्यो विषकुण्डमा हाम फाल्नुभयो ॥११॥ भगवान श्रीकृष्णले त्यो विषकुण्डमा हामफालेपछि त्यसबाट उछिट्टिएको पानीले टाढा–टाढाका रूखहरूलाई पनि पूर्ण रूपमा भिजाइदियो ॥१२॥ त्यो सर्पको अत्यन्त जहरिलो विषको ज्वालाबाट अत्यन्त उग्र रूपमा तातेको पानीले भिजेका कारणले गर्दा ती रूखहरू तत्कालै जलेर भष्म भए र तिनीहरूको ज्वाला सबै दिशाहरूमा पूर्ण रूपमा व्याप्त भएर फैलियो ॥१३॥ त्यसछि परब्रह्म परमात्मा श्रीकृष्णले आफ्नो अत्यन्त शक्तिशाली हातले नागराजको विषकुण्डमा हिर्काउन थाल्नुभयो। त्यसरी हिर्काएको आवाज सुनेर नागराज कालिय अत्यन्त शीघ्रतापूर्वक आफ्नो विषकुण्ड भएको स्थानमा आइपुगे ॥१४॥ अत्यन्त क्रोधित भएका कारणले गर्दा नागराजका आँखा पूर्ण रूपमा राता भएका थिए एवं उनको मुखबाट विषरूपी अग्निको ज्वाला निस्किरहेको थियो एवं उनी अत्यन्त विषशाली र वायुलाई आफ्नो भोजन बनाउने अन्य नागराजहरूबाट घेरिएर रहेका थिए ॥१५॥ ती नागराजसँग अत्यन्त मनमोहक हारहरूबाट शोभायमान भएका र शरीरको लचकताका प्रभावले अत्यन्त चलायमान कुण्डल एवम् केशराशीबाट सुशोभित भएका कारणले गर्दा अत्यधिक मात्रामा सुन्दर देखिएका नागपत्नीहरू पनि त्यहाँ आए ॥१६॥ त्यसपछि कुण्डलाकार भएर परमात्मा श्रीकृष्णलाई आफ्नो शरीरद्वारा बन्धनमा पारेर नागराजले अत्यन्त तेजिलो विषज्वालाले सम्पन्न भएको मुखले उहाँलाई टोक्न थाले ॥१७॥ त्यसपछि गोपकुमारहरू परमात्मा

तं तत्र पतितं दृष्ट्वा सर्पभोगनिपीडितम् ।

गोपा व्रजमुपागम्य चुक्रुशुः शोकलालसाः ॥१८॥

गोपा ऊचुः

एष मोहं गतः कृष्णो मग्नो वै कालियह्रदे ।

भक्ष्यते सर्पराजेन तदागच्छत पश्यत ॥१९॥

तच्छ्रुत्वा ते तदा गोपा वज्रपातोपमं वचः

गोप्यश्च त्वरिता जग्मुर्यशोदाप्रमुखा ह्रदम् ॥२०॥

हा हा क्वासाविति जनो गोपीनामतिविह्वलः ।

यशोदया सह भ्रान्तो द्रुतं प्रस्खलितं ययौ ॥२१॥

नन्दगोपश्च गोपाश्च रामश्चाद्भुतविक्रमः ।

त्वरितं यमुनां जग्मुः कृष्णदर्शनलालसाः ॥२२॥

ददृशुश्चापि ते तत्र सर्पराजवशं गतम् ।

निष्प्रयत्नीकृतं कृष्णं सर्पभोगन वेष्टितम् ॥२३॥

नन्दगोपश्च निश्चेष्टो न्यस्य पुत्रमुखे दृशौ ।

यशोदा च महाभागा बभूव मुनिसत्तम ॥२४॥

गोप्यस्त्वन्या रुदन्त्यश्च ददृशुः शोककातराः ।

प्रोचुश्च केशवं प्रीत्या भयकातर्यगद्गदम् ॥२५॥

गोप्य ऊचुः

सर्वा यशोदया सार्द्धं विशामोऽत्र महाह्रदे ।

नागराजस्य नो गन्तुमस्माकं युज्यते व्रजे ॥२६॥

दिवसः को विना सूर्यः विना चन्द्रेण का निशा ।

विना वृषेण का गावो विना कृष्णेन को व्रजः ॥२७॥

श्रीकृष्णलाई नागराजको विषकुण्डमा खस्नु भएको र सर्पहरूको टोकाइबाट अत्यन्त पीडित हुनुभएको देखेपछि व्रजमा गए एवं शोकले अत्यन्त व्याकुल भएर रुँदै भन्न थाले ... ॥१८॥ **गोपकुमारहरू भने**– आउनुहोस् ! आउनुहोस् ! हेर्नुहोस् ! यी कृष्ण कालिय नागको विषकुण्डमा मूर्च्छित भएर लडिरहेका छन्, हेर्नुहोस् नागराजले यिनलाई टोकिरहेका छन्, त्यसकारण तपाईंहरू चाँडै आउनुहोस् ॥१९॥ वज्रपात भए जस्तै तिनीहरूका यी अत्यन्त अमङ्गलदायक वाक्यहरू सुनेपछि गोपहरू र यशोदा आदि गोपीहरू सबै अत्यन्त शीघ्रतापूर्वक कालियनागको विषकुण्ड भएको ठाउँमा आए ॥२०॥ अहो ! अहो ! यी कृष्ण कहाँ गए ? यस प्रकार अत्यन्त शीघ्रतापूर्वक लड्दै पड्दै त्यहाँ आइपुगे ॥२१॥ नन्दगोप तथा अन्य सबै गोपहरू र अत्यन्त अद्‌भुत पराक्रमबाट सम्पन्न बलरामजी पनि श्रीकृष्णको दर्शन गर्न अत्यन्त लालायित भएर शीघ्रतापूर्वक यमुना नदीको किनारमा आए ॥२२॥त्यहाँ आइसकेपछि उनीहरूले भगवान् श्रीकृष्णलाई सर्पहरूले पूर्ण रूपमा बेरेको एवम् सर्पकुण्डालाकारबाट ढाकिएर निश्चेष्ट अर्थात् पूर्ण रूपमा शान्त भएर रहनुभएको देखे ॥२३॥ हे मुनिश्रेष्ठ! अत्यन्त सौभाग्यवती यशोदा र नन्दगोप पनि आफ्नो पुत्र श्रीकृष्णको त्यस्तो अवस्था दखेपछि निश्चेष्ट भएर एककोहोरिएर उहाँका मुखमा मात्र हेरिरहन थाले ॥२४॥ अन्य गोपिनीहरू पनि परमात्मा श्रीकृष्णलाई यस अवस्थामा देखेपछि अत्यन्त व्याकुल एवं पीडित भएर रुन थाले र भयभीत तथा व्याकुलताका कारणले गद्‌गद्‌पूर्ण वचनद्वारा उहाँसँग भन्न थाले... ॥२५॥ **गोपिनीहरूले भने**– अब हामीहरू पनि यशोदासँगै यही सर्पराजको अत्यन्त भयानक विषकुण्डमा प्रवेश गर्दछौं । किनकि अब हामीले व्रजमा गएर निवास गर्नु उचित छैन ॥२६॥सूर्य नउदाएको दिनको के मूल्य? चन्द्रमाको प्रकाश नभएको रात्रिको के सौन्दर्य? गोरु नलागेको गाईको के महत्व? यसरी श्रीकृष्ण नै नभएपछि त्यो व्रजको के शोभा रहन्छ र? ॥२७॥ जसरी पानी नभएको

विनाकृता न यास्यामः कृष्णेनानेन गोकुलम्।
अरण्यं नापि सेव्यञ्च वारिहीनं यथा सरः ॥२८॥
यत्र नेन्दीवरदलप्रख्यकान्तिरयं हरिः।
तेनापि मातुर्वासेन रतिरस्तीति विस्मयः ॥२९॥
उत्फुल्लपङ्कजदलस्पष्टकान्तिविलोचनम्।
अपश्यन्तो हरिं दीनाः कथं गोष्ठे भविष्यभ ॥३०॥
अत्यन्तमधुरालापहृताशेषमनोधनाः।
न विना पुण्डरीकाक्षं यास्यामो नन्दगोकुलम् ॥३१॥
भोगेनावेष्टितस्यापि सर्पराजेन पश्यत।
स्मितशोभि मुखं गोप्यः कृष्णस्यास्मद्विलोकने ॥३२॥
पराशर उवाच
इति गोपीवचः श्रुत्वा रौहिणेयो महाबलः।
गोपांश्च त्रासविधुरान् विलोक्य स्तिमितेक्षणः ॥३३॥
नन्दञ्च दीनमत्यर्थं न्यस्तदृष्टिं सुतनने।
मूर्च्छाकुलां यशोदाञ्च कृष्णमाहात्मसंज्ञया ॥३४॥
किमिदं देवदेवेश ! भावोऽयं मानुषस्त्वया।
व्यज्यते ऽत्यन्तमात्मानं किमनन्तं न वेत्सि यत् ॥३५॥
त्वमस्य जगतो नाभिरराणमिव संश्रयः।
कर्तापहर्ता पाता च त्रैलोक्यस्य त्रयीमय ॥३६॥
सेन्द्ररुद्राश्विवसु भिरादित्यैर्मरुदग्निभिः।
चिन्त्यसे त्वमचिन्त्यात्मन् ! समस्तैश्चैव योगिभिः ॥३७॥

पोखरीको किनारामा कोही जाँदैन,त्यसरी नै श्रीकृष्ण नभएको गोकुल पनि हामीहरूका लागि निवास गर्न योग्य रहन सक्दैन ॥२८॥ जुन स्थानमा पूर्ण रूपमा फुलेको कमलका फूलको जस्तो कान्ति भएका परमात्मा श्रीहरिले निवास गर्नुभएको छैन, त्यस्तो मातृ घरमा पनि प्रेम हुनु अत्यन्त आश्चर्यजनक कुरा हो ॥२९॥ तिमीहरू पूर्ण रूपमा फुलेको कमलको फूल जस्तो कान्तिबाट सम्पन्न आँखाहरूबाट सुशोभित हुनुभएका श्रीहरिलाई नदेखेपछि गोठमा कसरी निवास गर्न सक्दछौ ? ॥३०॥ जसले आफ्नो अत्यन्त मनमोहक बोलीका माध्यमद्वारा हाम्रा सम्पूर्ण मनाकामनाहरूलाई आफ्नो नियन्त्रणमा लिनुभएको छ, उहाँ पुण्डरीकाक्ष भगवान् श्रीकृष्ण नभएपछि हामी नन्दजीको गोकुलमा जान पूर्ण रूपमा असमर्थ छौं अर्थात् जाँदैनौं ॥३१॥ हे गोपिनीहरू! हेर, पूर्ण रूपमा सर्पराजको फणाद्वारा बेरिएर रहनुभएको भएपनि हामीहरूलाई देखेर भगवान् श्रीकृष्णको अलिअलि हास्यपूर्ण मुखमा कस्तो शोभा फैलिरहेको छ ॥३२॥ **पराशरजीले भन्नुभयो** – गोपिनीहरूका यस प्रकारका वचन सुनेपछि तथा भयविह्वल आश्चर्यचकित आँखा भएका गोपहरूलाई, पुत्रका मुखमा एकोहोरो हेरेर अत्यन्त पीडित भएका नन्दजीलाई र मूर्च्छावस्थामा रहेकी देवी यशोदालाई देखेपछि अत्यन्त पराक्रमशाली रोहिणीका पुत्ररत्न बलरामजीले आफ्नो साङ्केतिक भाषामा परमात्मा श्रीकृष्णसँग भन्नुभयो ... ॥३४–३४॥ हे देवेश्वर ! के तपाईं आफूलाई अनन्त स्वीकार गर्नुहुन्न? यदि स्वीकार गर्नुहुन्छ भने फेरि के का लागि यो अत्यन्त मानवीय भाव व्यक्त गरिरहनु भएको हो? ॥३५॥ जसरी चक्कामा लगाइएका आग्लाहरू नाभि अर्थात् मादलका आश्रयमा रहेका हुन्छन्, त्यसरी हजुर सम्पूर्ण जगत्को परम आश्रय, हर्ता, कर्ता र रक्षक हुनुहुन्छ तथा हजुर नै त्रैलोक्यस्वरूप र वेदत्रयीमय हुनुहुन्छ ॥३६॥ हे अचिन्त्यस्वरूप! इन्द्र, रुद्र, अग्नि, वसु, आदित्य, मरुत्हरू र अश्विनीकुमार तथा सबै योगी–महात्माहरूले हजुरकै चिन्तन गर्दछन् अर्थात् हजुरकै उपासना गर्दछन् ॥३७॥ हे जगन्नाथ ! हजुरले पृथ्वीमा

जगत्यर्थं जगन्नाथ! भारावतरणेच्छया।
अवतीर्णोऽत्र मर्त्येषु तवांशश्चाहमग्रजः ॥३८॥
मनुष्यलीलां भगवन्! भजता भवता सुराः।
विडम्बयन्तस्त्वल्लीलां सर्व एव समासते ॥३९॥
अवतार्य्य भवान् पूर्वं गोकुलेऽत्र सुराङ्गनाः।
क्रीडार्थमात्मनः पश्चादवतीर्णोऽसि शाश्वतः ॥४०॥
अत्रावतीर्णयोः कृष्ण ! गोपा एव हि बान्धवाः।
गोप्यश्च सीदतः कस्मात् त्वं बन्धून् समुपेक्षसे ॥४१॥
दर्शितो मानुषो भावो दर्शितं बालचापलम्।
तदयं दम्यतां कृष्ण ! दुरात्मा दशनायुधः ॥४२॥

पराशर उवाच

इति संस्मारितः कृष्णः स्मितभिन्नोष्ठसंपुटः।
आस्फोट्य मोचयामास स्वदेहं भोगबन्धनात् ॥४३॥
आनम्य चापि हस्ताभ्यामुभाभ्यां मध्यमं फणम्।
आरुह्याभुग्नशिरसः प्रणनर्तोरुविक्रम ः ॥४४॥
व्रणाः फणेऽभवंस्तस्य कृष्णस्याङ्घ्रिनिकुट्टनैः।
यत्रोन्नतिञ्च कुरुते ननामास्य ततः शिर ः ॥४५॥
मूर्च्छामुपाययौ भ्रान्त्या नागः कृष्णस्य रेचकैः।
दण्डपातनिपातेन ववाम रुधिरं बहु ॥४६॥

परिरहेको भार उतार्नको लागि अर्थात् अधर्मको विनाश गरेर धर्मको स्थापना गर्नका लागि नै मनुष्यलोकमा अवतार लिनुभएको हो एवं हजुरको अग्रज (दाजु) मैले पनि हजुरकै अंशबाट अवतार लिएको हुँ ॥३८॥ हे भगवान्! हजुरले मनुष्य लीला गर्नुहुन्छ, यी सबै देवताहरूले हजुरकै लीलाको अनुकरण गर्दै गोप–गोपिनीहरूका स्वरूपमा अवतार लिएका हुन् र हजुरसँगै गोकुलमा बस्दछन् ॥३९॥ हजुरले आफ्नो लीलामा सहभागी बनाउका लागि गोकुलमा देववधूहरूलाई पहिले अवतार लिन लगाएर स्वयं नित्य सनातन भए तापनि आफूले पछि जन्म लिनुभएको अर्थात् अवतार लिनुभएको हो ॥४०॥ हे कृष्ण! गोकुलमा अवतार लिएका गोप एवम् गोपिनीहरू नै तपाईंका आफन्तहरू हुन् । फेरि के कारणले गर्दा तपाईंले आपत्कालीन अवस्थामा आफ्ना आफन्तहरूको उपेक्षा गरिरहनु भएको छ ॥४१॥ हे कृष्ण! अब कहिलेसम्म मनुष्यभाव प्रदर्शन गरिरहनु हुन्छ ? तथा कति समयसम्म यो बालापन देखाइरहनु हुन्छ? यो धेरै भयो । त्यसैले अब यो मनुष्य तथा बालापनलाई परित्याग गरिदिनु भएर यसै समयमा यो दुरात्मा कालियनागलाई दमन गरिदिनुहोस् ॥४२॥ **पराशरजीले भन्नुभयो–** बलरामद्वारा यसरी स्मरण गराइसकेपछि अत्यन्त सुमधुर रूपमा आफ्ना ओठहरू खोल्दै फुत्त उफ्रिएर परमात्मा श्रीकृष्णले आफ्नो शरीरलाई सर्पको बन्धनबाट पूर्ण रूपमा मुक्त गराउनु भयो ॥४३॥ र आफ्ना अत्यन्त बलवान् दुवै हातहरूबाट नागराजको बीचको फणालाई थिचर त्यो नतमस्तक भएको कालीय नागको फणामाथि चढेर आफ्नो सामर्थ्यको प्रदर्शन गर्दै अत्यन्त फूर्तिलो किसिमबाट नाच्न थाल्नु भयो ॥४४॥ परब्रह्म परमात्मा श्रीकृष्णका चरणहरूको प्रहारका प्रभावले उसको प्राण निस्कन लागिसकेको थियो, उसले आफ्नो जुन फणालाई उठाउने प्रयास गर्दछ, भगवान् श्रीकृष्णले आफ्ना चरणहरूद्वारा त्यसमाथि प्रहार गरेर थिचिदिनु हुन्थ्यो ॥४५॥ परमात्मा श्रीकृष्णको रेचक तथा दण्डपात नाम भएको नृत्यसँग सम्बन्धित गतिहरूको पीडा सहन गर्न नसकेर त्यो कालियनाग मूर्च्छित भएर रगत छाद्न थाल्यो ॥४६॥

तन्निर्भिन्नशिरोग्रीवमास्येभ्यः स्रुतशोणितम् ।

विलोक्य शरणं जग्मुस्तत्पत्न्यो मधुसूदनम् ॥४७॥

नागपत्न्य ऊचुः

ज्ञातोऽसि देवदेवेश! सर्वेशस्त्वमनुत्तमः ।

परं ज्योतिरचिन्त्यं यत्तदंशः परमेश्वरः ॥४८॥

न समर्थाः सुराः स्तोतुं यमनन्यभवं प्रभुम् ।

स्वरूपवर्णनं तस्य कथं योषित् करिष्यति ॥४९॥

यस्याखिलमहीव्योमजलाग्निपवनात्मकम् ।

ब्रह्माण्डमल्पकांशांशः स्तोष्यामस्तं कथं वयम् ॥५०॥

यतन्तो न विर्दुनित्यं यत्स्वरूपं हि योगिनः ।

परमार्थमणोरल्पं स्थूलात् स्थूलं नताःस्म तत् ॥५१॥

न यस्य जन्मने धाता यस्य नान्ताय चान्तकः ।

स्थितिकर्ता न चान्योऽस्ति यस्य तस्मै नमः सदा ॥५२॥

कोपः स्वल्पोऽपि ते नास्ति क्षितिपालनमेव ते ।

कारणं कालियस्यास्य दमने श्रूयतामतः ॥५३॥

स्त्रियोऽनुकम्प्याः साधूनां मूढा दीनाश्च जन्तवः ।

यतस्ततोऽस्य दीनस्य क्षम्यतां क्षमतां वर ॥५४॥

यसप्रकार उसको सिर पूर्ण रूपमा निहुरिएको तथा मुखहरूबाट रगत बगिरहेको दखेपछि उसकी पत्नीहरू अत्यन्त करुणासम्पन्न भावले ओतप्रोत भएर परब्रह्म परमात्मा श्रीकृष्णका नजिकमा आए ॥४७॥ **नागपत्नीहरूले भने**– हे देवेश्वर! हामी हजुरलाई यथार्थ रूपमा चिनिसक्यौं । हजुर सर्वज्ञ र सर्वोत्कृष्ट परब्रह्म परमात्मा हुनुहुन्छ। जो अचिन्त्य अर्थात् मनद्वारा चिन्तन गर्न नसकिने र परम ज्योति हुनुहुन्छ, हजुर उहाँको अंशरूप परमेश्वर हुनुहुन्छ ॥४८॥ जुन स्वयम्भू र सर्वत्र पूर्ण रूपमा व्यापक भएर रहनुभएका परमात्माको स्तुति गर्न देवताहरू पनि असमर्थ हुन्छन्, यस्ता हजुरको स्वरूपका विषयमा हामी स्त्रीहरूले कसरी वर्णन गर्न सक्दछौं? ॥४९॥ पृथ्वी, आकाश, जल, अग्नि र वायुस्वरूप यो सम्पूर्ण ब्रह्माण्ड जसको अत्यन्त सूक्ष्म अंश मात्र हो। यस प्रकारका परमात्माको स्तुति गर्न हामी पूर्ण रूपमा असमर्थ रहेका छौं ॥५०॥ जसलाई निरन्तर रूपमा अत्यन्त एकाग्रता पूर्वक प्रयास गरिरहेका योगीहरूले पनि जान्न सक्दैनन् तथा जो परमार्थस्वरूप सूक्ष्मभन्दा पनि अत्यन्त सूक्ष्म र स्थूलभन्दा पनि स्थूल हुनुन्छ । उहाँ परब्रह्म परमात्मालाई हामी अत्यन्त श्रद्धा र भक्तिपूर्वक नमस्कार गर्दछौं ॥५१॥ जसको जन्ममा विधाता र अन्तमा काल कारकतत्व हुन सक्दैनन् तथा जसको स्थितिकर्ता अन्य कोही रहेको छैन, हामीहरू उहाँ परमात्मालाई अत्यन्त श्रद्धा र भक्तिपूर्वक निरन्तर नमस्कार गर्दछौं ॥५२॥ हजुरले यी कालियनागको दमन क्रोधका कारणले गर्नुभएको नभएर यसमा सम्पूर्ण लोकहरूको कल्याण र रक्षा गर्ने लक्ष्य कारकतत्त्वका रूपमा रहेको छ । त्यसकारण हामीहरूद्वारा गरिएको प्रार्थनालाई स्वीकार गरिदिनुहोस् ॥५३॥ हे क्षमामूर्ति परमात्मा! महात्मा पुरुषहरूले स्त्रीहरू, मूर्ख र अत्यन्त दुःखी जीवको अपराधलाई क्षमा गरिदिन्छन्। त्यसकारण हजुरले पनि यी अत्यन्त दुःखी भएका कालियनागद्वारा गरिएको अपराध क्षमा गरिदिनुहोस् ॥५४॥ हे प्रभु! हजुर सम्पूर्ण जगत्को आधार हुनुहुन्छ र यी नागराज

समस्तजगदाधारो भवानल्पबलः फणी ।

त्वया च पीडितो जह्यान्मुहूर्तार्द्धेन जीवितम् ॥५५॥

क्व पन्नगोऽल्पवीर्य्योऽयंक्व भवान् भुवानाश्रयः ।

प्रीतिद्वेषौ समोत्कृष्टगोचरौ च यतोऽव्यय ॥५६॥

ततः कुरु जगत्स्वामिन् ! प्रसादमवसीदतः ।

प्राणांस्त्यजति नागोऽयं भर्तुभिक्षा प्रदीयताम् ॥५७॥

पराशर उवाच

इत्युक्ते ताभिराश्वस्य क्लान्तदेहोऽपि पन्नगः ।

प्रसीद देवदेवेति प्राह वाक्यं शनैः शनैः ॥५८॥

कालिय उवाच

तवाष्टगुणमैश्वर्यं नाथ! स्वाभाविकं परम् ।

निरस्तातिशयं यस्य तस्य स्तोष्यामि किन्वहम् ॥५९॥

त्वं परस्त्वं परस्याद्यः परं त्वत्तः परात्मक ।

परस्मात् परमो यस्त्वं ततः स्तोष्यामि किं न्वहम् ॥६०॥

यस्माद् ब्रह्मा च रुद्रश्च चन्द्रेन्द्रमरुतोऽश्विनौ ।

वसवश्च सहादित्यैस्तस्य स्तोष्यामि किं न्वहम् ॥६१॥

एकावयवसूक्ष्मांशो यस्यैतदखिलं जगत् ।

कल्पनावयवस्त्वेष तं स्तोष्यामि कथं न्वहम् ॥६२॥

सदसद्रूपिणो यस्य ब्रह्माद्यास्त्रिदशोत्तमा : ।

परमार्थं न जानन्ति तस्य स्तोष्यामि किं न्वहम् ॥६३॥

हजुरका तुलनामा पूर्ण रूपमा सामर्थ्यहीन रहेका छन्। हजुरका चरणहरूको पीडाले गर्दा मरणासन्न भएका यी कालियनागले केही समयमा नै आफ्नो प्राण परित्याग गर्नेछन् ॥५५॥ कहाँ यी अत्यन्त अल्प अर्थात् थोरैमात्र शक्ति भएका सर्प र कहाँ सम्पूर्ण ब्रह्माण्डहरूका आश्रय अर्थात् परम आधार हजुर? त्यसैले हे अव्यय पुरुषोत्तम! आफू समानकामा प्रेम र आफूभन्दा उत्तम वा श्रेष्ठसँग दुश्मनी गर्न उचित हुन्छ । यसकारण हे परमात्मा! यी कालियनागलाई क्षमा गरिदिनुहोस् ॥५६॥ त्यसकारण हे सम्पूर्ण जगत्का अधिपति! यी अत्यन्त दुःखित भएका नागराजमा दया गर्नुहवस् । हे प्रभु! अब यी नागराज आफ्नो जीवन अर्थात् प्राण परित्याग गर्न चाहन्छन् तर हे परमात्मा! हामीहरूलाई भिक्षाका रूपमा हाम्रो पति दिनुहोस् ॥५७॥ **पराशरजीले भन्नुभयो–** नागराजकी पत्नीहरूले यसरी भिक्षाका रूपमा आफ्नो पति मागेपछि कालियनागले अत्यन्त थाकेको शरीर भएतापनि आश्वस्त भएर एकदमै मसिनो स्वरमा भने– "हे देवदेवेश्वर! मदेखि हजुर प्रसन्न भइदिनुहोस्" ॥५८॥ **कालियनागले भने–** हे नाथ! हजुरमा स्वाभाविक रूपमा अष्टगुण–विशिष्ट परम ऐश्वर्य रहेको छ अर्थात् हजुरभन्दा ठूलो एश्वर्य अन्य कसैमा पनि रहेको छैन । त्यसकारण म हजुरको स्तुति कसरी गर्न सक्दछु ? अर्थात् मैले हजुरको स्तुति कसरी गरुँ ॥५९॥ हजुर सर्वोत्कृष्ट हुनुहुन्छ, हजुर पर अर्थात् मूलप्रकृतिको पनि आदिकारण हुनुहुन्छ। हे परात्मक! प्रकृति पनि हजुरबाटै सञ्चालित हुन्छिन् । जो परको पनि परम हुनुहुन्छ, म उहाँको स्तुति कसरी गरुँ ॥६०॥ जसबाट ब्रह्मा, रुद्र, चन्द्रमा, इन्द्र, मरुत्, अश्विनीकुमार एवम् आदित्यहरूका साथै वसुहरू उत्पन्न भएका छन्, म उहाँको स्तुति कसरी गरुँ ॥६१॥ यो सम्पूर्ण जगत् जसका एक अवयवको सूक्ष्मांश अर्थात् अत्यन्तै सानो अंश मात्र हो; म कुन स्वरूपको कल्पना गरेर उहाँको स्तुति गरुँ ॥६२॥ ब्रह्मादि देवताहरुले पनि जसको कार्यकारण स्वरूपको यथार्थलाई जान्न सक्दैनन् भने म उहाँको स्तुति कसरी गरुँ ॥६३॥ ब्रह्मादि

ब्रह्माद्यैरर्च्यते दिव्यैर्यश्च पुष्पानुलेपनैः ।

नन्दनादिसमुद्भूतैः सोऽर्च्यते वा कथं मया ॥६४॥

यस्यावताररूपाणि देवराजः सदार्चति ।

न वेत्ति परमं रूपं सोऽर्च्यते वा कथं मया ॥६५॥

विषयेभ्यः समाहृत्य सर्वाक्षाणि च योगिनः ।

समर्चयन्ति ध्यानेन सोऽर्च्यते वा कथं मया ॥६६॥

हृदि सङ्कल्प्य यद्रूपं ध्यानेनार्चन्ति योगिनः ।

भावपुष्पा दिना नाथः सोऽर्च्यते वा कथं मया ॥६७॥

सोऽहं ते देवदेवेश नार्चनायां स्तुतौ न च ।

सामर्थ्यवान् कृपामात्रमनोवृत्तिः प्रसीद मे ॥६८॥

सर्पजातिरियं क्रूरा यस्यां जातोऽस्मि केशव ।

तत्स्वभावोऽयमत्रास्ति नापराधो ममाच्युत ॥६९॥

सृज्यते भवता सर्वं तथा संह्रियते जगत् ।

जातिरूपस्वभावाश्च सृज्यन्ते जगतां त्वया ॥७०॥

यथाहं भवता सृष्टो जात्या रूपेण चेश्वर ।

स्वभावेन च संयुक्तस्तथेदं चेष्टितं मम ॥७१॥

यदन्यथा प्रवर्तेयं देवदेव ! ततो मयि ।

न्याय्यो दण्डनिपातो वै तवैव वचनं यथा ॥७२॥

तथापि यज्जगत्स्वामी दण्डं पातितवान् मयि ।

स सोढोऽयं वरं दण्डस्त्वत्तो मे नान्यतो वरः ॥७३॥

देवताहरूले नन्दनवनमा उत्पन्न भएर पूर्ण रूपमा फुलेका दिव्य फूलहरूद्वारा जसको पूजा गर्दछन्, यस्ता परमात्माको म कसरी पूजा गरुँ ॥६४॥ देवराज इन्द्रले जसका अवतारहरूको पूजा गरेर पनि परमतत्त्वका विषयमा ज्ञान हासिल गर्न सकेका छैनन्, म कसरी पूजा गरुँ ॥६५॥ योगीहरूले आफ्ना सबै इन्द्रियहरूलाई यथार्थ रूपमा आफ्नो नियन्त्रणमा राखेर ध्यानका माध्यमद्वारा जसको पूजा गर्दछन्, यस्ता परमात्माको म कुन विधि अनुसार पूजा गरुँ ॥६६॥ योगीहरूले जुन परमात्माको स्वरूपको चित्तमा कल्पना गरेर भावमय फूल आदिबाट ध्यानका माध्यमद्वारा उपासना गर्दछन्, यस्ता हजुरको मैले कसरी पूजा गर्न सक्दछु ?॥६७॥ हे देवेश्वर! म हजुरको पूजा अथवा स्तुति गर्न पूर्ण रूपमा असमर्थ रहेको छु अर्थात् म हजुरको पूजा गर्ने विधिका विषयमा अनभिज्ञ रहेको छु। मेरो चित्तको वृत्ति केवल हजुरतिर मात्र एकाग्र भएको छ । त्यसकारण हजुर मदेखि प्रसन्न भइदिनुहोस् ॥६८॥ हे केशव! मैले जुन जातिमा जन्म लिएको छु, त्यो सर्पजाति स्वाभाविक रूपमा नै अत्यन्त क्रूर हुन्छ, यो मेरो स्वजातीय स्वभाव हो। त्यसकारण हे अच्युत! मबाट त्यस्तो कुनै अपराध भएको छैन, जसका कारणले गर्दा क्षमा गर्न नसकियोस् ॥६९॥ हे भगवान्! हजुरले यो सम्पूर्ण जगत्को रचना गर्नुभएको हो र हजुरले नै सम्पूर्ण जगत्को संहार पनि गर्नुहुन्छ। जगत्को उत्पत्ति गर्दाका अवस्थामा यसको जाति, रूप र स्वभाव आदि सबैको रचना पनि हजुरले नै गर्नुभएको हो ॥७०॥ हे ईश्वर! हजुरले मेरो जुन जातिमा, जुन स्वरूपमा रचना गर्नुभयो र जस्ता किसिमको रूप एवं स्वभावबाट मलाई सम्पन्न बनाइदिनुभयो, मैले त्यही रूप र स्वभाव अनुसारको आचरणको पालना गरेको मात्र हो ॥७१॥ हे देवाधिदेव! यदि मैले आफ्नो रूप र स्वभावका विपरीतको आचरण गरेको अवस्थामा मात्र हजुरकै कथनअनुसार मलाई दण्ड दिन उचित हुन्छ ॥७२॥ तथापि हे जगत्स्वामी! अर्थात् जगत्का अधिपति! हजुरले मलाई जस्तो किसिमको दण्ड दिनुभयो, त्यो अन्यले दिएको तुलनामा अत्यन्त सर्वोत्कृष्ट र कल्याणदायक भएको स्वीकार गर्दछु ॥७३॥ हे अच्युत! हजुरद्वारा दमन गरिएपछि

हतवीर्यो हतविषो दमितोऽहं त्वयाच्युत।

जीवितं दीयतामेकमाज्ञापय करोमि किम् ॥७४॥

श्री भगवानुवाच

नात्र स्थेयं त्वया सर्प ! कदाचिद् यमुनाजले।

सभृत्यपरिवारस्त्वं समुद्रसलिलं व्रज ॥७५॥

मत्पदानि च ते सर्प ! दृष्ट्वा मूर्द्धनि सागरे।

गरुडः पन्नगरिपुस्त्वयि न प्रहरिष्यति ॥७६॥

पराशर उवाच

इत्युक्त्वा सर्पराजानं मुमोच भगवान् हरिः।

प्रणम्य सोऽपि कृष्णाय जगाम पयसां निधिम् ॥७७॥

पश्यतां सर्वभूतानां सभृत्यापत्यबान्धवः।

समस्तभार्यासहितः परित्यज्य स्वकं ह्रदम् ॥७८॥

ततः सर्वे परिष्वज्य मृतं पुनरिवागतम्।

गोपा मूर्द्धनि गोविन्दं सिषिचुर्नेत्रजैर्जलैः ॥७९॥

कृष्णमक्लिष्टकर्माणमन्ये विस्मितचेतसः।

तुष्टुवुर्मुदिता गोपा दृष्ट्वा शिवजलां नदीम् ॥८०॥

गीयमानः सः गोपीभिश्चरितैश्चारुचेष्टितैः।

संस्तूयमानो गोपैस्तु कृष्णो व्रजमुपागमत् ॥८१॥

ममा भएको सबै शक्ति र विष पूर्ण रूपमा नष्ट भइसक्यो। अब म हजुरसँग केवल जीवनको मात्र भिक्षा माग्दछु। त्यसकारण अब हजुरले मलाई आज्ञा दिनुहोस्, म के गरुँ? ॥७४॥ **श्रीभगवान्ले भन्नुभयो–** हे सर्प! तिमीले यसै समयदेखि यो यमुनाजीमा कहिल्यै पनि निवास गर्न पाउनेछैनौ। त्यसकारण तिमी आफ्ना सबै अनुचर एवं परिवारका सदस्यहरूलाई साथमा लिएर अत्यन्त शीघ्रतापूर्वक समुद्रमा जाऊ ॥७५॥ हे सर्प! तिमी यहाँबाट समुद्रमा गएपछि तिम्रो फणामा भएको मेरा चरणहरूको चिन्हलाई देखेपछि सर्पहरूको अत्यन्त ठूलो शत्रुका रूपमा रहेका गरुडले तिमीलाई कुनै किसिमको पीडा दिनेछैनन् ॥७६॥ **पराशरजीले भन्नुभयो–** भगवान् श्रीहरिले सर्पराज कालियलाई यस प्रकारको आज्ञा दिँदै मुक्त गरिदिनुभयो। नागराज पनि परब्रह्म परमात्मा श्रीकृष्णलाई प्रणाम गरेर आफ्नो अनुचर अर्थात् सेवकहरू, सन्तान, आफन्त एवं पत्नीहरू सहित सबैले देख्दादेख्दै आफ्नो विषकुण्डलाई पूर्ण रूपमा परित्याग गरेर समुद्रतिर जानका लागि त्यहाँबाट हिड्यो ॥७७–७८॥ कालियनाग त्यहाँबाट गइसकेपछि गोप–गोपिनीहरूले मृत्यु भइसकेको मनुष्य जीवित भएर आए जसरी नै परमात्मा श्रीकृष्णलाई अत्यन्त प्रेमपूर्वक अङ्कमाल गर्दै उहाँको शिरलाई आफ्ना आँसुहरूले भिजाउन थाले ॥७९॥ अन्य गोपहरूले यमुनाजीको पानी पूर्ण रूपमा अत्यन्त निर्मल र स्वच्छ भएको देखेपछि अत्यधिक प्रसन्न एवम् आश्चर्यचकित भएर विभिन्न किसिमका लीला गर्नुहुने परमात्मा श्रीकृष्णको अत्यन्त श्रद्धा एवं भक्तिपूर्वक स्तुति गर्न थाले ॥८०॥ त्यसपछि लोकको कल्याण गर्नका लागि पृथ्वीमा अवतार लिनुभएका परमात्मा श्रीकृष्णले गोपिनीहरूद्वारा गाइएका आफ्नो चरित्रको भजन र गोपहरूबाट प्राप्त भएको प्रशंसा स्वीकार गर्दै व्रजधाम गोकुलमा प्रवेश गर्नुभयो ॥८१॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे सप्तमोऽध्यायः।

ॐ

## अष्टमोऽध्यायः

## अध्याय – ८

### "धेनुकासुरवधः"

(धेनुकासुरको वध)

पराशर उवाच

गाः पालयन्तौ च पुनः सहितौ बलकेशवौः ।
भ्रममाणौ वने तस्मिन् रम्यं तालवनं गतौ ॥१॥

तत्तु तालवनं दिव्यं धेनुको नाम दानव ।
मृगमांस कृताहारः सदाध्यास्ते खराकृतिः ॥२॥

तत्तु तालवनं पक्वफलसम्पत्समन्वितम् ।
दृष्ट्वा स्पृहान्विता गोपाः फलादानेऽब्रुवन् वचः ॥३॥

गोपा ऊचुः

हे राम ! हे कृष्ण ! सदा धेनुकेनैष रक्ष्यते ।
भूप्रदेशो यतस्तस्मात् पक्वानीमानि सन्ति वै ॥४॥

फलानि पश्य तालानां गन्धामोदितदींशि च ।
वयमत्तुमभीप्सामः पात्यन्तां यदि रोचते ॥५॥

पराशर उवाच

इति गोपकुमाराणां श्रुत्वा सङ्कर्षणो वचः ।
कृष्णश्च पातयामास भुवि तालफलानि वै ॥६॥

फलानां पततां शब्दमार्कण्य स दुरासदः ।
आजगाम सुदुष्टात्मा कोपाद् दैतेयगर्दभः ॥७॥

पद्भ्यामुभाभ्यां स तदा पश्चिमाभ्यां बली बलम् ।
जघाननोरसि ताभ्याञ्च स च तेनाभ्यगृह्यत ॥८॥

**पराशरजीले भन्नुभयो** – एक दिन गाई पाल्ने व्यवसायमा लाग्नुभएका अन्यन्त पराक्रमी बलराम र परब्रह्म परमात्मा श्रीकृष्ण वनमा घुम्दै जाँदा अत्यन्त मनमोहक एवं सर्वोत्कृष्ट ताडका रुखहरू भएको वनमा पुग्नुभयो ॥१॥ त्यो दिव्य ताडका रूखहरू भएको वनमा धेनुक नाम भएको गदाहाको स्वरूप एवं आकार भएको दैत्य मृगको मासु खाएर वा खाँदै निरन्तर रूपमा त्यही दिव्य वनमा बस्ने गर्दथ्यो ॥२॥ यथार्थ रूपमा पाकेका फलहरूबाट अत्यन्त शोभायमान भएको त्यो ताडको वनलाई देखेपछि त्यो खानका लागि अत्यन्त लालायित भएका गोपकुमारहरूले बलरामसँग भन्न थाले ...॥३॥ **गोपकुमारहरूले भने**– हे राम ! हे कृष्ण ! धेनुकासुरले सधैं यो ताडको रूखहरूबाट अत्यन्त शोभायमान देखिएको वनको रक्षा गर्दछ। त्यसकारण यी पाकेका ताडका फलहरू पूर्ण रूपमा सुशोभित भइरहेका छन् ॥४॥ आफ्नो सुगन्धले सबै दिशाहरूलाई सुवासित बनाइरहेका यी ताडका फलहरूलाई हेर्नुहोस्। हामीहरू ती फल खान अत्यन्त लालायित भएका छौं। यदि तपाईंलाई ठीक लाग्दछ भने थोरै मात्रामा झारिदिनुहोस् ॥५॥ **पराशरजीले भन्नुभयो**–गोपकुमारहरूका यस किसिमका वचनहरू सुनेपछि बलरामजीले "ल ठीक छ, यसै गर्नुपर्दछ" भनेर केही फल जमिनमा झारिदिनु भयो ॥६॥ ती फलहरू जमिनमा खसेको आवाज सुनेपछि त्यो दुर्द्धर्ष र अत्यन्त दुराचारी आत्मा भएको गदाहाको आकार भएको असुर अत्यन्त क्रुद्ध हुँदै दौडिएर फल खसेको ठाउँमा आइपुग्यो ॥७॥ र त्यो अत्यन्त पराक्रमी असुरले आफ्ना पछाडिका खुट्टाले बलरामजीको छातीमा हान्यो । त्यस समयमा बलरामजीले उसका खुट्टामा समाउनुभयो र आकाशमा घुमाउन थाल्नुभयो। त्यसकारण उसले त्यसै समयमा अर्थात् आकाश मार्गमा नै प्राण त्याग गरिदियो। त्यसै

गृहीत्वा भ्रामणेनैव सोऽम्बरे गतजीवितम्।

तस्मिन्नेव च चिक्षेप वेगेन तृणराजनि ॥९॥

ततः फलान्यकेकानि तालाग्रान्निपतन् खरः।

पृथिव्यां पातयामास महाव्रातोऽम्बुदानिव ॥१०॥

अन्यानप्यस्य वै ज्ञातीनागतान् दैत्यगर्दभान्।

कृष्णश्चिक्षेप तालाग्रे बलभद्रश्च लीलया ॥११॥

क्षणेनालङ्कृता पृथ्वी पक्वैस्तालफलैस्तथा।

दैत्यगर्दभदेहैश्च मैत्रेय ! शुशुभेऽधिकम् ॥१२॥

ततो गावो निराबाधास्तस्मिंस्तालवने द्विज।

नवशस्यं सुखं चेरुर्यन्न भुक्तमभूत् पुरा ॥१३॥

समयमा बलरामजीले त्यसलाई ताडको रूखमाथि अत्यन्त वेगपूर्वक फ्याकिदिनु भयो॥८-९॥ त्यसपछि त्यो गदाहाका आकारको असुर ताडका रुखको अग्रभागबाट जमिनमा खस्दाका समयमा त्यसको गतिको वेगबाट उत्पन्न भएको हावाले रुखलाई हल्लाउँदा ताडका धेरै फलहरू जमिनमा झरे ॥१०॥ धेनुकासुर पृथ्वीमा खस्दा निस्किएको आवाज सुनेर आएका अन्य गदाहाको स्वरूप भएका त्यसरी नै गदाहाको स्वरूप भएका दैत्यहरूलाई परमात्मा श्रीकृष्ण र अत्यन्त पराक्रमी बलरामले अनायास रूपमा ताडको रूखको अगाडिपट्टि फ्याँक्न थाल्नुभयो ॥११॥ हे मैत्रेय! थोरै समयमा नै धेरै ताडफलहरूबाट पृथ्वी सुशोभित हुन थाल्यो। त्यसरी नै गदाहाको स्वरूप धारण गरेका दैत्यहरूका शरीरहरूबाट अत्यधिक शोभा-सम्पन्न भयो ॥१२॥ हे ब्राह्मणश्रेष्ठ! त्यस समयदेखि त्यो ताडका रुखहरू भएको वनमा गाईहरू बिना अवरोध आनन्दपूर्वक निर्वि!न भएर नवीन घाँस चर्न थाले, जुन अवसर उनीहरूले यसभन्दा पहिले कहिल्यै पाएका थिएनन् ॥१३॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे अष्टमोऽध्यायः।

ॐ

## नवमोऽध्यायः

## अध्याय – ९

### "प्रलम्बासुरवधः"
(प्रलम्बासुरको वध)

पराशर उवाच

तस्मिन् रासभदैतेये सानुगे विनिपातिते ।

सेव्यं गो–गोप–गोपीनां रम्यं तालवनं बभौ ॥१॥

ततस्तौ जातहर्षौ तु वसुदेवसुतावुभौ ।

हत्वा धेनुकदैतेयं भाण्डीरवटमागतौ ॥२॥

क्ष्वेडमानौ प्रगायन्तौ विचिन्वन्तौ च पादपान् ।

चारयन्तौ च गा दूरे व्याहरन्तौ च नामभिः ॥३॥

निर्योगपाशस्कन्धौ तौ वनमालाविभूषितौ ।

शुशुभाते महात्मानौ बालश्रृङ्गाविवर्षभौ ॥४॥

सुवर्णाञ्जनवर्णाभ्यां तौ तदा रूषिताम्बरौ ।

महेन्द्रायुधसंयुक्तौ श्वेतकृष्णाविवाम्बुदौ ॥५॥

चेरतुर्लोकसिद्धाभिः क्रीडाभिरितरेतरम् ।

समस्तलोकनाथानां नाथभूतौ भुवं गतौ ॥६॥

मनुष्यधर्माभिरतौ मानयन्तौ मनुष्यताम् ।

तज्जातिगुणयुक्ताभिः क्रीडाभिश्चेरतुर्वनम् ॥७॥

**पराशरजीले भन्नुभयो** – आफ्ना सेवकहरू सहित त्यो गदाहाको स्वरूप भएको धेनुकासुर मरिसकेपछि गाई, गोपकुमार र गोपिनीहरूले स्वच्छन्दतापूर्वक घुमफिर गरेका कारणले त्यो अत्यन्त मनमोहक अर्थात् मनै लोभ्याउने ताडका रूखहरू भएको वनले अत्यधिक शोभा पाउन थाल्यो ॥१॥ त्यसपश्चात् वसुदेवजीका पुत्ररत्नहरू अत्यन्त पराक्रमी राम र परमात्मा श्रीकृष्ण दुवै धेनुकासुरको सर्वनाश गरिसकेपछि अत्यन्त प्रसन्नतापूर्वक भाण्डीर नाम भएको बरको रूखमुनि आउनुभयो अर्थात् बरको रूखको छायामा आउनुभयो ॥२॥ काँधमा गाई बाँध्ने दाम्लो राखेर तथा वनमाला अर्थात् जङ्गली फूलको माला वा तुलसी, कुन्दपुष्प, आँक, पारिजात, कमल यी पाँचथरी फूल उनेर बनाएको मालाबाट विभूषित भएर उहाँहरू दुवै महात्मा बालक सिंह जसरी नै गर्जिंदै, गोपगीत गाउँदै, रूखमा चढ्दै, टाढा–टाढासम्म लगेर गाई चराउँदै तथा गाईहरूको नाम लिएर डाक्दै अथवा बोलाउँदै अत्यन्त सुशोभित भइरहनु भएको थियो ॥३–४॥ उहाँहरूले लगाउनुभएको कपडा क्रमशः सुनौलो र सेतो रंगबाट रंगिएका थिए । त्यसकारण उहाँहरू इन्द्रधनुषबाट पूर्ण रूपमा सम्पन्न सेतो र श्याम मेघ (बादल) जस्तै देखिइरहनु भएको थियो ॥५॥ उहाँहरू सम्पूर्ण लोकहरूका अधिपति एवं पालनकर्ता परमात्माले पृथ्वीमा अवतार लिएर विभिन्न किसिमका लौकिक लीलाहरूका माध्यमद्वारा एकापसमा अत्यन्त आनन्दपूर्वक खेल्दै मनोरञ्जन गरिरहनु भएको थियो॥६॥ उहाँहरू दुवै स्वयं तत्परतापूर्वक मनुष्य धर्मको पालना गर्दै, एवं मनुष्यताको सम्मान गर्दै मनुष्यजातिका गुणहरूद्वारा पूर्ण रूपमा सम्पन्न भएर अत्यन्त आनन्दपूर्वक विभिन्न किसिमका खेलहरू खेल्दै वनमा घुमफिर गरिरहनु भएको थियो ॥७॥ उहाँहरू दुवै

ततस्त्वान्दोलिकाभिश्च नियुद्धैश्च महाबलौ ।
व्यायामं चक्रतुस्तत्र क्षेपणीयैस्तथाश्मभिः ॥८॥

अत्यन्त पराक्रमी बालक कहिले झुला अर्थात् झोलुङ्गामा बसेर हल्लिँदै, कहिले एक–आपसमा कुस्ती खेल्दै, कहिले ढुङ्गा फ्याँक्दै विभिन्न किसिमका खेलहरू खेलेर व्यायाम अर्थात् कसरत गर्नुहुन्थ्यो ॥८॥

तल्लिप्सुरसुरस्तत्र ह्युभयो रममाणयोः ।
आजगाम प्रलम्बाख्यो गोपवेशतिरोहितः ॥९॥

त्यसै समयमा ती दुवै अत्यन्त आनन्दपूर्वक खेलिरहेका बालकहरूलाई अपहरण गरेर लैजाने अभिलाषा बोकेर प्रलम्ब नाम भएको दैत्य गोपहरूको भेषमा अर्थात् गोपहरूको स्वरूप धारण गरेर त्यहाँ आयो ॥९॥

सोऽवगाहत निःशङ्कस्तेषां मध्यममानुषः ।
मानुषं वपुरास्थाय प्रलम्बो दानवोत्तमः ॥१०॥

त्यो दानवहरूमा उत्तम प्रलम्ब मनुष्य नभए तापनि मनुष्यको स्वरूप धारण गरेर अत्यन्त निर्भयतापूर्वक अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्ण आदि एकाग्रतापूर्वक खेलिरहेका स्थानमा उहाँहरूका बीचमा छिऱ्यो ॥१०॥

तयोश्छिद्रान्तरं प्रेप्सुरविषह्यममन्यत ।
कृष्णं ततो रौहिणेयं हन्तुं चक्रे मनोरथम् ॥११॥

उहाँहरू दुवै खेलमा अत्यन्त एकाग्रतापूर्वक लाग्नुभएको असावधान अवस्थामा रहनुभएको देखिसकेपछि त्यस दैत्यले परमात्मा श्रीकृष्ण यथार्थमा अजेय हुनुभएको जान्यो । त्यसकारण उसले बलरामजीलाई मार्ने योजना बनायो अर्थात् निश्चय गऱ्यो ॥११॥

हरिणाक्रीडनं नाम बालक्रीडनकं ततः ।
प्रकुर्वन्तो हि ते सर्वे द्वौ द्वौ युगपदुत्पतन् ॥१२॥

त्यसपछि ती सबै बालकहरू मिलेर हरिणाक्रीडन नाम भएको एक किसिमको खेल आरम्भ गर्दै एक–आपसमा दुई–दुई बालकको समूह बनाएर प्लुतगतिपूर्वक अर्थात् दौडिएर निर्धारण गरिएको स्थानतिर जान आरम्भ गरे ॥१२॥

श्रीदाम्ना सह गोविन्दः प्रलम्बेन तथा बलः ।
गोपालैरपरैश्चान्ये गोपालाः पुप्लुवुस्ततः ॥१३॥

त्यसपछि गोविन्द अर्थात् परमात्मा श्रीकृष्णले सुदामासँग र बलरामले प्रलम्ब नाम भएको दैत्यसँग एवं यसरी नै अन्य गोपबालकले अर्का गोपकुमारहरूसँग जोडी बनाएर दौडन आरम्भ अर्थात् शुरु गरे ॥१३॥

श्रीदामानं ततः कृष्णः प्रलम्बं रोहिणीसुतः ।
जितवान् कृष्णपक्षीयैर्गोपैरन्ये पराजिताः ॥१४॥

त्यसपछि परमात्मा श्रीकृष्णले सुदामालाई, रोहिणीपुत्र बलरामले प्रलम्बलाई एवम् भगवान् श्रीकृष्णका पक्षमा रहेका गोपकुमारहरूले अन्य पक्षमा रहेका गोपकुमारहरूलाई पराजित गरिदिए अर्थात् उनीहरूमाथि विजय प्राप्त गरे ॥१४॥

ते वाहयन्तस्त्वन्योन्यं भाण्डीरस्कन्धमेत्य वै ।
पुनर्निववृतुः सर्वे ये ये तत्र पराजिताः ॥१५॥

त्यस खेलमा जुन–जुन बालकहरूले पराजयको सामना गर्नुपरेको थियो, ती सबै आफूसँग विजयी भएका बालकहरूलाई आफ्नो पिठ्यूँमा चढाएर भाण्डीर पहिलेकै स्थानमा आए ॥१५॥

सङ्कर्षणन्तु स्कन्धेन शीघ्रमुत्क्षिप्य दानवः ।
न तस्थौ स जगामैव सचन्द्र इव वारिदः ॥१६॥

तर त्यो बलरामलाई आफ्नो पिठ्यूँमा बोकेको प्रलम्ब नाम भएको दैत्य चन्द्रमा सहित मेघका समान अत्यन्त शीघ्र गतिमा जान थाल्यो र फर्किएर आएन अर्थात् ऊ अत्यन्त तीब्र गतिमा आकाशमार्गतर्फ जान थाल्यो ॥१६॥

असहन् रौहिणेयस्य स भारं दानवोत्तमः ।

ववृधे सुमहाकायः प्रावृषीव बलाहकः ॥१७॥

सङ्कर्षणस्तु तं दृष्ट्वा दग्धशैलोपमाकृतिम् ।

स्रग्दामलम्बाभरणं मुकुटाटोपमस्तकम् ॥१८॥

रौद्रं शकटचक्राक्षं पादन्यास–चलत्क्षितिम् ।

ह्रियमाणस्ततः कृष्णामिदं वचनमब्रवीत् ॥१९॥

कृष्ण ! कृष्ण ! ह्रियाम्येष पर्वतोदग्रमूर्त्तिना ।

केनापि पश्य दैत्येन गोपालच्छद्मरूपिणा ॥२०॥

यदत्र साम्प्रतं कार्यं मया मधुनिषूदन ।

तत् कथ्यतां प्रयात्येष दुरात्मा दानवाधमः ॥२१॥

पराशर उवाच

तमाह रामं गोविन्दः स्मितभिन्नौष्ठसम्पुटः ।

महात्मा रौहिणेयस्य बलवीर्यप्रमाणवित् ॥२२॥

श्रीभगवानुवाच

किमयं मानुषो भावो व्यक्तमेवावलम्ब्यते ।

सर्वात्मन् ! सर्वगुह्यानां गुह्यगुह्यात्मना त्वया ॥२३॥

स्मराशेषजगद्बीजकारणं कारणाग्रजम् ।

आत्मानमेकं तद्वच्च जगत्येकार्णवे च यत् ॥२४॥

किन्न वेत्सि यथाहञ्च त्वञ्चैकं कारणं भुवः ।

भारावतारणार्थाय मर्त्यलोकमुपागतौ ॥२५॥

त्यो दानवहरूमा श्रेष्ठ अर्थात् उत्तम प्रलम्बले रोहिणीपुत्र बलरामको वजनलाई थाम्न अत्यन्त असमर्थ भएपछि वर्षाऋतुको मेघका जसरी नै बढेर अत्यन्तै भयानक स्थूल शरीर धारण गर्‍यो अर्थात् ऊ भीमकाय शरीरमा परिणत भयो ॥१७॥ त्यसपछि दग्धपर्वतका समान आकार भएको शरीर गरेको, माला र अन्य आभूषणहरूबाट सुशोभित भएको, शिरमा मुकुट लगाएको, अत्यन्त भयानक गाडीको चक्का जस्तो आँखा भएको एवं आफ्नो खुट्टाको प्रहारबाट पृथ्वीलाई पूर्ण रूपमा कम्पित गराउने सामर्थ्य भएको राक्षसले आफूलाई अत्यन्त निर्भयतापूर्वक अपहरण गरेर लगिरहेको देखेपछि बलरामले परमात्मा श्रीकृष्णसँग भन्नुभयो... ॥१८-१९॥ हे कृष्ण! हेर, यो छलफलपूर्वक गोपकुमारको स्वरूप धारण गर्ने र पर्वतका समान अत्यन्त भयानक शरीर धारण गरेको कुनै भीमकाय दैत्यले मलाई अपहरण गरेर लगिरहेको छ ॥२०॥ हे मधुसूदन! यस समयमा मैले के गर्नुपर्दछ, त्यो बताऊ, यो अत्यन्त दुष्ट आत्मा भएको दानव अत्यन्त तेज गतिमा आफ्नो गन्तव्यतिर गइरहेको छ ॥२१॥ **पराशरजीले भन्नुभयो–** त्यस समयमा बलरामको शक्ति र पराक्रमसँग राम्ररी परिचित रहनुभएका परब्रह्म परमात्मा श्रीकृष्णले अत्यन्त सुमधुर मुस्कानसहित आफ्ना ओठहरूलाई मन्दगतिमा खोल्दै बलरामसँग भन्नुभयो ... ॥२२॥ **भगवान् श्रीकृष्णले भन्नुभयो–** हे सर्वात्मन्! तपाईं स्वयं सबै किसिमका गुह्य पदार्थहरूमा पनि अत्यन्त परमगुह्य–स्वरूप हुनुहुन्छ भने फेरि यस प्रकारको स्पष्ट मनुष्यभावलाई किन अवलम्बन गरिरहनु भएको छ अर्थात् आफ्नो स्वभाविलाई देखाउनुहोस् ॥२३॥ हजुरले आफ्नो आत्मालाई स्मरण गर्नुहोस्, हजुर सबै किसिमका बीजहरूको कारण हुनुहुन्छ र कारणभन्दा पनि पूर्ववर्ती अर्थात् कालक्रम, स्थान, गुण आदिका दृष्टिले पहिले एवम् प्रलयका समयमा हजुर एकमात्र अवस्थित रहनुहुन्छ ॥२४॥ के हजुरलाई स्मरण हुन सकिरहेको छैन, म र हजुर हामी दुवै यी सम्पूर्ण जगत्का कारण हौँ र पृथ्वीमा अत्यधिक रूपमा बढिरहेको अधर्मको सर्वनाश गरेर धर्मको स्थापना अर्थात् पृथ्वीको कल्याण गर्नका लागि मात्र अवतार लिएका अर्थात् मनुष्यका रूपमा उत्पन्न भएका हौँ ॥२५॥ आकाश हजुरको

नभः शिरस्तेऽम्बुमयी च मूर्तिः

पादौ क्षितिर्वक्त्रमनन्त वन्हिः ।

सोमो मनस्ते श्वसितं समीरो

दिशश्चतस्रोऽव्यय बाहवस्ते ॥२६॥

सहस्रवक्त्रो भगवान् महात्मा

सहस्रहस्ताङ्घ्रि शरीरभेदः ।

सहस्रपद्मोद्भयोनिराद्यः

सहस्रशस्त्वां मुनयो गृणन्ति ॥२७॥

दिव्यं हि रूपं तव वेत्ति

नान्यो देवैरशेषैरवताररूपम् ।

तदर्च्यते वेत्सि न किं यदन्ते

त्वय्येव विश्वं लयमभ्युपैति ॥२८॥

त्वया धृतेयं धरणी विभर्ति चराचरं विश्वमनन्तमूर्ते ।

कृतादिभेदैरज ! कालरूपो निमेषपूर्वो जगदेतदत्सि ॥२९॥

अत्तं यथा वाडववह्निनाम्बु

हिमस्वरूपं परिगृह्य कास्तम् ।

हिमाचले भानुमतोंऽशुसङ्गा–

ज्जलत्वमभ्येति पुनस्तदेव ॥३०॥

एवं त्वया संहरणेऽत्तमेतज्जगत् समस्तं पुनरप्यवश्यम् ।

तवैव सर्गाय समुद्यतस्य जगत्वमभ्येत्यनुकल्पमीश ॥३१॥

भवानहञ्च विश्वात्मन्नेकमेव हि कारणम् ।

जगतोऽस्य जगत्यर्थे भेदेनावां व्यवस्थितौ ॥३२॥

शिर हो, हजुरको मूर्ति जलमयी छ, हे अनन्त! पृथ्वी नै हजुरका दुवै चरणहरू हुन्, अग्नि हजुरका मुख हुन् एवं चन्द्रमा, मन र वायु हजुरका श्वास–प्रश्वास हुन् तथा चारओटै दिशाहरू हजुरका हातहरू हुन् ॥२६॥ हे भगवान्! हजुरका हजारौं मुखहरू छन्, हजुरका हात, चरण र शरीर सबै हजारौं किसिमका छन् । हजुर हजारौं ब्रह्माहरूको कारण हुनुहुन्छ, ऋषि –महर्षिहरूले हजुरको हजारौं किसिमबाट स्तुति र उपासना गर्दछन् ॥२७॥ हजुरको दिव्य स्वरूपका विषयमा हजुरबाहेक अन्य कसैलाई पनि ज्ञान छैन । सबै देवताहरूले हजुरलाई अवतारका रूपमा मात्र पूजा–आराधना गर्दछन् । के हजुरलाई ज्ञान छैन? अन्त समयमा यो सम्पूर्ण विश्व हजुरमा विलीन हुनेछ ॥२८॥ हे अनन्तमूर्त! हजुरले धारण गर्नुभएको छ, यसका विषयमा ज्ञान भएका कारणले गर्दा नै यी पृथ्वी सम्पूर्ण चराचरलाई धारण गर्नका लागि समर्थ भएकी छन् । हे अनादि पुरुष! (जसको जन्म हुँदैन, त्यसलाई अज वा अनादि भनिन्छ ।) हजुर नै निमेष आदि कालस्वरूप हुनुहुन्छ, हजुरले नै सत्य, त्रेता आदि युगहरूको भेदबाट यी सम्पूर्ण जगत्लाई आफ्नो भोजन बनाउनु हुन्छ ॥२९॥ जसरी वाडवानल अर्थात् समुद्री आगोद्वारा शोषित अर्थात् चुसिएको पानीले वायुका माध्यमद्वारा हिमालयसम्म पुगेर अत्यन्त मनमोहक हिउँको स्वरूप धारण गर्दछ एवं त्यो हिमालयमा घाम लागेपछि अर्थात् सूर्यको तातो किरण परेपछि फेरि जुन पानीको रूपमा परिणत हुन्छ, त्यसरी नै प्रलयका समयमा हजुरमा नै विलय भएको यो विश्व हजुरकै आधिपत्यमा रहन्छ र प्रत्येक कल्पमा हजुरको हिरण्यगर्भ स्वरूपबाट सृष्टिको रचना गर्ने कार्यमा उत्साहित भएपछि यसले फेरि जगत्को स्वरूप धारण गर्दछ। हे ईश्वर! सबै कल्पहरूमा हजुरले यसरी नै प्रलयको अन्तमा यो जतग्को रचना गर्नुहुन्छ ॥३०–३१॥ हे सम्पूर्ण विश्वका आत्मा! हजुर एवं म अर्थात् हामी दुई मात्र यो सम्पूर्ण जगत्को परम आधार एवं कारण हौं। तर म संसारको कल्याण गर्नका अलग–अलग स्वरूप धारण गर्दछु ॥३२॥ हे भगवान्! त्यसकारण

तत् स्मर्यताममेयात्मन् ! त्वयात्मा जहि दानवम्।

मानुष्यमेवावलम्ब्य बन्धूनां क्रियतां हितम् ॥३३॥

पराशर उवाच

इति संस्मारितो विप्र ! कृष्णेन सुमहात्मना।

विहस्य पीडयामास प्रलम्बं बलवान् बलः ॥३४॥

मुष्टिना सोऽहनन्मूर्ध्नि कोपसंरक्तलोचनः।

तेन चास्य प्रहारेण बहिर्याते विलोचने ॥३५॥

स निष्कासितमस्तिष्को मुखाच्छोणितमुद्वमन्।

निपपात महीपृष्ठे दैत्यवर्यो ममार च ॥३६॥

प्रलम्बं निहतं दृष्ट्वा बलेनाद्भुतकर्मणा।

प्रहृष्टास्तुष्टुवुर्गोपाः साधु साध्विति चाब्रुवन् ॥३७॥

संस्तूयमानो गोपैस्तु रामो दैत्ये निपातिते।

प्रलम्बे सह कृष्णेन पुनर्गोकुलमाययौ ॥३८॥

तपाईंले स्वयं आफ्नो आत्माको स्मरण अर्थात् चिन्तन् गर्नुहोस् एवं यो साधारण मनुष्यको भावलाई परित्याग गर्दै आफ्नो वास्तविक स्वरूपमा परिणत भएर यो अत्यन्त दुष्ट दानवको विनाश गरेर हाम्रा आफन्तहरूको कल्याण गर्नुहोस् ॥३३॥ **पराशरजीले भन्नुभयो** - हे ब्राह्मणश्रेष्ठ! परब्रह्म परमात्मा श्रीकृष्णले यसरी स्मरण गराएपछि अत्यन्त पराक्रमी बलरामले मुसुमुसु हाँस्दै प्रलम्बासुर अर्थात् प्रलम्ब नाम भएको असुरलाई पीडा अथवा कष्ट दिन थाल्नुभयो ॥३४॥ त्यस समयमा अत्यन्त क्रोधित भएर राता-राता आँखा पार्नु भएका बलरामले मुष्टि अर्थात् मुक्काद्वारा त्यसको शिरमा हान्न थाल्नुभयो। बलरामद्वारा प्रहार गरिएको चोटको प्रभावले त्यस दैत्यका दुवै आँखा बाहिर निस्किए ॥३५॥ त्यस समयमा उसको टाउको फुट्यो र टाउकोमा रहेको मथिङ्गल बाहिर निस्कियो एवं मुखबाट रगतै-रगत छाद्दै जमिनमा ढल्यो, त्यसपश्चात् त्यसै समयमा उसको मृत्यु भयो ॥३६॥ अत्यन्त अद्भुत कार्य गर्नुहुने महापराक्रमी बलरामद्वारा प्रलम्ब नाम भएको दैत्य मारिएको देखेपछि गोपकुमारहरू अत्यन्त प्रसन्न भएर "धन्यवाद ! धन्यवाद !!" भन्दै उहाँको प्रशंसा गर्न थाले ॥३७॥ प्रलम्ब नाम भएको असुरको हत्या (वध) भइसकेपछि बलराम गोपकुमारहरूद्वारा प्रशंसित हुँदै परमात्मा श्रीकृष्णसँग त्यहाँबाट फर्किएर गोकुलमा जानुभयो ॥३८॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे नवमोऽध्यायः।



## दशमोऽध्यायः　　　　　　　　　　　　अध्याय – १०

### "शरद्वर्णनम्, गोवर्द्धनपूजा च"

(शरद् ऋतुको वर्णन तथा गोवर्द्धन पर्वतको पूजा)

पराशर उवाच

तयोर्विहरतोस्तत्र रामकेशवयोर्व्रजे।

प्रावृड् व्यतीता विकसत्सरोजा चाभवच्छरत् ॥१॥

अवापुस्तापमत्यर्थं शफर्यः पल्वलोदके।

पुत्रक्षेत्रादिसक्तेन ममत्वेन यथा गृही ॥२॥

मयूरा मौनिनस्तस्थुः परित्यक्तमदा वने।

असारतां परिज्ञाय संसारस्येव योगिनः ॥३॥

उत्सृज्य जलसर्वस्वं निर्मलाः सितमूर्तयः।

तत्यजुश्चाम्बरं मेघा गृहं विज्ञानिनो यथा ॥४॥

शरत्सूर्यांशुतप्तानि ययुः शोषं संरासि च।

बह्वालम्बममत्वेन हृदयानीव देहिनाम् ॥५॥

कुमुदैः शरदम्भांसि योग्यतालक्षणं ययुः।

अवबोधैर्मनांसीव समत्वममलात्मनाम् ॥६॥

**पराशरजीले भन्नुभयो** – अत्यन्त पराक्रमी बलराम एवं परमात्मा श्रीकृष्णले व्रजमा यस प्रकारले घुमफिर गर्दा–गर्दै वर्षाकाल अर्थात् वर्षाऋतु समाप्त भयो र पूर्ण रूपमा फुलेका कमलका फूलहरूबाट यथार्थ रूपमा सुशोभित भएको शरद्ऋतु प्रारम्भ भयो ॥१॥ जसरी गृहस्थ मनुष्यले पुत्र, पत्नी, आदिको संसर्गबाट उत्पन्न भएको ममताका आधारमा मानसिक पीडा पाइरहेको हुन्छ, त्यसरी नै पोखरीहरूको पानीमा माछाहरूले अत्यधिक रूपमा पीडा भएको अनुभव गर्न थाले अर्थात् दुःख पाउन थाले ॥२॥ जसरी सांसारिक प्रवाहको गतिका विषयमा ज्ञान हासिल गरिसकेका योगीहरू पूर्ण रूपमा शान्त रहन्छन्, त्यसरी नै मयूरहरू पनि वनमा हर्षको परित्याग गरेर अत्यन्त शान्त भएर बस्न थाले ॥३॥ जसरी ज्ञानीहरू सबै पदार्थहरूको ममता परित्याग गरिसकेपछि घरको गृहस्थी जीवनलाई पूर्ण रूपमा परित्याग गरेर सन्यासी हुन्छन्, त्यसरी नै सेतो वर्ण भएका मेघ (बादल) ले पनि जलरूपी सर्वस्व परित्याग गरेर अत्यन्त निर्मल आकाशलाई पनि पूर्ण रूपमा परित्याग गरिदिए ॥४॥ जसरी अत्यन्त धेरै पदार्थहरूमा आसक्ति र ममता राखेका कारणले गर्दा शरीर धारण गर्नेहरूको हृदय अर्थात् अन्तरात्मा सारहीन अर्थात् कुनै अर्थ नभएको हुन्छ, त्यसरी नै अत्यन्त रापिलो सूर्यका किरणहरूबाट तातेर पोखरी वा तालहरू सुक्न थाले ॥५॥ जसरी अत्यन्त निर्मल र स्वच्छ स्वभाव भएका व्यक्तिहरूको अन्तरात्माले ज्ञानका माध्यमद्वारा समता प्राप्त गर्दछ अर्थात् त्यस्ता व्यक्तिहरू समभावमा रहन्छन्, त्यसरी नै शरद्कालीन् जलसमूहले अत्यन्त मनमोहक चन्द्रकमलको फूलसँग सम्बन्ध स्थापित गर्‍यो ॥६॥

तारकाविमले व्योम्नि रराजाखण्डमण्डलः।

चन्द्रश्चरमदेहात्मा योगी साधुकुले यथा ॥७॥

शनकैः शनकैस्तीरं तत्यजुश्च जलाशयाः।

ममत्वं क्षेत्रपुत्रादिरूढमुच्चैर्यथा बुधाः ॥८॥

पूर्वत्यक्तैः सरोऽम्भोभिर्हंसा योगं पुनर्ययुः।

क्लेशैः कुयोगिनो ऽशेषैरन्तरायहता इव ॥९॥

निभृतोऽभवदत्यर्थं समुद्रः स्तिमितोदकः।

क्रमावाप्तमहायोगो निश्चलात्मा यथा यतिः ॥१०॥

सर्वत्रातिप्रसन्नानि सलिलानि तदाभवन्।

ज्ञाते सर्वगते विष्णौ मनांसीव सुमेधसाम् ॥११॥

बभूव निर्मलं व्योम शरदा ध्वस्ततोयदम्।

योगाग्निदग्धक्लेशौघं योगिनामिव मानसम् ॥१२॥

सूर्यांशुजनितं तापं निन्ये तारापतिः शमम्।

अहङ्कारोद्भवं दुःखं विवेकः सुमहानिव ॥१३॥

जसरी साधुहरू अर्थात् अत्यन्त उत्तम आचरण भएका पुरुषहरूका कुलमा अन्तिम (आखिर) को शरीर धारण गर्ने योगी सुशोभित हुन्छ, त्यसरी नै ताराहरूबाट चम्किलो भएको आकाशमण्डलमा पूर्ण चन्द्रमा शोभासम्पन्न भएर विराजमान हुन थाले ॥७॥ जसरी ज्ञानीहरू अर्थात् तत्त्वज्ञान प्राप्त गरिसकेका पुरुषहरूले पत्नी, पुत्रादिमा अत्यधिक रूपमा बढिरहेको ममतालाई विस्तार-विस्तार त्याग गरिदिन्छन्, त्यसरी नै नदी-नाला तथा ताल एवं पोखरीहरूको पानीले पनि आफ्नो सतह छोड्दै जान थाल्यो अर्थात् क्रमिक रूपमा पानी घट्न थाल्यो ॥८॥ जसरी आफ्नो साधनमा व्यवधान उत्पन्न भएकाले साधनाको परित्याग गरेका अयोगीहरूको फेरि राग-द्वेष जस्ता क्लेशहरूसँग मिलन हुन्छ, त्यसरी नै पहिले आफैंले परित्याग गरिदिएको पोखरी वा तालको पानीसँग हाँसहरूको फेरि मिलन भएको हुन्छ ॥९॥ जसरी क्रमबद्ध रूपमा महायोग अर्थात् सम्प्रज्ञातयोग समाधि प्राप्त गरेर यति अर्थात् सांसारिक विषयबाट विरक्त भएको योगनिष्ठ सन्यासी निश्चल आत्मा भएको हुन्छ, त्यसरी नै पानी निश्चल अर्थात् स्थिर भएपछि समुद्र पनि पूर्ण रूपमा स्थिर भयो ॥१०॥ जसरी सर्वात्मा एवं परमात्मा श्रीविष्णुलाई जानिसकेपछि अर्थात् उहाँको तत्त्वका विषयमा ज्ञान हासिल गरिसकेपछि मेधावी अर्थात् बुद्धिमान्को अन्तरात्मा शान्त हुन्छ, त्यसरी नै त्यस समयमा सबै जलाशयहरू पूर्ण रूपमा निर्मल एवं स्वच्छ भए ॥११॥ जसरी योगरूपी अग्निका माध्यमद्वारा राग-द्वेषादि अर्थात् शरीरमा उत्पन्न हुने दुःख नष्ट भएपछि योगीहरूको अन्तरात्मा अत्यन्त निर्मल र स्वच्छ हुन्छ। त्यसरी नै शीतको कारकतत्त्व मेघहरूमा विलीन भएपछि आकाश पनि यथार्थ रूपमा स्वच्छ र निर्मल भयो ॥१२॥ जसरी अहङ्कारबाट उत्पन्न भएको अत्यन्त पीडादायक दुःखलाई विवेकले शान्त गराइदिन्छ, त्यसरी नै चन्द्रमाले पनि सूर्यका किरणहरूबाट उत्पन्न भएको तापक्रमलाई शान्त पारिदिए अर्थात् शीतल बनाइदिए ॥१३॥ जसरी संयमले

नभसोऽभ्रान् भुवः पङ्कान् कालुष्यं चाम्भसः शरत्।

इन्द्रियाणीन्द्रियार्थेभ्यः प्रत्याहार इवाहरत् ॥१४॥

प्राणयाम इवाम्भोभिः सरसां कृतपूरकैः।

अभ्यस्यतेऽनुदिवसं रेचकाकुम्भकादिभिः ॥१५॥

विमलाम्बरनक्षत्रे काले चाभ्यागतो व्रजम्।

ददर्शेन्द्रमहारम्भायोद्यतांस्तान् व्रजौकसः ॥१६॥

कृष्णस्तानुत्सुकान् दृष्ट्वा गोपानुत्सवलालसान्।

कौतूहलादिदं वाक्यं प्राह वृद्धान् महामतिः ॥१७॥

कोऽयं शक्रमहो नाम येन वो हर्ष आगत।

प्राह तं नन्दगोपश्च पृच्छन्तमतिसादरम् ॥१८॥

नन्दगोप उवाच

मेघानां पयसां चेशो देवराजः शतक्रतुः।

तेन सञ्चोदिता मेघा वर्षन्त्यम्बुमयं रसम् ॥१९॥

तद्वृष्टिजनितं सस्यं वयमन्ये च देहिनः।

वर्तयामोपयुञ्जानास्तर्पयामश्च देवताः ॥२०॥

क्षीरवत्य इमा गावो वत्सवत्यश्च निर्वृताः।

तेन संवर्द्धितैः शस्यैः पुष्टास्तुष्टा भवन्ति वै ॥२१॥

इन्द्रियहरूलाई उनीहरूका विषयहरूबाट तानेर ल्याउँदछ, त्यसरी नै शरद् ऋतुले आकाशबाट मेघ अर्थात् बादलहरूलाई, पृथ्वीबाट धूलोलाई र पानीबाट फोहोरलाई अलग गराइदिएको थियो ॥१४॥ मानौं पानीबाट पूर्ण रूपमा भरिएका कारणले गर्दा सरोवरहरू पानीले पूर्ण रूपमा भरिएपछि अब स्थिर रहन सुक्ने गरेका कारणले दिन–रात कुम्भक एवं रेचक क्रियाका आधारमा प्राणायामको अभ्यास गरिरहेका छन् ॥१५॥ यसरी अत्यन्त सुन्दर आकाश र स्वच्छ नक्षत्रमय शरद् ऋतु आएपछि त्यसैमध्येको कुनै एक दिन परमात्मा श्रीकृष्णले व्रजका सबै बासिन्दाहरू इन्द्रको पूजा गर्ने तयारीमा अत्यन्त उत्सुकतापूर्वक लागिरहका देख्नुभयो ॥१६॥ परब्रह्म परमात्मा श्रीकृष्णले ती गोप एवं गोपिनीहरू इन्द्रको पूजा गर्ने उमङ्गका कारणले अत्यन्त उत्साहित भइरहेका देखेर कौतुहलपूर्वक आफ्ना अग्रजहरू अर्थात् त्यहाँका वृद्ध गोपहरूसँग सोध्नुभयो ॥१७॥ यो इन्द्र को हो ? जसले गर्दा तपाईंहरूमा अत्यधिक मात्रामा प्रसन्नता भरिएको छ, यसरी अत्यन्त आदरपूर्वक साधेपछि नन्दगोपालले परमात्मा श्रीकृष्णसँग भने अर्थात् स्वयं सर्वज्ञ भए तापनि अनभिज्ञ हुनुभएका श्रीकृष्णलाई सम्झाए ॥१८॥ **नन्दगोपले भने–** जुन देवराज मेघ अर्थात् पानी भएको बादल र पानीका स्वामी रहेका छन्, उनैले मेघहरूलाई पानी वर्षाउनमा अभिप्रेरित गर्दछन्, त्यसपछि मात्र मेघहरूले पानी रूपी रस वर्षाउने कार्य आरम्भ गर्दछन् ॥१९॥ हामी र अन्य सबै शरीर धारण गर्ने जीवहरूले त्यही वर्षाका आधारमा उत्पन्न अन्न तथा अन्य किसिमका खानेकुराहरूको उपभोग गरेर जीवन निर्वाह गर्दछौं तथा त्यही अन्नको प्रयोग गरेर गरिएका यज्ञ–यज्ञादिबाट देवताहरूलाई पनि तृप्त अर्थात् सन्तुष्ट गराउँदछौं ॥२०॥ यी सबै स–साना बाच्छाहरू भएका गाईहरू पनि त्यही वर्षाका आधारमा उत्पन्न भएका एवं बढेका विभिन्न किसिमका घाँसहरू खाएर हृष्टपुष्ट अर्थात् मोटाघाटा भएर त्यसको प्रभावले आफूमा दूधको वृद्धि गराउँछन् र त्यसबाट हामीहरूलाई तृप्त एवं हृष्टपुष्ट बनाउँछन् ॥२१॥ जुन भूमिमा अर्थात्

नासस्या नातृणा भूमिर्न बुभुक्षार्दितो जनः ।

दृश्यते तत्र दृश्यन्ते वृष्टिमन्तो बलाहकाः ॥२२॥

भौममेतत् पयो दुग्धं गोभिः सूर्यस्य वारिदैः ।

पर्जन्यः सर्वलोकस्य भवाय भुवि वर्षति ॥२३॥

तस्मात् प्रावृषि राजानः सर्वे शक्रं मुदा युताः ।

महैः सुरेशमर्चन्ति वयमन्ये च मानवाः ॥२४॥

पराशर उवाच

नन्दगोपस्य वचनं श्रुत्वेत्थं शक्रपूजने ।

कोपाय त्रिदशेन्द्रस्य प्राह दामोदरस्तथा ॥२५॥

न वयं कृषिकर्तारो वाणिज्याजीविनो न च ।

गावोऽस्मद्दैवतं तात! वयं वनचरा यतः ॥२६॥

आन्वीक्षिकी त्रयी वार्त्ता दण्डनीतिस्तथापरा ।

विद्याचतुष्टयं त्वेतत् वार्त्तामत्र शृणुष्व मे ॥२७॥

कृषिर्वणिज्या तद्वत्तु तृतीयं पशुपालनम् ।

विद्या ह्येता महाभाग ! वार्त्ता वृत्तित्रयाश्रया ॥२८॥

कर्षकाणां कृषिर्वृत्तिः पण्यं विपणिजीविनाम् ।

अस्माकं गौः परा वृत्तिर्वार्त्ताभेदैरियं त्रिभिः ॥२९॥

स्थानमा वर्षाद हुन्छ अर्थात् पानी पर्दछ, त्यो स्थानको जमीन कहिल्यै पनि अन्न र घाँसपातबाट रहित हुन सक्दैन र त्यस स्थानमा बस्ने मनुष्यहरूले भोकको पीडा सहनु पर्दैन अर्थात् आनन्दपूर्वक आफ्नो जीवन निर्वाह गरिरहेका हुन्छन् ॥२२॥ पानी बर्षाउने बादल वा मेघका स्वामी इन्द्रले सूर्यका किरणहरूद्वारा शोषण गरिएको पृथ्वीको रसलाई सम्पूर्ण लोकहरूको कल्याणका लागि फेरि पानीको रूपमा पृथ्वीमा वर्षाउँछन्, जसबाट सम्पूर्ण जीवमात्रको कल्याण हुन्छ ॥२३॥ त्यसकारण हामीहरू तथा अन्य सबै मनुष्यहरू एवं राजाहरू पनि अत्यन्त आनन्दपूर्वक वर्षाऋतुका समयमा ती देवताहरूका राजा इन्द्रको यज्ञका माध्यमद्वारा पूजा एवं उपासना गर्न गर्दछौं ॥२४॥ **पराशरजीले भन्नुभयो–** देवराज इन्द्रको पूजाका सम्बन्धमा नन्दगोपका यस किसिमका कुरा सुनेपछि दामोदर श्रीकृष्ण देवेन्द्रलाई अत्यन्त क्रोधित बनाउने लक्ष्य लिएर नन्दगोपसँग भन्नुहुन्छ ॥२५॥ "हे पिताश्री! हामीहरू खेतीपाती गर्ने किसान अथवा व्यापार गर्ने व्यापारी होइनौं, तर हामी वनचर अर्थात् वनमा घुम्ने मात्र हाम्रो पेशा हो । यसैले गाईहरू हाम्रा देवता हुन् हामीहरूले तिनैको पूजा वा उपासना गर्नुपर्दछ, इन्द्रको होइन ॥२६॥ आन्वीक्षिकी अर्थात् तर्कशास्त्र, त्रयी अर्थात् कर्मकाण्ड, वर्ता र दण्डनीति यी चार किसिमका विद्याहरू हुन् । तिनीहरू मध्ये वार्ताका विषयमा मात्र मबाट सविस्तारपूर्वक ध्यान दिएर सुन्नुहोस् ॥२७॥ हे धर्मात्मा! यिनीहरूमध्ये वार्तालाई कृषि अर्थात् खेतीपाती, व्यापार एवं पशुपालन यी तीनोटै वृत्तिहरूको परमआश्रय भएको हुनाले त्रिविध भनिएको हो ॥२८॥ यिनीहरूमध्ये कृषि नाम भएको पेशा छ, त्यो किसानहरूका लागि हो, व्यापारबाट आफ्नो जीवननिर्वाह गर्नेहरूको पेशा वाणिज्य हो र हामीहरूको पशुपालन नै उत्तम पेशा हो । यी तीन किसिमका वार्ताको अन्तरका आधारमा पेशा पनि तीन किसिमकै हुन्छन् ॥२९॥ जुन विद्याका आधारमा जसले आफ्नो जीवननिर्वाह गरिरहेको हुन्छ, त्यही विद्या उसका

**विद्यया यो यया युक्तस्तस्य सा दैवतं महत्।**

**सैव पूज्यार्चनीया च सैव तस्योपकारिका ॥३०॥**

**योऽन्यस्य फलमश्नन् वै पूजयत्यपरं नरः।**

**इह च प्रेत्य चैवासौ तात! नाप्नोति शोभनम् ॥३१॥**

**कृष्यन्ता प्रथिता सीमा सीमान्तञ्च पुनर्वनम्।**

**वनान्ता गिरयः सर्वे ते चास्माकं परा गतिः ॥३२॥**

**न द्वारबन्धावरणा न गृहक्षेत्रिणस्तथा।**

**सुखिनः सकले लोके यथा वै चक्रचारिणः ॥३३॥**

**श्रूयन्ते गिरयश्चामी वनेऽस्मिन् कामरूपिणः।**

**तत्तद्रूपं समास्थाय रमन्ते स्वेषु सानुषु ॥३४॥**

**यदा चैतेऽपराध्यन्ते तेषां ये काननौकसः।**

**तदा सिंहादिरूपैस्तान् घातयन्ति महीधराः ॥३५॥**

**गिरियज्ञस्त्वयं तस्माद् गोयज्ञश्च प्रवर्त्यताम्।**

**किमस्माकं महेन्द्रेण गावः शैलाश्च देवताः ॥३६॥**

लागि महत्त्वपूर्ण देवता अर्थात् इष्टदेवता हुन्छ। त्यसकारण उसले त्यसैको पूजा गर्न उचित हुन्छ। किनकि त्यही विद्याबाट मात्र उसको कल्याण हुन्छ ॥३०॥ हे पिताश्री! जुन व्यक्तिले एउटा व्यक्तिबाट आफ्नो उपकार गराएर, त्यसको अनादर गर्दै अर्कै व्यक्तिको पूजा-उपासना गर्दछ भने त्यो व्यक्तिले वर्तमान अवस्था र भविष्यमा पनि कुनै किसिमको कल्याण प्राप्त गर्न सक्दैन अर्थात् यस्तो कार्य उसका लागि कल्याणदायक हुन सक्दैन ॥३१॥ जहाँ खेतीपाती हुन्छ, त्यसको नाम खेत हो र जमीन नै त्यसको सीमा हो तथा जमीनको सीमा वन एवं वनको सीमा पर्वत हो। यी पर्वतहरू नै हामीहरूका अत्यन्त सर्वोत्कृष्ट गति हुन् ॥३२॥ हामीहरू न त गारो र ढोकाको घेरामा बस्दछौं, तथा न घर र खेतमा मात्र सीमित भएर घुमफिर गर्दछौं। बरु वन एवं पर्वत आदिमा घुमफिर गर्ने हामी चक्रचारी मुनिहरूका जसरी सबै जनसमुदायमा सुखी छौं। जुन मुनिहरू गाडा आदिका माध्यमद्वारा सर्वत्र घुमफिर गरिरहन्छन् एवं जसको कुनै निश्चित ठाउँ हुँदैन, जहाँ साँझ पर्‍यो, त्यही बस्दछन्, यसप्रकारका मुनिहरूलाई "चक्रचारी" भनिन्छ। यिनीहरूको अर्को नाम "सायंगृह" पनि हो। त्यसैले गृहस्थमा रहेका किसानहरूका जसरी इन्द्रको पूजा गर्ने हाम्रो काम होइन ॥३३॥ मलाई ज्ञात हुन आए अनुसार यस वनमा रहेका यी सबै पर्वतहरूले आफ्नो स्वेच्छा अनुसारको स्वरूप धारण गर्दछन्। यिनीहरू आफ्नो चाहना अनुसारको स्वरूप धारण गरेर यस वनमा आ-आफ्ना स्थानमा घुमफिर गर्ने गर्दछन् ॥३४॥ तथा जो यी पर्वतहरूमा निवास गर्ने पुरुष छन्, तिनीहरूले जब यस पर्वतका देवताहरूका समीप (नजिक) कुनै अपराध गर्दछन्, त्यसपछि यी पर्वतका रूपमा रहेका पर्वत देवताहरूले सिंहको स्वरूप धारण गरेर आफूमाथि अपराध गर्नेहरूलाई नष्ट गरिदिन्छन् अर्थात् तिनलाई अपराध अनुसारको सजाय दिन्छन् ॥३५॥ त्यसकारण यो इन्द्र-यज्ञलाई आजदेखि गिरियज्ञका रूपमा प्रवर्द्धन गर्नुपर्दछ अर्थात् इन्द्रयज्ञको परित्याग गरेर गिरियज्ञ आरम्भ गरिदिनुहोस्। इन्द्रको पूजा गर्नाले हामीलाई के प्राप्त हुन्छ? त्यसैले यी गाईहरू एवं पर्वत नै हाम्रा परम देवता अर्थात् इष्टदेवता हुन् ॥३६॥ जसरी मन्त्रयज्ञका आधारमा ब्राह्मणहरू,

मन्त्रयज्ञपरा विप्राः सीतायज्ञाश्च कर्षकाः ।

गिरिगोयज्ञशीलाश्च वयमद्रिवनाश्रयाः ॥३७॥

तस्माद् गोवर्द्धनः शैलो भवद्भिर्विविधार्हणैः ।

अर्च्यतां पूज्यतां मेध्यं पशुं हत्वा विधानतः ॥३८॥

सर्वघोषस्य सन्दोहो गृह्यतां मा विचार्यताम् ।

भोज्यन्तां तेन वै विप्रास्तथा ये चाभिवाञ्छकाः ॥३९॥

तत्रार्चिते कृते होमे भोजितेषु द्विजातिषु ।

शरत्पुष्पकृतापीडाः परिगच्छन्तु गोगणाः ॥४०॥

एतन्मम मतं गोपाः सम्प्रत्याद्रियते यदि ।

ततः कृत्वा भवेत् प्रीतिर्गवामद्रेस्तथा मम ॥४१॥

इति तस्य वचः श्रुत्वा नन्दाद्यास्ते व्रजौकसः ।

प्रीत्युत्फुल्लमुखा विप्र ! साधु साध्वित्यथाब्रुवन् ॥४२॥

शोभनं ते मतं वत्स ! यदेतद्भवतोदितम् ।

तत् करिष्यामहे सर्वं गिरियज्ञः प्रवर्त्यताम् ॥४३॥

पराशर उवाच

तथा च कृतवन्तस्ते गिरियज्ञं व्रजौकसः ।

दधिपायसमांसाद्यैर्ददुः शैलबलिं ततः ॥४४॥

द्विजांश्च भोजयामासुः शतशोऽथ सहस्रशः ।

अन्यानप्यागतानित्थं कृष्णेनोक्तं यथा पुरा ॥४५॥

सीतायज्ञ अर्थात् हलो जोत्दा गरिने यज्ञका आधारमा किसानहरू प्रख्यात भएका छन् , त्यसरी नै पर्वत र वनको आश्रयमा निवास गर्ने हामीहरू पर्वत गोयज्ञकर्ताका रूपमा प्रख्यात भएका छौं ॥३७॥ त्यसकारण हामीहरूले विभिन्न विधिहरूबाट गोवर्द्धन पर्वतको मात्र पूजा र आराधना गर्नुपर्दछ। शास्त्रीय विधि अनुसार पवित्र पशुहरूको बलि दिएर पनि हामीहरूले उनैको पूजा एवं उपासना गर्नुपर्दछ ॥३८॥ आज सम्पूर्ण व्रजमा उत्पादन भएको दूध एकै ठाउँमा जम्मा गर्न लगाउनुहोस्, यसमा कुनै विचार-विमर्श नगर्नुहोस्, त्यो दूध आदि पदार्थहरूबाट ब्राह्मण र याचकहरूलाई भोजन गराइदिनुहोस्, जसबाट सन्तुष्ट हुन सकुन् ॥३९॥ पर्वतराज गोवर्धनको पूजा र होम गर्ने कार्य सकिएपछि ब्राह्मणहरूलाई भोजन गराइसकेपछि शरद्ऋतुमा अत्यन्त सुशोभित भएका फूलहरूबाट सुसज्जित भएर गाईहरूले स्वेच्छापूर्वक घुमफिर गरून् ॥४०॥ हे गोपवृन्द ! यो मेरो सर्वोत्कृष्ट मान्यता हो र यदि तपाईंहरूले यसको आदर गर्नुभयो भने गोवर्धन पर्वत र गाईहरू अत्यन्त प्रसन्न एव आनन्दित हुनेछन् ॥४१॥ हे ब्राह्मणश्रेष्ठ! नन्द आदि व्रजमा निवास गर्ने सबै परमात्मा श्रीकृष्णका यस प्रकारका कुराहरू सुनेपछि उनीहरूले अत्यन्त प्रसन्नताबाट प्रफुल्लित हुँदै "धन्यवाद-धन्यवाद" भनेर उहाँको प्रशंसा गर्न थाले ॥४२॥ **त्यसपछि नन्दगोप आदिले भने**- हे वत्स ! तिमीले जे बतायौ, त्यो अत्यन्त नियमसङ्गत छ, अब हामीहरू त्यसैका अनुसार गोवर्धन पर्वतको यज्ञ गर्ने परम्पराको प्रवर्द्धन गर्ने कार्य आरम्भ गर्दछौं ॥४३॥ **पराशरजीले भन्नुभयो**- त्यसपछि सबै व्रजवासीहरूले परमात्मा श्रीकृष्णको मान्यताका आधारमा पर्वतयज्ञ आरम्भ गरे एवं पर्वतलाई दही, पायस (खीर) एवं मासु आदिको बलि चढाए ॥४४॥ परमात्मा श्रीकृष्णले बताउनु भए अनुसार गोपहरू सबैले हजारौं ब्राह्मणहरू र सामुन्ने आएका अर्थात् अतिथि बनेकाहरूलाई अत्यन्त प्रसन्नतापूर्वक भोजन गराए ॥४५॥ त्यसपछि अत्यन्त श्रद्धा र

गावः शैलं ततश्चक्रुरर्चितास्ताः प्रदक्षिणम्।

वृषभाश्चापि नर्दन्तः सतोया जलदा इव ॥४६॥

गिरिमूर्द्धनि कृष्णोऽपि शैलोऽहमिति मूर्त्तिमान्।

बुभुजेऽन्नं बहु तदा गोपवर्याहृतं द्विज ॥४७॥

अन्येन कृष्णो रूपेण गोपैः सह गिरेः शिरः।

अधिरुह्यार्चयामास द्वितीयामात्मनस्तनुम् ॥४८॥

अन्तर्द्धानं गते तस्मिन् गोपा लब्ध्वा ततो वरान्।

कृत्वा गिरिमहं गोष्ठं निजमभ्याययुः पुनः ॥४९॥

भक्तिपूर्वक पूजा गरिएका गाईहरू र मेघका जसरी गर्जना गर्ने साँढेहरूले पनि व्रजका बासिन्दाहरूसँगै गोवर्द्धन पर्वतको परिक्रमा गरे ॥४६॥ हे ब्राह्मणश्रेष्ठ! त्यसपछि पर्वतको शिखरमा परमात्मा श्रीकृष्णले म नै पर्वत हुँ भन्दै एउटा अनौठो किसिमको स्वरूप धारण गर्नुभयो र गोपहरूद्वारा समर्पण गरिएको अन्नको भोजन गर्न थाल्नुभयो ॥४७॥ र त्यसै समयमा भगवान् श्रीकृष्णले आफ्नो बालस्वरूपमा रहेर अन्य सबै गोपहरूसँगै पर्वतराजको टुप्पामा चढेर आफ्नै दोस्रो स्वरूपको पूजा एवम् आराधना गर्नुभयो ॥४८॥ त्यसपछि पर्वतराज अन्तर्ध्यान भएपछि गोपहरू आफ्नो मनोकामना अनुसारको वरदान प्राप्त गरेर गिरियज्ञ समाप्त भएपछि फर्किएर आफ्ना–आफ्ना गोठहरूमा आए ॥४९॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे दशमोऽध्यायः।

ॐ

## एकादशोऽध्यायः

## अध्याय - ११

### "इन्द्रस्य क्रोधः, श्रीकृष्णस्य गोवर्द्धनपर्वतधारणञ्च"

(इन्द्र क्रोधित तथा भगवान् श्रीकृष्णद्वारा गोवर्द्धन पर्वत धारण)

पराशर उवाच

**महे प्रतिहते शक्रो मैत्रेयातिरुषान्वितः ।**

**संवर्तकं नाम गणं तोयदानामथाब्रवीत् ॥१॥**

**भो भो मेघाः निशम्यैतद् वचनं वदतो मम ।**

**आज्ञानन्तरमेवाशु क्रियतामविचारितम् ॥२॥**

**नन्दगोपः सुदुर्बुद्धिर्गोपैरन्यैः सहायवान् ।**

**कृष्णाश्रयबलाध्मातो महभङ्गचीकर ॥३॥**

**आजीवो यः परस्तेषां याश्च गोपत्वकारणम् ।**

**ता गावो वृष्टिवातेन पीड्यन्तां वचनान्मम ॥४॥**

**अहमप्यद्रिशृङ्गाभं तुङ्गमारुह्य वारणम् ।**

**साहाय्यं वः करिष्यामि वार्यम्बूत्सर्गयोजितम् ॥५॥**

पराशर उवाच

**इत्याज्ञप्ताः सुरेन्द्रेण मुमुचुस्ते बलाहकाः।**

**वातवर्षं महाभीममभावाय गवां द्विज ॥६॥**

**ततः क्षणेन धरणी ककुभोऽम्बरमेव च ।**

**एकं धारामहासारपूरणेनाभवन्मुने ॥७॥**

**विद्युल्लताकशाघातत्रस्तैरिव घनैर्घनम् ।**

**नादापूरितदिक्चक्रैर्धारासारमपात्यत ॥८॥**

**पराशरजीले भन्नुभयो** - हे मैत्रेय! यसरी आफ्ना लागि गरिँदै आएको यज्ञ पूर्ण रूपमा बन्द भएपछि इन्द्रले अत्यन्त क्रोधित हुँदै संवर्तक नाम भएका मेघहरूलाई भने ...॥१॥ हे मेघहरू! म तिमीहरूलाई आज्ञा दिन लागिरहेको छु, मेरो आज्ञा सुन। मैले तिमीहरूलाई जे जस्तो आज्ञा दिन्छु, त्यसका विषयमा कुनै किसिमको विचारविमर्श नगरी तत्कालै त्यो कार्य कार्यान्वयनमा ल्याइहाल्नू अर्थात् त्यो काम अत्यन्त चाँडै गरिहाल्नू ॥२॥ अत्यन्त दुर्बुद्धि भएका नन्दगोपले कृष्णको आश्रयका आधारमा उनले भनेका कुरामा पूर्ण रूपले हर्षपूर्वक सहमति जनाउँदै अन्य सबै गोपहरूसहित सबै सम्मिलित भएर मेरो यज्ञ अर्थात् पूजा आराधना गर्न छाडिदिए ॥३॥ त्यसकारण ती मूर्ख गोपहरूको जीवननिर्वाहको कारकतत्व र गोपत्वको सारका रूपमा जुन गाईहरू रहेका छन्, ती गाईहरूलाई मेरो आज्ञा अनुसार तिमीहरूले वर्षा र वायुका माध्यमद्वारा अत्यन्त पीडित गराइदेओ ॥४॥ म पनि त्यस पर्वतका अगाडि आफ्नो त्यो पर्वतभन्दा अग्लो ऐरावत हात्तीमा चढेर तिमीहरूले वायु र पानी छोड्दाका अवस्थामा तिमीहरूलाई सहयोग गर्नेछु अर्थात् तिमीहरूलाई मेरो सहयाता उपलब्ध भइरहने छ ॥५॥ **पराशरजीले भन्नुभयो**- हे ब्राह्मणश्रेष्ठ! देवराज इन्द्रले यस किसिमको आज्ञा दिएपछि मेघहरूले गोपहरूका गाईहरूको पूर्ण रूपमा विनाश गर्नका लागि अत्यन्त भयानक हावाहुरीका साथ पानी वर्षाउन आरम्भ गरिदिए ॥६॥ हे मुनीश्वर! त्यसपछि एक क्षणमा नै ती मेघहरूद्वारा वर्षाइएको मुसलधारे पानीका प्रभावले पृथ्वी, आकाश र सबै दिशाहरू एक समान भए अर्थात् यी सबै अवस्था छुट्याउन सक्ने अवस्था रहेन, सबै जलमय भए ॥७॥ मेघहरूको समूह पूर्ण शक्तिबाट चम्किएको बिजुलीरूपी कोर्राको प्रहारबाट अत्यन्त भयभीत भएकाले आफ्नो आवाजले सम्पूर्ण दिशाहरूलाई पूर्ण रूपमा व्यस्त गर्दै आरीबा खन्याए जसरी नै पानी वर्षाउन थाले ॥८॥ यसप्रका

अन्धकारीकृते लोके वर्षद्भिरनिशं घनैः।

अधश्चोर्ध्वञ्च तिर्यक च जगदाप्यमिवाभवत् ॥९॥

गावस्तु तेन पतता वर्षवातेन वेगिना।

धूताः प्राणान् जहुःसन्नत्रिकसक्थिशिरोधराः॥१०॥

क्रोडेन वत्सानाक्रम्य तस्थुरन्या महामुने।

गावो विवत्साश्च कृता वारिपूरेण चापराः ॥११॥

वत्साश्च दीनवदनाः पवनाकम्पिकन्धराः।

त्राहि त्राहीत्यल्पशब्दाः कृष्णमूचुरिवातुराः ॥१२॥

ततस्तद् गोकुलं सर्वं गो–गोपी–गोपसङ्कुलम्।

अतीवार्तं हरिर्दृष्ट्वा मैत्रेयाचिन्तयत् तदा ॥१३॥

एतत् कृतं महेन्द्रेण मोहभङ्गविरोधिना।

तदेतदखिलं गोष्ठं त्रातव्यमधुना मया ॥१४॥

इममद्रिमहं धैर्यादुत्पाट्योरुशिलाघनम्।

धारयिष्यामि गोष्ठस्य पृथुच्छत्रमिवोपरि ॥१५॥

पराशर उवाच

इति कृत्वा मतिं कृष्णो गोवर्द्धनमहीधरम्।

उत्पाट्यैककरेणैव धारयामास लीलया ॥१६॥

गोपांश्चाह जगन्नाथः समुत्पाटितभूधरः।

विशध्वमत्र त्वरिताः कृतं वर्षनिवारणम् ॥१७॥

पानी भएका बादलहरू निरन्तर रूपमा अर्थात् एक छिन पनि नरोकिइकन वर्षिरहेका कारणले सम्पूर्ण संसार पूर्ण रूपमा अन्धकारमय भयो एवं तल,माथि तथा सबैतिरबाट सबै दिशाहरू पूर्ण रूपमा जलमग्न भए ॥९॥ त्यो अत्यन्त तेज गतिको वायुमय वर्षाका प्रभावले गाईहरूको कमर, जाँघ अर्थात् तिघ्राको चाक्लो भाग र गला वा गर्दन आदि निष्क्रिय भए र काम्दाकाम्दै आफ्नो प्राण परित्याग गर्ने अवस्थामा पुगे अर्थात् मूछित भए ॥१०॥ हे मुनिश्वर! कति गाईहरूले आफ्ना बाच्छाहरूलाई आफ्नै शरीरको ओतमा राखेर बसेका थिए र कयौं गाईहरू पानीको वेगमा आफ्ना बाच्छाहरू बगेका कारणले सन्तान विहीन भएका थिए ॥११॥ अत्यन्त पीडित भएका बाच्छाहरूको गला वायुका प्रभावले काम्न थाले र ती सबैले अत्यन्त भयभीत स्वरमा "बचाउ, बचाउ" भन्दै परमात्मा श्रीकृष्णलाई पुकार्न थाले अर्थात् कृष्णसँग "रक्षा गर, रक्षा गर" भनेर सहयोग माग्न थाले ॥१२॥ हे मैत्रेय! त्यस समयमा गाई, गोपिनी र गोपहरू सहित सम्पूर्ण गोकुल अत्यन्त व्याकुल र भयभीत भएको देखेर परब्रह्म परमात्मा श्रीकृष्ण विचार गर्न थाल्नुभयो ॥१३॥ उनका निमित्त यज्ञ नगरिएकाले अत्यन्त क्रोधित भएका देवराज इन्द्रले यो कार्य गरेका हुन्। यस्तो अवस्थामा मैले अनिवार्य रूपमा सम्पूर्ण गोकुलको रक्षा गर्नुपर्दछ ॥१४॥ अब म अत्यन्त धैर्यपूर्वक यो शिलामय अर्थात् ढुङ्गा भएको पवर्तलाई उखेलेर अर्थात् उचालेर त्यसलाई अत्यन्त ठूलो छाताका जसरी गोठमाथि धारण अर्थात् स्थापना गर्दछु, जसले गर्दा गोकुलको रक्षा होस् ॥१५॥ **पराशरजीले भन्नुभयो–** परमात्मा श्रीकृष्णले यसरी विचार गरेर गोवर्धन पर्वतलाई उचाल्नुभयो र त्यसलाई आफ्नो लीलाका आधारमा आफ्नो हातको एउटा औंलाले छातालाई जसरी नै थाम्नुभयो ॥१६॥ पर्वतलाई माथि उचालेर छाताजस्तो बनाएपछि परमात्मा श्रीजगन्नथले मन्दमुस्कान सहित गोप–गोपिनीहरूसँग भन्नुभयो, तपाईंहरू पूर्ण रूपमा निर्भय भएर यो पर्वतको ओडारमा आउनुहोस्, मैले यो अत्यधिक वर्षाबाट बच्ने व्यवस्था मिलाएको छु ॥१७॥ यो मैले बनाएको वायुसम्म

सुनिर्वातेषु देशेषु यथाजोषमिहास्यताम्।

प्रविश्यतां न भेतव्यं गिरिपाताच्च निर्भयैः॥१८॥

इत्युक्तास्ते ततो गोपा विविशुर्गोधनैः सह।

शकटारोपितैर्भाण्डैर्गोप्यश्चासारपीडिताः ॥१९॥

कृष्णोऽपि तं दधारैव शैलमत्यन्तनिश्चलम्।

व्रजौकवासिभिर्हर्षविस्मिताक्षैर्निरीक्षितः ॥२०॥

गोपगोपीजनैर्हृष्टैः प्रीतिविस्तारितेक्षणैः।

संस्तूयमानचरितः कृष्णः शैलमधारयत्॥२१॥

सप्तरात्रं महामेघा ववर्षुर्नन्दगोकुले।

इन्द्रेण चोदिता विप्र! गोपानां नाशकारिणः॥२२॥

ततो धृते महाशैले परित्राते च गोकुले।

मिथ्याप्रतिज्ञो बलभिद् वारयामास तान् घनान्॥२३॥

व्यभ्रे नभसि देवेन्द्रे वितथात्मवचस्यथ।

निष्क्रम्य गोकुलं सर्वं स्वस्थाने पुनरागतम्॥२४॥

मुमोच कृष्णोऽपि तदा गोवर्द्धनमहाचलम्।

स्वस्थाने विस्मितमुखैर्दृष्टस्तैस्तु व्रजौकसैः ॥२५॥

नभएको ठाउँमा आएर अत्यन्त आनन्दपूर्वक एवं पूर्ण रूपमा निर्भय अर्थात् भयरहित भएर आउनुहोस् र बस्नुहोस्, यो पर्वत खस्दैन। त्यसैले पर्वत खस्छ कि भन्ने चिन्ता नलिनुहोस् ॥१८॥ परब्रह्म परमात्मा श्रीकृष्णले यसरी बताइसकेपछि हावाहुरी र मुसलधारे पानीबाट अत्यन्त पीडित भएका गोप र गोपीहरूले आफ्ना अत्यन्त आवश्यकीय भाँडाकुँडा गाडामा राखेर गाईहरू सहित पर्वतको ओडारमा प्रवेश गरे ॥१९॥ यसरी ओडरभित्र प्रवेश गरिसकेपछि व्रजका वासिन्दाहरू हर्षित र आश्चर्यचकित भएर एकाग्रतापूर्वक अर्थात् एकनास रूपमा हेरिरहेकाले परमात्माले पनि त्यस पर्वतलाई निश्चल अर्थात् अटल भावपूर्वक धारण गरिरहनु भयो अर्थात् उचालिरहनु भयो॥२०॥ हर्ष र प्रेमका प्रभावले आश्चर्यचकित आँखा भएका गोप र गोपिनीहरूले जसको प्रशंसा गरिरहेका थिए, उहाँ परब्रह्म परमात्मा श्रीकृष्णले गोवर्धन पर्वतलाई थामिरहनु भएको थियो ॥२१॥ हे ब्राह्मणश्रेष्ठ! गोपहरूको विनाश गराउन पानी भएका बादलहरूले इन्द्रद्वारा अभिप्रेरित भएर निरन्तर रूपमा सात रातसम्म अत्यन्त भयानक वर्षा गराइरहे अर्थात् एकक्षण पनि पानी रोकिएन॥२२॥ परब्रह्म परमात्मा श्रीकृष्णले गोवर्धन पर्वतलाई उचालेर गोकुलको पूर्ण रूपमा रक्षा गरिदिनुभएपछि आफ्नो प्रतिज्ञा असत्य प्रमाणित भएकाले इन्द्रले पानी भएका बादलहरूलाई वर्षा नगराउने आज्ञा दिए॥२३॥ आकाश पूर्ण रूपमा बादलविहीन भएपछि अर्थात् अत्यन्त सफा र स्वच्छ भएपछि इन्द्रका वचन असत्य प्रमाणित भए र सबै गोकुलवासीहरू त्यहाँबाट निस्किएर फेरि आ-आफ्ना स्थानहरूमा गए॥२४॥ त्यसपछि आश्चर्यचकित भएका गोकुलवासीहरूले हेर्दाहेर्दै परब्रह्म परमात्मा श्रीकृष्णले पनि त्यो गोवर्धन पर्वतलाई पहिलेका स्थानमा र पहिलकै जसरी स्थापित गरिदिनु भयो अर्थात् राखिदिनुभयो॥२५॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे एकादशोऽध्यायः।

ॐ

## द्वादशोऽध्यायः

## अध्याय – १२

### "इन्द्रस्यागमनम् इन्द्रेण श्रीकृष्णस्य अभिषेकश्च"

(इन्द्रको गोवर्द्धन पर्वतमा आगमन तथा इन्द्रद्वारा श्रीकृष्णको अभिषेक)

**पराशर उवाच**

**धृते गोवर्द्धने शैले परित्राते च गोकुले।**
**रोचयामास कृष्णस्य दर्शनं पाकशासनः॥१॥**
**सोऽभिरुह्य महानागमैरावतममित्रजित्।**
**गोवर्द्धनगिरौ कृष्णं ददर्श त्रिदशेश्वर॥२॥**
**चारयन्तं महवीर्यं गावो गोपवपुर्धरम्।**
**कृत्स्नस्य जगतो गोपं वृतं गोपकुमारकैः॥३॥**
**गरुडञ्च ददर्शोच्चैरन्तर्द्धानगतं द्विज।**
**कृतच्छायं हरेर्मूर्ध्नि पक्षाभ्यां पक्षिपुङ्गवम्॥४॥**
**अवरुह्य स नागेन्द्रादेकान्ते मधुसूदनम्।**
**शक्रः सस्मितमाहेदं प्रीतिविस्फारितेक्षणः॥५॥**

**इन्द्र उवाच**

**कृष्ण! कृष्ण! शृणुष्वेदं यदर्थमहमागतः।**
**त्वत्समीपं महाभाग! नैतच्चिन्त्यं त्वयान्यथा॥६॥**
**भारावतारणार्थाय पृथिव्याः पृथिवीतलम्।**
**अवतीर्णोऽखिलाधारस्त्वमेव परमेश्वर॥७॥**
**महभङ्गविरुद्धेन मया गोकुलनाशकाः।**
**समादिष्य महामेघास्तैश्चेदं कदनं कृतम्॥८॥**

**पराशरजीले भन्नुभयो–** परमात्मा श्रीकृष्णाले यसरी गोवर्धन पर्वतलाई उचालेर गोकुलको रक्षा गर्नुभएपछि देवराज इन्द्रका मनमा उहाँको दर्शन गर्ने कामना उत्पन्न भयो ॥१॥ त्यसकारण शत्रुविजयी देवराज इन्द्र आफ्नो महागज नाम भएको ऐरावत हात्तीमा चढेर गोवर्धन पर्वतमा आएर परब्रह्मपरमात्माको दर्शन गरे ॥२॥ त्यहाँ देवराज इन्द्रले सम्पूर्ण जगत्का रक्षक एवं अधिपति परब्रह्मपरमात्मा श्रीकृष्णलाई गोपको शरीर धारण गरेर एवं गोपकुमारहरूबाट पूर्ण रूपमा घेरिएर गाईहरू चराइरहनुभएको देखे ॥३॥ हे ब्राह्मणश्रेष्ठ! त्यसपछि देवराज इन्द्रले पक्षीहरूमा सर्वोत्तम गरुडले पूर्ण रूपमा अदृश्यावस्थामा रहेर आफ्ना पखेटाहरूद्वारा परब्रह्म परमात्माको शिरमा छायाँ परिरहेको अर्थात् सूर्यको प्रकाशलाई उहाँको शरीरमा पर्नबाट रोकिरहेको देखे ॥४॥ त्यसपछि आफ्नो ऐरावत हात्तीबाट ओर्लिएर प्रसन्नताका कारणले प्रफुल्लित आँखा भएका देवराज इन्द्रले एकान्तमा केही मुस्कुराउँदै परब्रह्म परमात्मा श्रीमधुसूदनसँग भने...॥५॥ **इन्द्रले भने–** हे कृष्ण!म जुन लक्ष्य लिएर हजुरका नजिकमा आएको छु, त्यसका सम्बन्धमा सुन्नुहोस्। हे महाभाग! यस विषयलाई हजुरले अन्यथा नसोचिदिनुहोस्॥६॥ हे सम्पूर्ण संसारका परम आधार अथवा आश्रय परमेश्वर! हजुरले यो पृथ्वीको भारको विनाश गर्नका लागि अर्थात् संसारमा अत्यधिक रूपमा बढिरहेका अन्याय र अत्याचारको विनाश गरेर धर्मको स्थापना गर्नका लागि पृथ्वीमा अवतार लिनुभएको हो॥७॥ पृथ्वीमा आफ्ना लागि गरिदैं आएको यज्ञ रोकिएपछि अत्यन्त क्रोधित भएको मैले गोकुलको पूर्ण रूपमा विनाश गराइदिने लक्ष्य लिएर पानीले पूर्ण रूपमा भरिएका बालदहरूलाई पानी बर्षाउन आज्ञा दिएको थिएँ एवं उनीहरूले यस किसिमको पीडा दिए॥८॥

त्रातास्तात! त्वया गावः समुत्पाट्य महागिरिम्।

तेनाहं तोषितो वीर! कर्मणात्यद्भुतेन ते ॥९॥

साधितं कृष्ण देवानामहं मन्ये प्रयोजनम्।

त्वयायमद्रिप्रवरः करेणैकेन यद्धृतः ॥१०॥

गोभिश्च चोदितः कृष्ण! त्वत्सकाशमिहागतः।

त्वया त्राताभिरत्यर्थं युष्मत्सत्कारकारणात् ॥११॥

स त्वां कृष्णाभिषेक्ष्यामि गवां वाक्यप्रचोदितः।

उपेन्द्रत्वे गवामिन्द्रो गोविन्दस्त्वं भविष्यसि ॥१२॥

अथोपवाह्यादादय घण्टामैरावताद् गजात्।

अभिषेकं तया चक्रे पवित्रजलपूर्णया ॥१३॥

क्रियमाणेऽभिषेके तु गावः कृष्णस्य तत्क्षणत्।

प्रस्रवोद्भूतदुग्धार्द्रां सद्यश्चक्रुर्वसुन्धराम् ॥१४॥

अभिषिच्य गवां वाक्याद् देवेन्द्रो वै जनार्दनम्।

प्रीत्या सप्रश्रयं कृष्णं पुनराह शचीपतिः ॥१५॥

गवामेतत् कृतं वाक्यं तथान्यदपि मे शृणु।

यद् ब्रवीमि महाभाग! भारावतरणेच्छया ॥१६॥

ममांशः पुरुषव्याघ्रः पृथायां पृथिवीतले।

अवतीर्णोऽर्जुनो नाम स रक्ष्यो भवता सदा ॥१७॥

हे परमात्मा! हजुरले गोवर्धन पर्वतलाई उचालेर सम्पूर्ण गोपहरू तथा गाईहरूको रक्षा गर्नुभयो अर्थात् तिनीहरूलाई बचाउनुभयो। हजुरको यो अद्भुत कार्यबाट म अत्यन्त प्रसन्न भएको छु ॥९॥ हे कृष्ण! हजुरले जुन आफ्नो एक हातले गोवर्धन पर्वतलाई उठाउनुभयो, मेरो मान्यतामा यसबाट देवताहरूको प्रयोजन सिद्ध भइसकेको छ भन्ने लाग्यो, मेरो मान्यतामा यसबाट देवताहरूको प्रयोजन सिद्ध भइसकेको छ भन्ने लाग्दछ ॥१०॥ हे कृष्ण! म कामधेनु आदि गाईहरूबाट यथार्थ रूपमा अभिप्रेरित भएर हजुरको सत्कार गर्ने कामना भएकाले हजुरका नजिकमा आएको हुँ। किनकि हजुरले गोवर्धन पर्वत उचालेर गाईहरूको रक्षा गर्नुभएको छ ॥११॥ हे कृष्ण! यस समयमा म गौमाताहरूको आज्ञा अनुसार हजुरलाई उपेन्द्रका पदमा अभिषेक गर्दछु। हजुर गाईहरूको इन्द्र हुनुहुन्छ, त्यसकारण हजुरको नाम 'गोविन्द' पनि हुनेछ ॥१२॥ त्यसपछि शचीपति इन्द्रले आफ्नो अत्यन्त उत्तम वाहन ऐरावत हात्तीका घाँटीमा झुण्डाइएको घण्टा निकालेर त्यसलाई पवित्र अर्थात् शुद्ध पानीले पूर्ण बनाएर त्यसबाट श्रीकृष्णलाई अभिषेक गरे ॥१३॥ परमात्मा श्रीकृष्णको अभिषेक भइरहेको अवस्थामा सम्पूर्ण गाईहरूले आ–आफ्नो स्तनबाट अर्थात् थुनबाट निस्किएको दूधबाट त्यसै समयमा पृथ्वीलाई भिजाइदिए ॥१४॥ यसरी गाईहरूद्वारा बताइएअनुसार परब्रह्म परमात्मा श्रीजनार्दनलाई उपेन्द्रको पदमा अभिषेक गरिसकेपछि शीचपति इन्द्रले फेरि अत्यन्त प्रेमपूर्वक र विनम्रतापूर्वक परमात्मा श्रीजनार्दनसँग भने ...॥१५॥ हे महाभाग! यो मैले गाईहरूको वचन पूर्ण गरिदिएको हो। अब पृथ्वीको भार विनाश गर्ने इच्छाले म हजुरसँग जे भन्ने लागिरहेको छु अर्थात् प्रार्थना गर्न लागिरहेको छु, त्यो सुनिदिनुहोस् ॥१६॥ हे पुरुषश्रेष्ठ! पृथ्वीको भार निवारण गर्नका लागि मेरो अंशले पृथा अर्थात् कुन्तीका गर्भबाट जन्म लिएको छ र उसको नाम अर्जुन हो। हजुरले सधैं त्यसको रक्षा गरिदिनुहोला ॥१७॥ हे मधुसूदन! हजुरको पृथ्वीको भारहरणरूपी अर्थात्

भारावतरणे साह्यं स ते वीर! करिष्यति।
स रक्षणीयो भवता यथात्मा मधुसूदन ॥१८॥

श्री भगवानुवाच

जानामि भारते वंशे जातं पार्थं तवात्मजम्।
तमहं पालयिष्यामि यावदस्मि महीतले ॥१९॥
यावन्महीतले शक्र! स्थास्याम्यहमरिन्दम।
न तावदर्जुनं कश्चिद् देवेन्द्र! युधि जेष्यति ॥२०॥
कंसो नाम महाबाहुर्दैत्योऽरिष्टस्तथापरः।
केशी कुवलयापीडो नरकाद्यास्तथापरे ॥२१॥
हतेषुतेषु देवेन्द्र! भविष्यति महाहवः।
तत्र विद्धि सहस्राक्ष भारावतरणं कृतम् ॥२२॥
स त्वं गच्छ न पुत्रार्थे सन्तापं कर्तुमर्हसि।
नार्जुनस्य रिपुः कश्चिन्ममाग्रे प्रभविष्यति ॥२३॥
अर्जुनार्थे त्वहं सर्वान् युधिष्ठिरपुरोगमान्।
निवृत्ते भारते युद्धे कुन्त्यै दास्याम्यविक्षतान् ॥२४॥

पराशर उवाच

इत्युक्तः सम्परिष्वज्य देवराजो जनार्दनम्।
आरुह्यैरावतं नागं पुनरेव दिवं ययौ ॥२५॥
कृष्णोऽपि सहितो गोभिर्गोपालैश्च पुनर्व्रजम्।
आजगामाथ गोपीनां दृष्टिपूतेन वर्त्मना ॥२६॥

विनाश गर्ने कार्यहरूमा अर्जुनले सधैं हजुरलाई सहयोग गर्नेछन्। त्यसकारण हजुरले आफ्नो रक्षा गरे जसरी नै अर्जुनको पनि रक्षा गर्नुहोला ॥१८॥ **भगवान्ले भन्नुभयो**–भरतवंशमा तपाईंका पुत्ररत्न अर्जुन उत्पन्न भएको कुरा म जान्दछु। म जबसम्म पृथ्वीमा रहन्छु, त्यस समयसमम म अर्जुनको रक्षा र पालन पोषण गर्नेछु ॥१९॥ हे शत्रुविनाशक इन्द्र! म जुन समयसम्म पृथ्वीमा निवास गर्दछु, त्यस समयसम्म सम्पूर्ण पृथ्वीमा अर्जुनलाई पराजित गर्ने अर्थात् हराउने सामर्थ्य भएको पुरुष कोही पनि हुनेछैन ॥२०॥ हे देवेन्द्र! विशाल भुजाहरू अर्थात् अत्यन्त बलवान् हातहरू भएको कंस नाम भएको दैत्य, अरिष्टासुर, कुवलयापीड, केशी र नरकासुर आदि तथा अन्य सबै असुरहरूको पूर्ण रूपमा विनाश भएपछि पृथ्वीमा एउटा अत्यन्त भयानक संग्राम हुनेछ जसलाई महाभारतको युद्धका नामबाट सम्बोधन गरिनेछ। हे सहस्रलोचन! त्यसै संग्राममा मैले पृथ्वीको भार हरण गर्नेछु अर्थात् पृथ्वीमा पूर्ण रूपमा धर्मको स्थापना गर्नेछु ॥२१-२२॥ अब तपाईं प्रसन्न भएर जानुहोस्, आफ्नो पुत्र अर्जुनका लागि तपाईंले कुनै किसिमको चिन्ता गर्नुपर्दैन। म पृथ्वीमा रहँदाका समयसम्म कसैले पनि अर्जुनमाथि विजय प्राप्त गर्न सक्नेछैन ॥२३॥ म अर्जुनका लागि नै अत्यन्त भयानक महाभारतको युद्ध समाप्त भएपछि युधिष्ठिर आदि सबैलाई अक्षत अर्थात् नछुट्टिएको शरीरसहित कुन्तीलाई दिनेछु ॥२४॥ **पराशरजीले भन्नुभयो** –परमात्मा श्रीकृष्णले यसरी बताएपछि देवराज इन्द्र जनार्दनलाई अङ्कमाल गरेर आफ्नो ऐरावत हात्तीमा सवार भएर फेरि स्वर्गलोकमा गए ॥२५॥ त्यसपछि परब्रह्म परमात्मा श्रीकृष्ण पनि गोपिनीहरूको दृष्टिबाट अत्यन्त पवित्र भएको मार्गबाट गोपकुमारहरू र गाईहरूसँग गोकुलमा फर्किनुभयो ॥२६॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे द्वादशोऽध्यायः।

ॐ

## त्रयोदशोऽध्यायः

## अध्याय - १३

### "गोपानां श्रीकृष्णप्रभाववर्णनम्, गोपीभिः सह तस्य रासक्रीडा च"

(गोपहरूद्वारा भगवान् श्रीकृष्णको प्रभावको वर्णन तथा भगवान्द्वारा गोपीनिहरूसँग रासलीला)

पराशर उवाच

गते शक्रे तु गोपालाः कृष्णमक्लिष्टकारिणम्।

ऊचुः प्रीत्या धृतं दृष्ट्वा तेन गोवर्द्धनाचलम् ॥१॥

वयमस्मान्महाबाहो! भगवन् महतो भयात्।

गावश्च भवता त्राता गिरिधारणकर्मणा ॥२॥

बालक्रीडेयमतुला गोपालत्वं जुगुप्सितम्।

दिव्यञ्च कर्म भवतः किमेतत् तात! कथ्यताम् ॥३॥

कालियो दमितस्तोये प्रलम्बो विनिपातितः।

धृतो गोवर्द्धनश्चायं शङ्कितानि मनांसि नः ॥४॥

सत्यं सत्यं हरेः पादौ शपामाऽमितविक्रम।

यथा त्वद्वीर्यमालोक्य न त्वां मन्यामहे नरम् ॥५॥

प्रीतिः सस्त्रीकुमारस्य व्रजस्य तव केशव।

कर्म चेदमशक्यं यत् समस्तैस्त्रिदशैरपि ॥६॥

**पराशरजीले भन्नुभयो–** इन्द्र फर्किएर स्वर्गलोकमा गइसकेपछि परमात्मा श्रीकृष्णले कुनै किसिमको पीडा अनुभवसम्म नगरी अत्यन्त आनन्दपूर्वक गोवर्धन पर्वतलाई उठाएको अर्थात् उचालेको देखेर गोपालहरूले अत्यन्त प्रेमपूर्वक उहाँसँग भन्न थाले ॥१॥ हे महाबाहो! आज हजुरले गोवर्धन पर्वतलाई उचालेर हामीलाई र गाईहरूलाई अत्यन्त भयानक त्रासदीबाट बचाउनु भयो अर्थात् हामीलाई त्यो डरलाग्दो अवस्थाबाट मुक्त गराउनुभयो ॥२॥ हजुरको यो अतुलनीय अर्थात् अनुपम बाललीला र यस किसिमको अत्यन्त दिव्य कर्म एवं निन्दनीय गोकुलमा हजुरको जन्म यो सबै कसरी सम्भव भयो? हे तात! (आदरणीय व्यक्ति वा मान्यजन) त्यसका विषयमा हामीहरूलाई बताइदिनुहोस् ॥३॥ हजुरले यमुमाजीको पानीमा प्रवेश गरेर कालियनागको दमन गर्नुभयो, प्रलम्ब नाम भएको असुरको पूर्ण रूपमा विनाश गरिदिनुभयो र अत्यन्त सहज रूपमा यो गोवर्धन पर्वतलाई उचाल्नुभयो। हजुरका यी सबै अलौकिक कार्यहरूलाई देखेर हाम्रो अन्तरात्मामा धेरै जिज्ञासाहरू उत्पन्न भइरहेका छन् ॥४॥ हामीहरू सत्यलाई साक्षी राख्दै एवं भगवान्का चरणहरूको शपथ लिँदै हजुरलाई साधारण मनुष्य भएको स्वीकार गर्न असमर्थ छौं। किनकि यस किसिमको अलौकिक कार्य साधारण मनुष्यबाट कुनै पनि अवस्थामा हुन सक्दैन, त्यसैले हामीहरू हजुरलाई साधारण मनुष्य मान्दैनौं ॥५॥ हे केशव! स्त्री तथा कुमारहरू सहित सम्पूर्ण गोकुल निवासीहरू हजुरमा अत्यन्त प्रेमभाव राख्दछन्। हजुरले गोकुलमा बसेर जुन कर्म गरिरहनुभएको छ, त्यो सम्पूर्ण देवताहरूले पनि गर्न सक्दैनन्। त्यसकारण निश्चित रूपमा हजुर साधारण मनुष्य हुनुहुन्न ॥६॥ हे

बालत्वं चातिवीर्यश्च जन्म चास्मास्वशोभनम्।

चिन्त्यमानममेयात्मन्! शङ्कां कृष्ण प्रयच्छति ॥७॥

देवो वा दानवो वा त्वं यक्षो गन्धर्व एव वा।

किं वास्माकं विचारेण बान्धवोऽसि नमोऽस्तु ते ॥८॥

पराशर उवाच

क्षणं भूत्वा त्वसौ तूष्णीं किञ्चित् प्रणयकोपवान्।

इत्येवमुक्तस्तैर्गोपैः कृष्णोऽप्याह महामुने ॥९॥

श्रीभगवानुवाच

मत्सम्बन्धेन भो गोपा! यदि लज्जा न जायते।

श्लाघ्यो वाहं ततः किं वो विचारेण प्रयोजनम् ॥१०॥

यदि वोऽस्ति मयि प्रीति : श्लाघ्योऽहं भवतां यदि।

तदात्मबन्धुसदृशी बुद्धिर्वः क्रियतां भयि ॥११॥

नाहं देवो न गन्धर्वो न यक्षो न च दानवः।

अहं वो बान्धवो जातो नास्ति चिन्त्यमतोऽन्यथा ॥१२॥

पराशर उवाच

इतिश्रुत्वा हरेर्वाक्यं बद्धमौनास्ततो वनम्।

ययुर्गोपा महाभाग! तस्मिन् प्रणयकोपिनि ॥१३॥

कृष्णस्तु विमल-व्योम-शरच्चन्द्रस्य चन्द्रिकाम्।

तथा कुमुदिनीं फुल्लामामोदितदिगन्तराम् ॥१४॥

कृष्ण! हजुरको यस प्रकारको बालक भाव र यस प्रकारको पराक्रम एवं हामीहरू जस्तो अत्यन्त निन्दनीय एवं नीच कुलको जन्म, यी सबै विषयवस्तुहरूमा जति चिन्तत मनन गर्दछौं, त्यति नै हामीहरू शङ्काको घेराभित्र रुमल्लिन पुग्दछौं अर्थात् हामी सधैं दुविधामा रहन्छौं ॥७॥ हजुर देवता हुनुहुन्छ या दावन हुनहुन्छ अथवा यक्ष, गन्धर्व? हामीले त्यस विषयमा चिन्तन गरिरहनु पर्ने कुनै आवश्यकता छैन। किनकि हजुर हामीहरूको परम मित्र हुनुहुन्छ, हाम्रो सुख दुःखमा हामीलाई सात्वना दिनुहुन्छ। त्यसकारण हामीहरू हजुरलाई नमस्कार गर्दछौं ॥८॥ **पराशरजीले भन्नुभयो–** हे मुनीश्वर! ती सबै गोपहरूले यसरी आशङ्का व्यक्त गरेपछि परमात्मा श्रीकृष्ण केही समय मौन बस्नु भएपश्चात् प्रणयकोप अर्थात् प्रेम र क्रोधको समायोजित स्वरूपमा प्रस्तुत हुँदै भन्नुभयो ....॥९॥ **श्री भगवान्ले भन्नुभयो–** हे गोपहरू! मसँग रहेको यस किसिमको सम्बन्धबाट यदि तपाईंहरूलाई कुनै प्रकारको लज्जा रहेको छैन भने तपाईंहरूमध्ये म प्रशंसनीय रहेको छु, यस विषयमा सोचिरहनु पर्ने के आवश्यकता रहेको छ? ॥१०॥ यदि ममा तपाईंहरूको प्रेम वा ममता रहेको छ र यदि म तपाईंहरूका लागि प्रशंसनीय रहेको छु भने तपाईंहरूले मलाई आफ्नो बन्धु अर्थात् अत्यन्त सुहृदयी एवं कल्याणदायक मात्र सम्झनुहोस्। तपाईंहरूले यसभन्दा धेरै विचार गरिरहन आवश्यक छैन ॥११॥ म न त देवता हुँ, न त गन्धर्व हुँ, न यक्ष हुँ र न दानव नै हुँ। म तपाईंहरूको बन्धु अर्थात् आफन्तका रूपमा उत्पन्न एक मनुष्य मात्र हुँ। त्यसकारण तपाईंहरूले यस विषयमा विचार-विमर्श गरिरहनुको कुनै औचित्य रहेको छैन अर्थात् यो पूर्ण रूपमा अनावश्यक कार्य मात्र हो ॥१२॥ **पराशरजीले भन्नुभयो–** हे धर्मात्मा! भगवान्ले यस किसिमबाट प्रसन्नता र क्रोध मिश्रित भावपूर्वक बताउनुभएपछि सबै गोपहरू मौनता धारण गर्दै जङ्गलतिर लागे ॥१३॥ त्यसपछि परब्रह्मपरमात्मा श्रीकृष्णले अत्यन्त निर्मल र स्वच्छ आकाश, शरद् ऋतुको चन्द्रमाको सेतो फुल्ने कण्टकारी (अर्थात् पात र डाँठमा काँडा हुने, ससाना सेता वा नीला फुल फुल्ने एक प्रकारको बोट), सबै

वनराजिं तथा कूजद्-भृङ्गमाला-मनोरमाम्।

विलोक्य सह गोपीभिर्मनश्चक्रे रतिं प्रति ॥१५॥

सह रामेण मधुरमतीव वनिताप्रियम्।

जगौ कलपदं शौरिस्तारमन्द्रकृत क्रमम् ॥१६॥

रम्यं गीतध्वनिं श्रुत्वा सन्त्यज्यावसथांस्तदा।

आजग्मुस्त्वरिता गोप्यो यत्रास्ते मधुसूदनः ॥१७॥

शनैः शनैर्जगौ गोपी काचित् तस्य लयानुगम्।

दत्तावधाना काचित्तु तमेव मनसास्मरत् ॥१८

काचित् कृष्णेति कृष्णेति प्रोच्य लज्जामुपागता।

ययौ च काचित् प्रेमान्धा तत्पार्श्वमविलज्जिता ॥१९॥

काचिदावसथस्यान्तः स्थिता दृष्ट्वा बर्हिगुरून्।

तन्मयत्वेन गोविन्दं दध्यौ मीलितलोचना ॥२०॥

तच्चिन्ताविपुलाह्लादक्षीणपुण्यचया तथा।

तदप्राप्तिमहादुःखविलीनाशेषपातका ॥२१॥

दिशाहरूलाई पूर्ण रूपमा सुगन्धित गराउने पूर्ण रूपमा फुलेको कुमुदिनी अर्थात् सेतो कमल धेरै भएको स्थान एवम् भँवराहरूले गुञ्जायमान शब्दबाट अत्यन्त मनमोहक भएको वनको लहरलाई देखेर गोपिनीहरूसँग त्यो अत्यधिक मनमोहक वनमा घुमफिर गर्ने अभिलाषा गर्नुभयो ॥१४-१५॥ त्यस समयमा बलरामजीसँगै रहेका अवस्थामा श्रीकृष्णले पूर्ण रूपमा अव्यक्त तथा सुमधुर गीत पदविन्यासपूर्वक अर्थात् अस्पष्ट एवं मृदुल पद उच्च र मसिनो स्वरमा गाउन आरम्भ गर्नुभयो ॥१६॥ त्यो गीत अत्यन्त सुमधुर स्त्रीहरूको लागि अत्यधिक प्रिय रहेको थियो एवं त्यसमा विभिन्न किसिमको तन्त्रीस्वर (शाक्त वा शैव मतका अनुसार देव देवीको उपासना गर्ने रहस्यमूलक शास्त्र) को सम्मिश्रण भएको थियो। त्यसपछि त्यो सुमधुर गीतको ध्वनि अर्थात् आवाज सुनेर गोपिनीहरू आफ्नो घर छाडेर जहाँ परमात्मा श्रीमदुसूदन विराजमान हुनुभएको थियो, त्यहाँ अत्यन्त शीघ्रतापूर्वक आउन सुरु गरे ॥१७॥ त्यस समयमा गोपिनीहरू त्यहि गीतको लय अनुसार विस्तार विस्तार गाउन थाले। कोहीले अत्यन्त सावधान भएर मनमनै परब्रह्म परमात्मा श्रीकृष्णलाई स्मरण गर्दै अत्यन्त व्याकुल भइरहेका थिए ॥१८॥ कुनै गोपिनी 'हे कृष्ण, हे कृष्ण' भन्दै यसरी पटक पटक सम्बोधन गरेर परब्रह्मपरमात्मालाई पुकार्नाले अत्यन्त लज्जित भइरहेका थिए र कुनै श्रीकृष्णको प्रेममा पूर्ण रूपमा अन्धा भएका गोपिनी आफ्नो सामाजिक मर्यादा अर्थात् लज्जालाई वा लाजलाई बिर्सिएर भगवान् श्रीकृष्णका छेउमा गएर उभिएका थिए ॥१९॥ कुनै गोपिनी बाहिर गुरुहरू अथवा आफ्ना मान्यजनहरू बसिरहेका देखेर आफ्नै घरमा अत्यन्त स्थिरतापूर्वक आँखा पूर्ण रूपमा बन्द गरेर अति नै तन्मयभावले अर्थात् आफूलाई यथार्थ रूपमा उहाँका शरणमा समर्पित गरिदिएर परमात्मा श्री गोविन्दको ध्यान गर्न थाले ॥२०॥ तथा कुनै गोपकुमारी सम्पूर्ण जगत्का परम कारकतत्त्व परब्रह्म परमात्मास्वरूप श्रीकृष्णको चिन्तन गर्दा-गर्दै मूर्च्छितावस्थामा पुगेर अर्थात् निसासिएर प्राण र अपान वायु रोकिएकाले ध्यानावस्थामा नै मुक्त भए। किनकि भगवान्को ध्यानका माध्यमद्वारा उत्पन्न भएको अत्यन्त आनन्दका प्रभावले गर्दा उनको पुण्यफल

चिन्तयन्ती जगत्सूतिं परब्रह्मस्वरूपिणम्।

निरुच्छ्वासतया मुक्तिं गतान्या गोपकन्यका ॥२२॥

गोपीपरिवृतो रात्रिं शरच्चन्द्रमनोरमाम्।

मानयामास गोविन्दो रासारम्भरसोत्सुकः॥२३॥

गोप्यश्च वृन्दशः कृष्णचेष्टास्वायत्तमूर्तयः।

अन्यदेशं गते कृष्णे चेरुर्वृन्दावनान्तरम् ॥२४॥

कृष्णे निरुद्धहृदया इदमुचुः परस्परम्।

कृष्णोऽहमेतल्ललितं व्रजाम्यालोक्यतां गतिः।

अन्या ब्रवीति कृष्णस्य मम गीतिर्निशम्यताम् ॥२५॥

दुष्टकालिय! तिष्ठात्र कृष्णोऽहमिति चापरा।

बाहुमास्फोट्य कृष्णस्य लीलासर्वस्वमाददे ॥२६॥

अन्या ब्रवीति भो गोपा! निःशङ्कैः स्थीयतामिह।

अलं वृष्टिभयेनात्र धृतो गोवर्द्धनो मया ॥२७॥

धेनुकोऽयं मया क्षिप्तो विचरन्तु यथेच्छया।

गोपी ब्रवीति चैवान्या कृष्णलीलानुकारिणी ॥२८॥

एवं नानाप्रकारासु कृष्णचेष्टासु तास्तदा।

गोप्यो व्यग्राः समं चेरू रम्यं वृन्दावनान्तरम् ॥२९॥

समाप्त भयो र परमात्मालाई प्राप्त गर्न नसकेकाले अत्यन्त दुःखी भएको कारणले अर्थात् भगवान्का अप्राप्तिको दुःखभोग गरेकाले उनका सबै पापहरू नष्ट भए ॥२१-२२॥ रासलीला आरम्भ गर्न अत्यन्त उत्साहित हुनुभएका परमात्मा श्रीकृष्णले गोपिनीहरूबाट राम्ररी घेरिएर त्यो शरद् ऋतुको रातका समयमा लागेका अत्यन्त निर्मल एवं स्वच्छ चन्द्रमाबाट सुशोभित भएको रात्रिलाई सम्मानित गर्न थाल्नुभयो ॥२३॥ त्यस समयमा परब्रह्म परमात्मा श्रीकृष्ण अन्तै जानुभएकाले गोपिनीहरू पनि श्रीकृष्णको चेष्टाबाट पूर्ण रूपमा प्रभावित भएर अर्थात् लट्ठ भएर अर्थात् उहाँमा अत्यन्त आसक्त भएर वृन्दावनको बीचमा घुमफिर गर्न थाले ॥२४॥ त्यस समयमा उनीहरूको अन्तरात्मा परमात्मा श्रीकृष्णमा अत्यन्त असक्त भएकाले ती गोपिनीहरू आफूहरू बीचमा कुराकानी गर्न थाले। यस क्रममा कुनै गोपिनीले भनिन्–'म नै कृष्ण हुँ, मेरो अत्यन्त सुन्दर गतिलाई हेर।' अर्की गोपिनीले भनिन् –'म नै कृष्ण हुँ, तिमीहरू मैले गाएको अत्यन्त मनमोहक गीत सुन।' ॥२५॥ कुनै अन्य गोपिनी आफ्ना हातहरू माथितिर फैलाउँदै भन्दछिन्–'हे दुष्ट कालिय! म कृष्ण हुँ, तँ स्थिर भएर बस्।' यस किसिमले परमात्मा श्रीकृष्णको लीलाको अनुकरण गर्न थाले ॥२६॥ अन्य कुनै गोपिनी भन्न थालिन्–हे गोपहरू! तपाईंहरू पूर्ण रूपमा निर्भय भएर बस्नुहोस्। अब तपाईंहरूले यो अत्यन्त भयानक वर्षाको भय लिइरहनु पर्ने आवश्यकता छैन। किनकि मैले गोवर्धन पर्वतलाई उचालिरहेको छु, त्यसकारण तपाईंहरू पूर्ण रूपमा निश्चिन्त भएर बस्नुहोस् ॥२७॥ भगवान् श्रीकृष्णका लीलाको अनुकरण गर्ने अर्की गोपिनी भन्दछिन् –हे मेरा आत्मीय बन्धुहरू! तपाईंहरू स्वेच्छापूर्वक यो वनमा घुमफिर गर्नुहोस्। किनकि मैले यस वनमा निवास गर्ने अत्यन्त दुष्ट धेनुक नाम भएको असुरको पूर्ण रूपमा विनाश गरिदिएको छु॥२८॥ यसरी अनेकौं किसिमबाट परब्रह्म परमात्मा श्रीकृष्णका लीलाको अनुकरण गर्ने कार्यमा अत्यन्त व्यस्त भएका गोपिनीहरू एकत्रित भएर अत्यन्त मनमोहक वृन्दावनमा आनन्दपूर्वक घुमफिर गर्न थाले ॥२९॥

विलोक्यैका भुवं प्राह गोपी गोपवराङ्गना।

पुलकाञ्चितसर्वाङ्गी विकासिनयनोत्पला ॥३०॥

ध्वजवज्राङ्कुशाब्जाङ्करेखावन्त्यालि पश्यत।

पदान्येतानि कृष्णस्य लीलालङ्कृतगामिनः ॥३१॥

कापि तेन समं याता कृतपुण्या मदालसा।

पदानि तस्याश्चैतानि घनान्यल्पतनूनि च ॥३२॥

पुष्पावचयमत्रोच्चैश्चक्रे दामोदरो ध्रुवम्।

येनाग्राक्रान्तिमात्राणि पदान्यत्र महात्मनः ॥३३॥

अत्रोपविश्य सा तेन कापि पुष्पैरलङ्कृता।

अन्यजन्मनि सर्वात्मा विष्णुरभ्यर्चितो यया ॥३४॥

पुष्पवन्धनसम्मान–कृतमानामपास्य ताम्।

नन्दगोपसुतो यातो मार्गेणानेन पश्यत ॥३५॥

अनुयानेगऽसमर्थान्या नितम्बरमन्थरा।

या गन्तव्ये द्रुतं याति निम्नापादाग्रसंस्थितिः ॥३६॥

हस्तन्यस्ताग्रहस्तेयं तेन याति तथा सखि।

अनायत्तपदन्यासा लक्ष्यते पदपद्धतिः ॥३७॥

पूर्ण रूपमा कमलको फूलजस्तै आँखा भएकी एक अत्यन्त सुन्दरी गोपिनीले अत्यन्त आनन्दित भएकी पृथ्वीलाई देखेर भन्न थालिन् ॥३०॥ हे सखि! यो हेर, लीलासम्पन्न भएर अत्यन्त आनन्दपूर्वक घुमफिर गर्नुहुने श्रीकृष्णको ध्वजा, बज्र, अङ्कुश र कमलबाट सम्पन्न भएका यी सबै चरणचिन्ह स्पष्ट रूपमा देखिइरहेका छन् ॥३१॥ र यहाँ हेर, परमात्मा श्रीकृष्णसँग अत्यन्त पुण्यशालिनी यौवनका प्रभावले अत्यन्त सुस्त गतिमा कुनै नारी गएकी छिन्, उनका यी स–साना चरणचिन्ह स्पष्ट रूपमा देखिइरहेका छन् ॥३२॥ यस स्थानमा निश्चय पनि परमात्मा दामोदर श्रीकृष्ण अग्लो रूप धारण गरेर फुल टिप्नुभएको हुनुपर्दछ। किनकि यी सबै ठाउँहरूमा उहाँका चरणहरूको अग्र भागको अर्थात् अगाडिपट्टिको भागको चिन्ह रहेका छन् ॥३३॥ पूर्वजन्ममा जुन सौभाग्वतीले फूलहरूद्वारा जीवमात्रका आत्मा भगवान् श्रीविष्णुको पूजा उपासना गरेकी थिइन् भगवान् श्रीकृष्णले यस ठाउँमा बसेर तिनै सौभाग्यवतीलाई फूलहरूद्वारा सुसज्जित बनाउनुभएको हो, यो उहाँका चरणहरूको चिन्ह हेर ॥३४॥ यो हेर, अत्यन्त सुगन्धसम्पन्न फूलको माला एवं गुच्छाले ती परमसुन्दरी नारीको सम्मान गरिसकेपछि नन्दगोपका सुपुत्र श्रीकृष्ण उनलाई छाडेर यो बाटोबाट जानुभएको रहेछ ॥३५॥ हे साङ्गिनीहरू! यस ठाउँमा परमात्मा श्रीकृष्णको चरणहरूका पछि पछि एक स्त्रीको चरणचिन्ह रहेको छ। यसलाई हेर्दा यी स्त्री (नारी) नितम्ब अर्थात् कम्मरमुनिको फिलो र कण्डेउलोको भागको भारका कारणले अत्यन्त मन्द गति भएकी अनुभूति हुन्छ। त्यसकारण आफूअसमर्थ भएतापनि गन्तव्यतिर तीव्र गतिमा गइन्। किनकि उनका चरणहरूको अगाडिको भाग पृथ्वीमा केही मात्रामा गाडिएको जस्तो देखिन्छ ॥३६॥ हे सङ्गिनीहरू! यस ठाउँबाट परब्रह्म परमात्मा श्रीकृष्णले ती सौभाग्वतीको हात समाएर लानुभएको अनुभूति हुन्छ। किनकि ती अत्यन्त सुन्दरी नारीको पदचिन्ह पराधीन भएको स्पष्ट रूपमा देखिएको छ अर्थात् पराधीन भएको जस्तो देखिन्छ ॥३७॥ हेर, यहाँबाट ती

**हस्तसंस्पर्शमात्रेण धूर्तेनैषा विमानिता।**

**नैराश्यमन्दगामिन्या निवृत्तं लक्ष्यते पदम् ॥३८॥**

**नूनमुक्ता त्वरामीति पुनरेष्यामि तेऽन्तिकम्।**

**तेन कृष्णेन येनैषा त्वरिता पदपद्धतिः ॥३९॥**

**प्रविष्टो गहनं कृष्णः पदमत्र न लक्ष्यते।**

**निवर्तध्वं शशाङ्कस्य नैतद्दीधितिगोचरे ॥४०॥**

**निवृत्तास्तास्ततो गोप्यो निराशाः कृष्णदर्शने।**

**यमुनातीरमागत्य जगुस्तच्चरितं तदा ॥४१॥**

**ततो ददृशुरायान्तं विकासिमुखपङ्कजम्।**

**गोप्यस्त्रैलोक्यगोप्तारं कृष्णमक्लिष्टचेष्टितम् ॥४२॥**

**काचिदालोक्य गोविन्दमायन्तमतिहर्षिता।**

**कृष्ण कृष्णेति कृष्णेति प्राह नान्यदुदीरयत् ॥४३॥**

**काचिद् भ्रूभङ्गुरं कृत्वा ललाटफलकं हरिम्।**

**विलोक्य नेत्रभृङ्गाभ्यां पपौ तन्मुखपङ्कजम् ॥४४॥**

अत्यन्त मन्द गति भएकी परम सुन्दरी निराश भएर फर्किएकी नारीको पदचिन्ह देखिरहेको छ। यसबाट उहाँ अत्यन्त चलाख श्रीकृष्णले तिनको अन्य किसिमको अभिलाषलाई अधुरै छाडिदिएर केवल हातमा मात्र स्पर्श गरेर ती नारीको अपमान गरिदिनुभएको सिद्ध हुन्छ ॥३८॥ यस ठाउँमा भगवान् श्रीकृष्णले ती गोपिनीसँग भन्नुभयो– तिमी यहीँ बसिरहू। म अत्यन्त चाँडै गएर यस बनमा निवास गर्ने राक्षसलाई मारेर अत्यन्त चाँडै फर्किएर आउनेछु। यसकारण यस ठाउँमा उहाँका तीब्र गतिमा जाँदाको चरणचिन्ह रहेको स्पष्ट देखिन्छ ॥३९॥ परब्रह्म परमात्मा श्रीकृष्णले यसै ठाउँमा अत्यन्त भयानक वनमा प्रवेश गर्नुभयो। त्यसैले उहाँका चरणचिन्हहरू देख्न सकिंदैन। अब हामीहरू यहाँबाट फर्किनु पर्दछ किनकि यसभन्दा अगाडिको स्थानमा चन्द्रमाका किरणहरूले प्रवेश गर्न सक्दैनन् अर्थात् चन्द्रमाका किरणहरू जान सक्दैनन् ॥४०॥ त्यसपछि परब्रह्म परमात्मा श्रीकृष्णको दर्शन गर्ने अवसर नपाएर अत्यन्त निराश भएर फर्किएका गोपिनीहरू यमुना नदीका किनारमा आएर श्रद्धा र भक्तिपूर्वक श्रीकृष्णका चरित्रहरूको भजन कीर्तन गर्न थाले ॥४१॥ त्यसपछि गोपिनीहरूले तीनोटै लोकहरूका रक्षक एवं परम आश्रय र सधैं धर्मको स्थापना गर्ने कार्यमा मात्र लागिरहनुहुने तथा पूर्ण रूपमा फक्रिएर फुलेको कमलजस्तो मुखाकृति अर्थात् अनुहार भएका परमात्मा श्रीकृष्णलाई आफैंतिर आउन लाग्नुभएको देखे ॥४२॥ त्यस समयमा कयौं गोपिनीहरूले त परमात्मा श्रीगोविन्दलाई आउँदै गर्नुभएको देखेर अत्यन्त हर्षित भएर 'कृष्ण!कृष्ण!! कृष्ण!!! यसरी सम्बोधन मात्र गरिरहे अर्थात् उनीहरूको मुखबाट अन्य कुनै वाक्य उच्चारण हुन सकेन ॥४३॥ त्यसरी नै कयौं गोपिनीहरूले आफ्ना आँखा टेढो पार्दै निधार खुम्च्याएर प्रेम र क्रोध सम्मिलित भावपूर्वक परमात्मा श्रीहरिलाई हेर्दै आफ्ना आँखारूपी भँवराका माध्यमद्वारा उहाँको मुखमण्ढलको अमृतमय रसको स्वाद लिन थाले ॥४४॥

काचिदालोक्य गोविन्दं निमीलितविलोचना ।

तस्यैव रूपं ध्यायन्ती योगारूढेव चाबभौ ॥४५॥

ततः काश्चित् प्रियालापैः काश्चिद् भ्रूभङ्गवीक्षणैः ।

निन्ये ऽनुनयमन्याश्च करस्पर्शेन माधवः ॥४६॥

ताभिः प्रसन्नचित्ताभिर्गोपीभिः सह सादरम् ।

रराम रासगोष्ठीभिरुदारचरितो हरिः ॥४७॥

रासमण्डलबन्धोऽपि कृष्णपार्श्वमनुज्झता ।

गोपीजनेन नैवाभूदेकस्थानस्थिरात्मना ॥४८॥

हस्ते प्रगृह्य चैकैकां गोपिकां रासमण्डलीम् ।

चकार तत्करस्पर्शनिभीलितदृशं हरिः॥४९॥

ततः प्रववृर्तत्ते रासश्चलद्वलयनिःस्वनः ।

अनुयातशरत्काव्यगेयगीतिरनुक्रमात् ॥५०॥

कृष्णः शरच्चन्द्रमसं कौमुदीं कुमुदाकरम् ।

जगौ गोपीजनस्त्वेकं कृष्णनाम पुनः पुनः ॥५१॥

परिवर्तश्रमेणैका चलद्वलयलापिनीम् ।

ददौ बाहुलतां स्कन्धे गोपी मधुनिघातिनः ॥५२॥

कुनै गोपिनी परमात्मा श्रीगोविन्दको दर्शन गरेपछि आफ्ना आँखा पूर्ण रूपमा बन्द गरेर श्रीकृष्णका स्वरूपको ध्यान गर्दै महायोगिनीका जसरी नै अवस्थित भए अर्थात् योगमा आरूढ भए जसरी नै उहाँको ध्यान गर्न थाले ॥४५॥ त्यसपछि परमात्मा श्रीमाधवले कुनै गोपिनीलाई मिठासपूर्वक कुराकानी गरेर, कुनै गोपिनीलाई टेढा आँखा देखाएर, कुनै गोपिनीको हात समाएर उनीहरूलाई प्रसन्न गराउन थाल्नुभयो ॥४६॥ त्यसपछि अत्यन्त उदार चरित्र भएका परमात्मा श्रीहरिले ती प्रसन्न भएका गोपिनीहरूसँग रासघेरा बनाएर रास लीला गर्न थाल्नुभयो अर्थात् ती गोपिनीहरूसँग आदरपूर्वक मनोरञ्जनका लागि गरिने विलस वा क्रीडा गर्न थाल्नुभयो ॥४७॥ तर त्यस समयमा कुनै पनि गोपिनी परमात्मा श्रीकृष्णको सामीप्य छोड्न चाहँदैनथे अर्थात् उहाँबाट अलग भएर रहन मान्दैनथे । त्यसकारण सबै गोपिनीहरू एकै ठाउँमा बसिदिएको रासका लागि उचित मण्डल (घेरा) बन्न सकेन ॥४८॥ त्यसपछि ती गोपिनीहरूमध्ये एक एकको हात समाएर परमात्मा श्रीहरिले रासमण्डल (रासघेरा) को रचना गर्नुभयो । त्यस समय परमात्माका हातको स्पर्शबाट उत्पन्न भएको रोमाञ्चमिश्रित आनन्दले सबै गोपिनीहरूका आँखा बन्द भए ॥४९॥ त्यसपछि रासक्रीडा अर्थात् रासलीला आरम्भ भयो । त्यस रासलीलामा गोपिनीहरूको हातमा लगाइएका अत्यन्त चञ्चल चुराहरूको सुमधुर शब्द गुञ्जन थाल्यो र फेरि क्रमशः शरद् ऋतुको वर्णन सम्बन्धी गीत गुञ्जन थाल्यो ॥५०॥ त्यस समयमा परमात्मा श्रीकृष्ण चन्द्रमा, चन्द्रिका अर्थात् चन्द्रमाको किरण एवं कुमुद अर्थात् चन्द्रमाको किरण पर्दा वा जून लाग्दा फुल्ने सेतो कमलसँग सम्बन्धित गीत गाउन थाल्नुभयो, तर गोपिनीहरू पटक पटक केवल श्रीकृष्णका नामको गीत मात्र गाउँथे ॥५१॥ त्यसपछि एउटी गोपिनीले नाच्दा नाच्दा अत्यन्त थकित भएपछि अत्यन्त चञ्चल चुराहरूको सुमधुर आवाजबाट सम्पन्न आफ्ना हातहरूको माला परमात्मा श्रीकृष्णको घाँटीमा लगाइदिइन् ॥५२॥ कुनै अत्यन्त सिपालु गोपिनीले

काचित् प्रविलसद्बाहुः परिरभ्य चुचुम्ब तम्।

गोपी गीतस्तुतिव्याज–निपुणा मधुसूदनम् ॥५३॥

गोपी–कपोल–संश्लेषमधिगत्य हरेर्भुजौ।

पुलकोद्गमसस्याय स्वेदाम्बुघनतां गतौ ॥५४॥

रासगेयं जगौ कृष्णो यावत् तारतरध्वनिः।

साधु कृष्णोति कृष्णोति तावत् ता द्विगुणं जगुः ॥५५॥

गते तु गमनं चक्रुर्वलने सम्मुखं ययुः।

प्रतिलोमानुलोमाभ्यां भेजुर्गोपाङ्गना हरिम् ॥५६॥

स तथा सह गोपीभी रराम मधुसूदनः।

यथाब्दकोटिप्रतिमः क्षणस्तेन विनाभवत् ॥५७॥

ता वार्यमाणाः पतिभिः पितृभिर्भ्रातृभिस्तथा।

कृष्णं गोपाङ्गना रात्रौ रमयन्ति रतिप्रिया ॥५८॥

सोऽपि कैशोरकवयो मानयन् मधुसूदनः।

रेमे ताभिरमेयात्मा क्षपासु क्षपिताहितः ॥५९॥

तद्भर्तृषु तथा तासु सर्वभूतेषु चेश्वरः।

आत्मस्वरूपरूपोऽसौ व्याप्य सर्वमवस्थितः ॥६०॥

यथा समस्तभूतेषु नभोऽग्निः पृथिवी जलम्।

वायुश्चात्मा तथैवासौ व्याप्य सर्वमवस्थितः ॥६१॥

भगवान्ले गाउनुभएको गीतको प्रशंसा गर्दै कपटपूर्वक आफ्ना हात फिँजाएर परमात्मा श्रीमधुसूदनलाई अङ्कमाल गर्दै उहाँका मुखमा अनायास रूपमा चुम्बन गरिदिइन् ॥५३॥ परमात्मा श्रीहरिका दुवै हातहरू गोपिनीहरूका गालाहरूको स्पर्श प्राप्त गर्दा तिनीहरूमा रोमाञ्च रूप धानको उत्पत्तिका लागि पसिनारूप पानीको मेघ अर्थात् बादल बने ॥५४॥ परमात्मा श्रीकृष्णले जस्तोसुकै उच्च स्वरमा रासलीलाका लागि उपयोगी गीत गाउनु भएतापनि गोपिनीहरू दुइगुना उच्च स्वरमा 'धन्यवाद कृष्ण! धन्यवाद कृष्ण!! को आवाजमात्र निकालिरहन्थे ॥५५॥ भगवान् श्रीकृष्ण अगाडि जानुहुँदा गोपिनीहरू उहाँका पछि पछि लाग्दथे र उहाँ फर्किनु हुँदा उहाँका अगाडि लाग्दथे। यसप्रकार उनीहरूले अनुलोम र प्रतिलोम गतिका माध्यमद्वारा भगवान्लाई साथ दिइरहेका थिए ॥५६॥ परब्रह्म परमात्मा श्रीमधुसूदनले पनि गोपिनीहरूसँग यस्तो किसिमको रासलीला गर्नुभएको थियो, जसको प्रभावले गर्दा उहाँको समीप्य नपाएको अवस्थामा एकक्षण पनि गोपिनीहरूका लागि करोडौं वर्षहरू बराबर लागिरहेको थियो अर्थात् उनीहरूले करोडौं वर्ष भएको अुनभव गरिरहेका थिए ॥५७॥ ती रासलीलामा अत्यन्त रमाइरहेका गोपिनीहरू माता, पिता, पति आदिले प्रतिबन्ध लगाएतापनि रात्रिका समयमा परमात्मा श्रीकृष्णसँग मनोरञ्जनका लागि क्रीडा गर्दथे अर्थात् उहाँसँग अत्यन्त आनन्दपूर्वक रात बिताउँथे ॥५८॥ उहाँ शत्रुहरूको संहार कर्ता एवम् अमेयात्मा श्रीमधुसूदन पनि आफ्नो किशोरावस्थाको सम्मान गर्दै रात्रिका समयमा ती गोपिनीहरूसँग विभिन्न क्रीडा गर्दै यताउता घुम्नुहुन्थ्यो ॥५९॥ सर्वव्यापी ईश्वर परब्रह्म श्रीकृष्ण ती गोपिनीहरूमा, उनीहरूका पतिहरूमा र सम्पूर्ण प्राणीमात्रमा आत्मास्वरूपबाट वायु जसरी नै व्याप्त भएर अवस्थित रहनुभएको थियो ॥६०॥ जसरी आकाश, वायु, अग्नि, जल, पृथ्वी, वायु र आत्मा सबै प्राणीमात्रमा समभावपूर्वक व्याप्त रहेका हुन्छन्, त्यसैगरी परब्रह्म परमात्मा पनि सबै पदार्थहरूमा समभावपूर्वक व्याप्त भएर रहनुभएको छ ॥६१॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे त्रयोदशोऽध्यायः।



## चतुर्दशोऽध्यायः

## अध्याय – १४

### "वृषभासुरवधः"

(वृषभासुरको वध)

पराशर उवाच

प्रदोषार्धे कदाचित्तु रासासक्ते जनार्दने ।

त्रासयन् समदो गोष्ठमरिष्टः समुपागतः ॥१॥

सतोयतोयदच्छायस्तीक्ष्णशृङ्गोऽर्कलोचनः ।

खुराग्रपातैरत्यर्थं दारयन् वसुधातलम् ॥२॥

लेलिहानः सनिष्पेषं जिह्वयोष्ठौ पुनः पुनः ।

संरम्भाविद्धलाङ्गूलः कठिनस्कन्धबन्धनः ॥३॥

उदग्रककुदाभोगः प्रमाणाद् दुरतिक्रम ः ।

विण्मूत्रलिप्तपृष्ठाङ्गो गवामुद्वेगकारकः ॥४॥

प्रलम्बकण्ठोऽतिमुखस्तरुखाताङ्किताननः ।

पातयन् स गवां गर्भान् दैत्यो वृषभरूपधृक् ।

सूदयंस्तापसानुग्रो वनान्यटति यः सदा ॥५॥

ततस्तमतिघोराक्षमवेक्ष्यातिभयातुराः ।

गोपा गोपस्त्रियश्चैव कृष्ण कृष्णेति चुक्रुशुः ॥६॥

**पराशरजीले भन्नुभयो**– एकदिन साँझ–पखको समयमा जब परब्रह्म परमात्मा श्रीकृष्ण रासलीलामा पूर्ण रूपमा आसक्त हुनुभएको थियो, त्यस समयमा अरिष्ट नाम भएको वृषभ अर्थात् साँढेको स्वरूप भएको राक्षस सबैलाई अत्यन्त भयभीत बनाउँदै गोकुलमा आयो ॥१॥ उसको ज्योति पानीसहितको मेघका समान थियो, सींग अत्यन्त तिखा थिए, आँखाको ज्योति सूर्यको प्रकाश बराबरको थियो र त्यो असुरले आफ्ना खुरको अगाडिको भागबाट पृथ्वीलाई चिरा चिरा पारेको जस्तो देखिन्थ्यो ॥२॥ उसले आफ्ना तलका दाँतहरूमा माथिका दाँतहरू घोट्तै पटक–पटक आफ्नो जिब्रोले ओठहरू चाटिरहेको थियो । उसले अत्यन्त क्रोधित भएर आफ्नो पुच्छर ठाडो पारेको थियो एवम् उसको गर्दनको बन्धन अत्यन्त कठोर थियो ॥३॥ त्यसको जुरो र शरीरको नाप अत्यन्त अग्लो एवम् नाघ्न नसकिने किसिमको थियो। त्यसको पछाडिको भाग गोबर र मूत्रले लिपिएको थियो । त्यसले सबै गाईहरूलाई अत्यन्त भयभीत बनाइरहेको थियो अर्थात् गाईहरूका बीचमा आतङ्क फैलाएको थियो ॥४॥ त्यसको घाँटी अत्यन्त लामो र मुख रूखको टोड्को जस्तो अत्यन्त गम्भीर प्रकृतिको थियो । त्यो साँढेको स्वरूप धारण गरेको दैत्य गाईहरूमा रहेका गर्भहरूलाई पतन गराउँदै एवम् तपस्यामा एकाग्रतापूर्वक लागेका तपस्वीहरूलाई मार्दै सधैं वनमा यताउता घुमफिर गरिरहन्थ्यो ॥५॥ त्यसपछि त्यो अत्यन्त भयानक आँखाहरू भएको दैत्यलाई देखेपछि गोप एवं गोपिनीहरू अत्यन्त भयभीत हुँदै 'कृष्ण ! कृष्ण!! कृष्ण!!!' भनेर परमात्मा श्रीकृष्णलाई बोलाउन थाले॥६॥ उनीहरूले बोलाएको शब्द सुनेपछि परमात्मा

|हनादं ततश्चक्रे तलशब्दञ्च केशवः ।
च्छब्दश्रवणाच्चासौ गोविन्दाभिमुखं ययौ ॥७॥

ग्रन्यस्तविषाणाग्रः कृष्णकुक्षि–कृतेक्षणः ।
भ्यधावत दुष्टात्मा कृष्णं वृषभदानवः ॥८॥

|यान्तं दैत्यवृषभं दृष्ट्वा कृष्णो महाबलः ।
चचाल ततः स्थानादवज्ञास्मितलीलया ॥९॥

|सन्नं चैव जग्राह ग्राहवन्मधुसूदनः ।
घान जानुना कुक्षौ विषाणग्रहणाचलम् ॥१०॥

स्य दर्पबलं भङ्क्त्वा गृहीतस्य विषाणयोः ।
|पीडयदरिष्टस्य कण्ठं क्लिन्नमिवाम्बरम् ॥११॥

त्पाट्य शृङ्गमेकन्तु तेनैवाताडयत् ततः ।
मार स महादैत्यो मुखाच्छोणितमुद्वमन् ॥१२॥

ष्टुवुर्निहते तस्मिन् दैत्ये गोपा जनार्दनम् ।
|म्भे हते सहस्राक्षं पुरा देवगणा यथा ॥१३॥

श्रीकेशव सिंह गर्जे जसरी नै अत्यन्त भयानक शब्द निकाल्दै गर्जनुभयो र ताली बजाउनुभयो । यस प्रकारको आवाज सुनेपछि त्यो साँढेको रूप धारण गरेको दैत्य परमात्मा श्रीकृष्णको छेउमा आयो ॥७॥ त्यो दुष्टात्मा साँढेको स्वरूप धारण गरेको असुर आफ्ना सिङहरू तेर्सा पारेर तथा परमात्मा श्रीकृष्णको पेटमा हेर्दै उहाँ भएको ठाउँतिर दौडियो ॥८॥ तर सर्वशक्तिसम्पन्न परमात्मा श्रीकृष्ण साँढेको स्वरूप धारण गरेको दैत्य आफूतिर आएको देखे तापनि त्यसको अपमान गर्दै लीलापूर्वक हाँस्नुभयो एवं त्यसै ठाउँमा अटल भएर बस्नुभयो ॥९॥ त्यो साँढेरूपी दैत्य आफ्नो नजिकमा आएपछि परमात्मा श्रीकृष्णले त्यसलाई यसरी समाउनु भयो, जसरी गोहीले कुनै सानो जीवलाई समाउँछ । सिङमा समाएपछि प्रायः निश्चल भएको दैत्यको कोखामा आफ्ना घुँडाले प्रहार गर्नुभयो ॥१०॥ यसरी सिङमा समाउनु भएको त्यस दैत्यको घमण्डलाई पूर्ण रूपमा विनाश गरिदिएर परमात्मा श्रीकृष्णले त्यो अरिष्टासुरको घाँटीलाई चिसो कपडा निचोरे जसरी नै बटारिदिनुभयो ॥११॥ त्यसपछि त्यसको एउटा सिङ उखेलेर त्यसैमाथि अर्थात् त्यसैलाई प्रहार गर्नुभयो, जसको पीडा सहन नसकेर त्यो दैत्यले मुखबाट रगत छाद्दै आफ्नो प्राण त्याग गऱ्यो अर्थात् त्यो दैत्य मऱ्यो ॥१२॥जसरी प्राचीन कालमा जम्भको मृत्यु हुँदाका अवस्थामा देवताहरूले इन्द्रको स्तुति गरेका थिए त्यसरी नै अरिष्टासुर मर्दा गोप गोपिनीहरूले परमात्मा श्री जनार्दनको प्रशंसा गर्न थाले ॥१३॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे चतुर्दशोऽध्यायः ।

ॐ

## पञ्चदशोऽध्यायः

## अध्याय – १५

### "श्रीकृष्णमानेतुं कंसेनाक्रूरस्य प्रेषणम्"

(श्रीकृष्णलाई मथुरामा ल्याउन कंसद्वारा अक्रूरलाई गोकुल जाने आदेश)

पराशर उवाच

ककुद्मति हतेऽरिष्टे धेनुके विनिपातिते ।
प्रलम्बे निहते वीरे धृते गोवर्द्धनाचले ॥१॥
दमिते कालिये नागे भग्ने तुङ्गतरुद्वये ।
हतायां पूतनायाञ्च शकटे परिवर्तिते ॥२॥
कंसाय नारदः प्राह यथावृत्तमनुक्रमात् ।
यशोदादेवकीगर्भपरिवृत्त्याद्यशेषतः ॥३॥
श्रुत्वा तत् सकलं कंसो नारदाद् देवदर्शनात् ।
वसुदेवं प्रति तदा कोपं चक्रे सुदुर्मतिः॥४॥
सोऽतिकोपादुपालभ्य सर्वयादवसंसदि ।
जगर्ह यादवांश्चैव कार्य्यञ्चैतदचिन्तयत् ॥५॥
यावन्न बलमारूढो रामकृष्णौ सुबालकौ ।
तावदेव मया वध्यावसाध्यौ रूढयौवनौ ॥६॥
चाणूरोऽत्र महावीर्यो मुष्टिकश्च महाबलः ।
एताभ्यां मल्लयुद्धेन घातयिष्यामि दुर्मदौ ॥७॥

**पराशरजीले भन्नुभयो–** परब्रह्म परमात्मा श्रीकृष्णबाट साँढेरूपी अरिष्टासुर, धेनुक र प्रलम्बजस्ता अत्यन्त शक्तिशाली असुरहरूको बध, गोवर्धन पर्वतलाई उठाएर गोकुलवासीहरूको रक्षा, कालिय नागको दमन गरेर यमुना नदीलाई निर्मल एवम् स्वच्छ बनाउनु, दुई अत्यन्त भयानक रुखहरू उखेल्नु, पूतनाको वध तथा गाडालाई उल्टो घुमाइदिनु जस्ता अनेकौं लीलाहरू भइसकेका थिए ॥१-२॥ त्यसपछि एकदिन नारदले कंसका नजिकमा गएर यशोदा र देवकीको गर्भ परिवर्तन गरिएको अवस्थादेखिको जे जे र जसरी जसरी भएको थियो र अहिलेसम्म भइरहेको छ, त्यो सबै कुरा विस्तारपूर्वक सुनाइदिए ॥३॥ देवर्षि नारदद्वारा यी सबै कुराहरू विस्तापूर्वक सुनिसकेपछि त्यो विपरीत बुद्धि भएको दुष्टात्मा कंस वसुदेवप्रति अत्यन्त क्रोधित भयो अर्थात् वसुदेवसँग आफूमा उत्पन्न भएको क्रोध व्यक्त गर्न थाल्यो ॥४॥ त्यसपछि त्यो अत्यन्त क्रोधित भएको कंसले सबै यादवहरूको सभामा वसुदेवजीलाई नराम्ररी गाली गर्‍यो तथा सबै यादवहरूको अत्यन्त नीच किसिमबाट निन्दा गर्‍यो ।त्यसपछि चिन्तन गर्न थाल्यो यी दुवै बालक बलराम र कृष्ण जबसम्म पूर्ण बलवान् हुँदैनन्, त्यस समयसम्ममा मैले यिनीहरूको वध गरिसक्नु पर्दछ अर्थात् यिनीहरूको बाल्यावस्थामा नै वध गर्नुपर्दछ। किनकि युवास्थामा प्रवेश गरिसकेपछि यिनीहरू अजेय हुनेछन् अर्थात् यिनीहरूको वध गर्न सकिनेछैन ॥५-६॥ मेरो आधिपत्यमा अत्यन्त शक्तिशाली चाणूर अत्यन्त बलशाली मुष्टिक नाम भएका दुई कुस्तीबाज रहेका छन् । यिनीहरूसँग कुस्ती खेलाएर म ती दुवै दुर्बुद्धि भएका बालकहरूको वध गराउँछु अर्थात् तिनीहरूको हत्या गर्न लगाउँछु ॥७॥ धनुर्यज्ञ नाम भएको एउटा

धनुर्महमहायागव्याजेनानीय तौ व्रजात्।

तथा तथा यतिष्यामि यास्येते सङ्क्षयं यथा ॥८॥

श्वफल्कतनयं सोऽहमक्रूरं यदुपुङ्गवम्।

तयोरानयनार्थाय प्रेषयिष्यामि गोकुलम् ॥९॥

वृन्दावनचरं घोरमादेक्ष्यामि च केशिनम्।

तत्रैवासावतिबलस्तावुभौ घातयिष्यति ॥१०॥

गजः कुवलयापीडो मत्समीपमुपागतौ।

घातयिष्यति वा गोपौ वसुदेवसुतावभौ ॥११॥

पराशर उवाच

इत्यालोच्य स दुष्यत्मा कंसो रामजनर्दनौ।

हन्तुं कृतमतिर्वीरमक्रूरं वाक्यमब्रवीत् ॥१२॥

कंस उवाच

भो भो दानपते! वाक्यं क्रियतां प्रीतये मम।

इतः स्यन्दनमारुह्य गम्यतां नन्दगोकुलम् ॥१३॥

वसुदेवसुतौ तत्र विष्णोरंशसमुद्भवौ।

नाशाय किल सम्भूतौ मम दुष्टौ प्रवर्द्धतः ॥१४॥

धनुर्महो ममाप्यत्र चतुर्दश्यां भविष्यति।

आनेयौ भवता गत्वा मल्लयुद्धाय तावुभौ ॥१५॥

चाणूर-मुष्टिकौ मल्लौ नियुद्धकुशलौ मम।

ताभ्यां सहानयोर्युद्धं सर्वलोकोऽत्र पश्यतु ॥१६॥

महायज्ञ गर्ने असत्य योजना बनाएर ती दुवै बालकहरूलाई व्रजबाट बोलाएर म यस किसिमका अनेकौं उपायहरू अबलम्बन गर्नेछु, जसको प्रभावबाट ती पूर्ण रूपमा नष्ट हुनेछन् ॥८॥ म ती दुवै बालकहरूलाई गोकुलबाट यहाँसम्म ल्याउनका लागि यदुवंशमा सर्वोत्कृष्ट यादव एवं श्वफल्कका पुत्ररत्न अत्यन्त पराक्रमी अक्रूरलाई गोकुलमा पठाउनेछु ॥९॥ त्यसपछि वृन्दावनमा निवास गर्ने अत्यन्त शक्तिशाली केशी नाम भएको दैत्यलाई तिनीहरूको बाटैमा वध गर्ने आज्ञा दिन्छु। त्यो शक्तिशाली दैत्यले ती दुवै बालकहरूको त्यहीँ सर्वनाश गरिदिनेछ ॥१०॥ अथवा यदि कुनै किसिमले त्यहाँबाट बचेर ती दुवै वसुदेवका पुत्र यहाँ आइपुगे भने मसँग कुवलयापीड (कृष्णलाई मार्न हात्तीको स्वरूप धारण गरेका एक दानव अथवा कंसको हात्ती, जसलाई श्रीकृष्णले मारेर मुक्त गराइदिनुभयो।) नामभएको जुन हात्ती छ, त्यो हात्तीले पनि मेरो आज्ञानुसार गोकुलबाट यहाँ आएका ती दुवै वसुदेव पुत्रहरूको विनाश गरिदिनेछ ॥११॥ **पराशरजीले भन्नुभयो-** यस प्रकारको आत्मनिर्णय अर्थात् निश्चय गरेपछि त्यो अत्यन्त दुष्ट आत्मा भएको कंसले बलराम र श्रीकृष्णलाई मार्ने अभिलाषाबाट अभिप्रेरित भएर यादवश्रेष्ठ अक्रूरसँग भन्यो ...॥१२॥ **कंसले भन्यो-** हे दानपति यादवश्रेष्ठ! मेरो प्रसन्नताका लागि तपाईंले मेरो एउटा कुरा स्वीकार गरिदिनुहोस्। यहाँबाट रथमा सवार भएर तपाईं नन्दको गोकुलमा जानुहोस् ॥१३॥ त्यहाँ साक्षात् विष्णुको अंशबाट उत्पन्न भएका अर्थात् जन्मिएका वसुदेवका बलराम र कृष्ण नाम भएका दुई बालक रहेका छन्। मेरो पूर्ण रूपमा विनाश गर्नका लागि उत्पन्न भएका ती दुष्ट बालकहरू त्यहाँ पालित पोषित भइरहेका छन् ॥१४॥ मैले यहाँ अब आउने चतुर्दशीमा धनुषयज्ञको आयोजना गरेको छु। त्यसकारण तपाईंले गएर ती दुवैलाई कुस्ती प्रतियोगिताका लागि बोलएर यहाँ ल्याइदिनुहोस् अर्थात् लिएर आउनुहोस् ॥१५॥ मेरा चाणूर र मुण्टिक नाम भएका दुई पहलमान मल्लयुद्ध अर्थात् कुस्तीमा अत्यन्त सिपालु छन्। त्यस धनुषयज्ञका दिन मेरा यी दुई पहलमानहरूसँग उनीहरूले कुस्ती खेलेको यहाँ सबैले हेर्नेछन् अर्थात् त्यसबाट मनोरञ्जन लिनेछन् ॥१६॥

नागः कुवलयापीडो महामात्रप्रचोदितः

स वा निहंस्यते पापौ वसुदेवात्मजौ शिशू ॥१७॥

तौ हत्वा वसुदेवञ्च नन्दगोपञ्च दुर्मतिम्।

हनिष्ये पितरं चैनमुग्रसेनं सुदुर्मतिम् ॥१८॥

ततः समस्तगोपानां गोधनान्यखिलान्यहम्।

वित्तं चापि हरिष्यामि दुष्यनां मद्वधैषिणाम् ॥१९॥

त्वामृते यादवाश्चैते दुष्य दानपते! मयि।

एतेषाञ्च वधायाहं प्रयतिष्याम्यनुक्रमात् ॥२०॥

ततो निष्कण्टकं सर्वं राज्यमेतदयादवम्।

प्रशासिष्ये त्वया तस्मान्मत्प्रीत्या वीर! गम्यताम् ॥२१॥

यथा च माहिषं सर्पिर्दधि वाप्युपहार्यं वै।

गोपाः समानयन्त्याशु त्वया वाच्यास्तथा तथा ॥२२॥

पराशर उवाच

इत्याज्ञप्तस्तदाक्रूरो महाभागवतो द्विज।

प्रीतिमानभवत् कृष्णं श्वो द्रक्ष्यामीति सत्वरः ॥२३॥

अथवा माहुतेबाट अभिप्रेरित भएको कुवलयापीड ना भएको मेरो हात्तीले ती दुवै वसुदेव पुत्रलाई मारिदिने अर्थात् तिनीहरूलाई पूर्ण रूपमा नष्ट गरिदिनेछ ॥१७ यसप्रकार ती दुवै बालकहरूको पूर्ण रूपमा विना गरिसकेपछि ती विपरीत बुद्धि भएका वसुदेव, नन्दगो र यी दुर्मति आफ्ना पिता उग्रसेनको पनि बध गरिदिने अर्थात् यिनीहरूको सर्वनाश गरिदिनेछु ॥१८॥ त्यसपछि मेरो बध भएको देख्न चाहने यी सबै दुष्ट गोपहरूक गाइहरू र अन्य धन–सम्पत्तिहरू हरण गर्नेछु ॥१९। दानपति! तपाईंबाहेक अन्य सबै यादवहरूले मसँ द्वेषभाव राख्छन्। त्यसकारण म क्रमबद्ध रूपमा सबै यादवहरूलाई मार्ने प्रयासमा लाग्नेछु ॥२० त्यसपछि मैले यो विघ्न बाधा केही नभएको अथ निर्विघ्न एवम् यादवहरूबाट विहीन राज्यको तपाईंसँ आत्मीय सम्बन्ध राख्दै उपभोग गर्नेछु। त्यसकारण शूरवीर! मेरो प्रसन्नताका लागि तपाईं अत्यन्त च गइदिनुहोस् ॥२१॥ तपाईं गोकुलमा गएर स यादवहरूलाई भैंसीको घिउ, दही आदि कोसेली बो अत्यन्त शीघ्रतापूर्वक यहाँ आउन भनि दिनुहो जसले गर्दा तिनीहरू यहाँ आउन् ॥२२॥ **पराशरजी भन्नुभयो** –हे ब्राह्मणश्रेष्ठ! महाभागवत परम वैष्ण अक्रूरजी कंसबाट यस किसिमको आज्ञा पाएप 'भोलि मैले श्रीकृष्णको दर्शन गर्ने अवसर पाउने भ यसरी चिन्तन गर्दै अत्यन्त आनन्दित भए ॥२३॥

इति विष्णुमहापुराणे पञ्चमांशे पञ्चदशोऽध्यायः।



## षोडशोऽध्यायः

## अध्याय - १६

### "केशिवधः"

(केशीको वध)

पराशर उवाच

केशी चापि बलोदग्रः कंसदूत–प्रचोदितः।

कृष्णस्य निधनाकाङ्क्षी वृन्दावनमुपागमत् ॥१॥

स खुरक्षतभूपृष्ठः सटाक्षेपधुताम्बुदः ।

प्लुतविक्रान्तचन्द्रार्कमार्गो गोपानुपाद्रवत् ॥२॥

तस्य हेषितशब्देन गोपाला दैत्यवाजिनः

गोप्यश्च भयसंविग्ना गोविन्दं शरणं ययुः ॥३॥

त्राहि त्राहीति गोविन्दः श्रुत्वा तेषां तदा वचः ।

सतोयजलदध्वानगम्भीरमिदमुक्तवान् ॥४॥

श्रीकृष्ण उवाच

अलं त्रासेन गोपालाः केशिनः किं भयातुरैः ।

भवद्भिर्गोपजातीयैर्वीरवीर्यं विलोप्यते ॥५॥

किमनेनाल्पसारेण हेषिताटोपकारिणा ।

दैतेयबलवाह्येन वल्गता दुष्टवाजिना ॥६॥

एह्येहि दुष्ट कृष्णोऽहं पूष्णस्त्विव पिनाकधृक् ।

पातयिष्यामि दशनान् वदनदखिलांस्तव ॥७॥

**पराशरजीले भन्नुभयो**– हे मैत्रेय! कंसको दूतद्वारा पठाइएको अत्यन्त शक्तिशाली केशी नाम भएको दैत्य पनि परमात्मा श्रीकृष्णको वध गर्ने अभिलाषा लिएर वृन्दावनमा आयो ॥१॥ त्यो घोडारूपी दैत्य आफ्ना खुरहरूले पृथ्वीलाई खोस्रँदै तथा गर्दनका कपालहरूबाट बादलहरूलाई छिन्न भिन्न पार्दै तथा अत्यन्त वेगपूर्वक चन्द्रमा र सूर्यको मार्गलाई पनि पार गर्दै गोपहरू भएका ठाउँतिर दौडियो ॥२॥ त्यो घोडाको स्वरूप धारण गरेको दैत्य हिनहिनाउँदा निस्किएको अत्यन्त भयानक शब्दबाट अत्यधिक भयभीत भएका गोप र गोपिनीहरू परब्रह्म परमात्मा श्रीगोविन्दका शरणमा पुगे ॥३॥ त्यसपछि ती गोप एवं गोपिनीहरूको 'रक्षा गर, रक्षा गर' भनेको शब्द सुनेपछि परब्रह्म परमात्मा श्रीगोविन्दले पानी भएको मेघको गर्जना जसरी नै अत्यन्त गम्भीर भाव भएका वचनबाट भन्नुभयो...॥४॥ **श्रीकृष्णले भन्नुभयो** –हे गोप एवं गोपिनीहरू! तपाईंहरू यो केशी नाम भएको दैत्यसँग कि डराइरहनु भएको छ? तपाईंहरू गोपाल जातिका भएर पनि किन यस प्रकार अत्यन्त भयभीत भएर वीरोचित पुरुषार्थको परित्याग गर्नुहुन्छ? ॥५॥ यो अत्यत थोरैमात्र शक्ति भएको हिनहिनाएर केवल आतङ्कमात्र फैलाउने र नाच्ने दुष्ट घोडा, जसमा राक्षसहरू चढ्दछन् अर्थात् राक्षसहरूले आफ्नो सवारीको साधन बनाउँछन्, त्यसले तपाईंहरूलाई के कष्ट दिन सक्दछ? ॥६॥ यसप्रकार गोपालहरूलाई सात्वना दिएपछि परमात्मा श्रीकृष्णले भन्नुभयो "हे दुष्ट! म भएतिर आइज, जसरी पिनकधारी वीरभद्रले पूषाको दाँत उखेल्नुभएको थियो । त्यसरी म कृष्ण तेरा मुखमा भएका सबै दाँत उखेलिदिनेछु" ॥७॥ यसो

इत्युक्त्वास्फोट्य गोविन्दः केशिनः सम्मुखं ययौ।

विवृतास्यस्तु सोऽप्येनं दैतेयश्चाप्युपाद्रवत् ॥८॥

बाहुमाभोगिनं कृत्वा मुखे तस्य जनार्दनः।

प्रवेशयामास तदा केशिनो दुष्टवाजिन : ॥९॥

केशिनो वदनं तेन विशता कृष्णबाहुना।

शातिता दशनाः पेतु सिताभ्रावयवा इव ॥१०॥

कृष्णस्य ववृधे बाहुः केशिदेहगतो द्विज।

विनाशाय यथा व्याधिरासम्भूतेरुपेक्षितः ॥११॥

विपाटितोष्ठो बहुलं सफेनं रुधिरं वमन्।

सोऽक्षिणी विवृते चक्रे निःसृते मुक्तबन्धने ॥१२॥

जघान धरणीं पादैः शकृन्मूत्रं समुत्सृजन्।

स्वेदार्द्रगात्रः श्रान्तश्च निर्यत्नः सोऽभवत् ततः ॥१३॥

व्यादितास्यो महारौद्रः सोऽसुरः कृष्णबाहुना।

निपपात द्विधाभूतो वैद्युतेन द्रुमो यथा ॥१४॥

द्विपादैपृष्ठपुच्छार्द्धे श्रवणैकाक्षिनासिके।

केशिनस्ते द्विधाभूते शकले द्वे विरेजतुः ॥१५॥

हत्वा तु केशिनं कृष्णो गोपालैर्मुदितैर्वृतः।

अनायस्ततनुः स्वस्थो हसंस्तत्रैव तस्थिवान् ॥१६॥

भनेपछि परमात्मा श्रीगोविन्द उफ्रिएर घोडारूपी केशीका अगाडि आउनुभयो र त्यो घोडाको स्वरूप धारण गरेको दैत्य पनि मुख बाएर उहाँमाथि आइलाग्यो अर्थात् उसले परमात्मा श्रीकृष्णलाई झम्टियो ॥८॥ त्यसपछि परब्रह्म परमात्मा श्रीजनार्दनले आफ्नो हात अत्यन्त भयानक रूपमा फैलाएर त्यो घोडाको स्वरूप धारण गरेको अत्याधिक दुष्ट दैत्यको मुखमा हालिदिनु भयो ॥९॥ त्यसपछि केशीका मुखमा घुसाइएको परमात्मा श्रीकृष्णको हातसँग ठोक्किएर त्यसका सबै दाँतहरू भाँचिए र अत्यन्त बाक्लो असिना परे जसरी नै जमीनमा खस्न थाले अर्थात् जमीनमा खसे ॥१०॥ हे ब्राह्मणश्रेष्ठ! जसरी उत्पत्तिका समयमा उपेक्षा गरिएको व्याधि अर्थात् उत्पन्न भएको रोग आफ्नो विनाश गराउनका लागि तीब्र गतिमा बढ्छ, त्यसरी केशीका शरीरमा पसेको परमात्मा श्रीकृष्णको हात पनि अत्यन्त भयानक रूपमा बढ्न थाल्यो ॥११॥ अन्तमा त्यो घोडारूपी दैत्यका ओठहरू च्यातिएपछि उसले फिंजसहितको रगत छाद्न थाल्यो अर्थात् उल्टी गर्न थाल्यो र नसाहरूको बन्धन पूर्ण रूपमा खुस्किएकाले उसका आँखाहरू फुटे ॥१२॥ त्यसपछि उसले मलमूत्र अर्थात् दिशा पिसाब परित्याग गर्दै जमिनमा खुट्टा बजार्न थाल्यो तथा त्यसको सबै शरीर पसिनाले पूर्ण रूपमा भिजेर चिसो भयो एवं त्यसपछि यथार्थ रूपमा निश्चेष्ट भयो अर्थात् त्यसको मृत्यु भयो ॥१३॥ यसप्रकार परमात्मा श्रीकृष्णका हातले च्यातिएको मुख भएको त्यो असुर मृत्युको भोजन भयो र चट्याङ्ग पर्दाका अवस्थामा ढलेको रूख जसरी दुई टुक्रा भएर जमिनमा ढल्यो अर्थात् लड्यो ॥१४॥ केशीको शरीरबाट बनेका ती दुई टुक्राहरू, दुई खुट्टा, आधा पीठ आधा पुच्छर तथा एक-एक कान, आँखा र नाकको प्वालसहित सुशोभित हुन थाल्यो ॥१५॥ यसप्रकार घोडारूपी केशीको मृत्यु भएपछि अत्यन्त प्रसन्न भएका गोपालहरूद्वारा पूर्ण रूपमा घेरिनु भएका परब्रह्म परमात्मा श्रीकृष्ण कुनै किसिमको शरीरिक थकावट अनुभूति नगरी अत्यन्त आनन्दित हुँदै हाँसेर पहिलेकै स्थानमा उभिनुभएको थियो ॥१६॥ यसपछि घोडारूपी

ततो गोप्यश्च गोपाश्च हते केशिनि विस्मिताः ।

तुष्टुवुः पुण्डरीकाक्षमनुरागमनोरमम् ॥१७॥

अथाहान्तरितो विप्रो नारदो जलदे स्थितः ।

केशिनं निहतं दृष्ट्वा हर्षनिर्भरमानसः ॥१८॥

साधु साधु जगन्नाथ लीलयैव यदच्युत ।

निहतोऽयं त्वया केशी क्लेशदस्त्रिदिवौकसाम् ॥१९॥

युद्धोत्सुकोऽहमत्यर्थं नरवाजिमहाहवम् ।

अभूतपूर्वमन्यत्र द्रष्टुं स्वर्गादुपागतः ॥२०॥

कर्माण्यत्रावतारे ते कृतानि मधुसूदन ।

यानि तैर्विस्मितं चेतस्तोषमेतेन मे गतम् ॥२१॥

तुरङ्गस्यास्य शक्रोऽपि कृष्ण! देवाश्च विभ्यति ।

धुतकेशरजालस्य हेषतोऽभ्रावलोकिनः ॥२२॥

यस्मात् त्वयैव दुष्यत्मा हतः केशी जनार्दन ।

तस्मात् केशवनाम्ना त्वं लोके गेयो भविष्यसि ॥२३॥

स्वस्त्यस्तु ते गमिष्यामि कंसयुद्धेऽधुना पुनः ।

परश्वोऽहं समेष्यामि त्वया केशिनिसूदन ॥२४॥

उग्रसेनसुते कंसे सानुगे विनिपातिते ।

भारावतारकर्ता त्वं पृथिव्याः पृथिवीधर ॥२५॥

दैत्य केशीका मृत्यु भएको देखेर आश्चर्यचकित भएका गोप एवं गोपिनीहरूले अत्यन्त प्रेम र श्रद्धापूर्वक अत्यधिक सुन्दर देखिनुहुने कमलनयन परमात्मा श्रीकृष्णको स्तुति गरे ॥१७॥ हे ब्राह्मणदेव! यसरी केशीको मृत्यु भएको देखेपछि हर्षित हुँदै बादलहरूबाट छेकिएर बसेका देवर्षि नारद भन्न थाले...॥१८॥ हे जगन्नाथ! हे अच्युत! हजुरको पराक्रम धन्य छ, अत्यन्त धन्य छ । किनकि हजुरले देवताहरूलाई अत्यधिक मात्रामा दुःख दिइरहने यो केशी नाम भएको दैत्यलाई अत्यन्त आनन्ददायक लीलाद्वारा मारिदिनु भयो ॥१९॥ म यो मनुष्य र अश्वका बीचमा यसभन्दा पहिले अन्य कहीँ पनि नभएको यो अत्यन्त अद्‌भुत युद्ध हेर्नका लागि अर्थात् दर्शनाभिलाषी भएर स्वर्गबाट यहाँसम्म आएको थिएँ ॥२०॥ हे मधुसूदन! हजुरले आफ्नो यस अवतारमा जे जति सुन्दर कार्यहरू गर्नुभएको छ, ती सबै कार्यहरूबाट आश्चर्यचकित भएको मेरो चित्त पूर्ण रूपमा सन्तुष्ट भइरहेको छ अर्थात् मैले अत्यन्त आनन्दको अनुभूति गरिरहेको छु ॥२१॥ हे कृष्ण! यो घोडाले जाब आफ्नो जगल्टाहरू हल्लाउँदथ्यो तथा जब हिनहिनाएर आकाशतिर हेर्दथ्यो । त्यस समयमा सबै देवताहरू एवं स्वयं इन्द्र पनि अत्यन्त भयभीत हुन्थे अर्थात् धेरै मात्रामा डराउँथे ॥२२॥ हे जनार्दन! हजुरले यो अत्यन्त दुष्टात्मा घोडारूपी केशीको वध गरिदिनुभयो अर्थात् त्यसलाई मारिदिनु भयो । त्यसकारण भविष्यमा हजुर सम्पूर्ण जगत्मा 'केशव' का नामबाट अत्यन्त प्रख्यात हुनुहुनेछ ॥२३॥ हे केशिनिसूदन! हजुरको कल्याण होस्, अब म स्वर्गतिर प्रास्थान गर्दछु अर्थात् जान्छु । पर्सि दुराचारी कंससँग हजुरको युद्ध हुँदाका बखत म फेरि फर्किएर आउने छु ॥२४॥ हे पृथ्वीधर अर्थात् पृथ्वीका आश्रय! आफ्ना सबै सेवकहरू सहित उग्रसेनको पुत्र कंसको वध गर्नुभएपछि अर्थात् कंसलाई मारिदिनु भएपछि हजुरले पृथ्वीको भार उतारिदिनुहुनेछ अर्थात् पृथ्वीलाई भारबाट मुक्त गरिदिनुहुनेछ ॥२५॥ हे जनार्दन! पृथ्वीको भार उतार्दा अर्थात् पृथ्वीलाई भारमुक्त गर्दाका अवस्थामा अनेकौं राजाहरूसँग हजुरको इच्छाबाट

**तत्रानेकप्रकाराणि युद्धानि पृथिवीक्षिताम् ।**

**द्रष्टव्यानि मया युष्मत्प्रणीतानि जनार्दन ॥२६॥**

**सोऽहं यास्यामि गोविन्द! देवकार्यं महत् कृतम् ।**

**त्वयैव विदितं सर्वं स्वस्ति तेऽस्तु व्रजाम्यहम् ॥२७॥**

सम्पन्न हुने अनेकौं युद्धहरूको मैले प्रत्यक्ष रूपमा दर्शन गर्नेछु ॥२६॥ हे गोविन्द! अब म बिदा हुन चाहन्छु। हजुरले देवताहरूको अत्यन्त ठूलो कार्य सम्पन्न गरिदिनुभयो। हजुर सबै कुराको ज्ञाता हुनुहुन्छ, म धेरै के बताउँ? हजुरको कल्याण होस्, म जान्छु ॥२७॥

**पराशर उवाच**

**नारदे तु गते कृष्णः सह गोपैरविस्मितः ।**
**विवेश गोकुलं गोपीनेत्रपानैकभाजनम् ॥२८॥**

**पराशरजीले भन्नुभयो–** त्यहाँबाट नारद गइसकेपछि गोपहरूद्वारा सम्मानित एवम् गोपिनीहरूका आँखाहरूका एकमात्र दृश्य परमात्मा श्रीकृष्णले गोपालहरूसँगै गोकुलमा प्रवेश गर्नुभयो ॥२८॥

**इति विष्णुमहापुराणे पञ्चमांशे षोडशोऽध्यायः ।**

ॐ

## सप्तदशोऽध्यायः                    अध्याय – १७

### "अक्रूरस्य गोकुलयात्रा"
(अक्रूरको गोकुल यात्रा)

पराशर उवाच

अक्रूरोऽपि विनिष्क्रम्य स्यन्दनेनाशुगामिना।

कृष्णसन्दर्शनायैकः प्रययौ नन्दगोकुलम् ॥१॥

चिन्तयामास चाक्रूरो नास्ति धन्यतरो मया।

योऽहमंशावतीर्णस्य मुखं द्रक्ष्यामि चक्रिणः ॥२॥

अद्य मे सफलं जन्म सुप्रभाता च मे निशा।

यदुन्निद्राब्जपत्राक्षं विष्णोर्द्रक्ष्याम्यहं मुखम् ॥३॥

अद्य मे सफले नेत्रे अद्य मे सफला गिरः।

यन्मे परस्परालापो दृष्ट्वा विष्णुं भविष्यति ॥४॥

पापं हरति यत् पुंसां स्मृतं सङ्कल्पनामयम्।

तत् पुण्डरीकनयनं विष्णोर्दक्ष्याम्यहं मुखम् ॥५॥

निर्जग्मुश्च यतो वेदा वेदाङ्गान्यखिलानि च।

द्रक्ष्यामि तत् परं धाम धाम्नां भगवतो मुखम् ॥६॥

**पराशरजीले भन्नुभयो** –अक्रूरजी पनि अत्यन्त शीघ्रतापूर्वक मथुराबाट निस्किएर परमात्मा श्रीकृष्णको दर्शन गर्ने अभिलाषाबाट यथार्थ रूपमा अभिप्रेरित भएर अत्यन्त तीव्रगति भएका घोडाहरूले तानेको सुन्दर रथमा सवार भएर नन्दगोपको गोकुलतिर लागे ॥१॥ गोकुलतिर जाँदै गर्दा बाटामा अक्रूरजीले चिन्तन गर्न थाले यो संसारमा म जस्तो सौभाग्यशाली व्यक्ति अरु कोही पनि छैन। किनकि, म आफ्नो अंशरूपबाट अवतार लिनुभएका सुदर्शन चक्र धारण गर्नुहुने परमात्मा श्रीविष्णुको पूर्ण रूपमा फुलेको कमलजस्तो मुखमण्डललाई आफ्ना यिनै साधारण आँखाले देख्न सक्षम हुनेछु॥२॥ आज मेरो जन्म यथार्थ रूपमा सफल हुनेछ, मेरा लागि आजको रात अवश्य पनि अत्यन्त सुन्दर एवं मङ्गगय हुनेछ। किनकि आज मैले पूर्ण आकारमा फुलेको कमलको फूलजस्ता आँखाहरू भएका परमात्मा श्रीविष्णुका मुखको प्रत्यक्ष रूपमा दर्शन गर्ने अवसर पाउनेछु ॥३॥ आज मेरा आँखा र वचन पनि सफल हुनेछन्। किनकि आज मैले प्रत्यक्ष रूपमा परब्रह्मपरमात्मा श्रीविष्णुको दर्शन गर्नेछु एवं उहाँसँग मेरो एक आपसमा कुराकानी पनि हुनेछ। त्यसकारण म आफूलाई अत्यन्त सौभाग्यशाली सम्भन्छु॥४॥ जसको मुखारविन्दको कल्पनाद्वारा मात्र स्मरण गर्दा पनि सम्पूर्ण पापहरू पूर्ण रूपमा नष्ट हुन्छन्; आज म उहाँ पूर्ण आकारमा फुलेको कमलका समान आँखाहरूबाट सुशोभित भएका परब्रह्म परमात्मा श्रीविष्णुका मुखको दर्शन गर्नेछु॥५॥ जुन परमात्माबाट चारोटै वेदहरू र सबै वेदाङ्गहरू प्रकट अर्थात् उत्पन्न भएका छन् तथा जसको मुखमण्डल सूयादि सम्पूर्ण तेजहरूको आश्रय हो। आज म उहाँकै अत्यन्त तेजोमय मुखमण्डलको दर्शन गर्नेछु ॥६॥ जो सबैको

यज्ञेषु यज्ञपुरुषः पुरुषैः पुरुषोत्तमः ।

इज्यते योऽखिलाधारस्तं द्रक्ष्यामि जगत्पतिम् ॥७॥

इष्ट्वा यमिन्द्रो यज्ञानां शतेनामरराजताम् ।

अवाप तमनन्तादिमहं द्रक्ष्यामि केशवम् ॥८॥

न ब्रह्मा नेन्द्ररुद्राश्विवस्वादित्यमरुद्गणाः ।

यस्य स्वरूपं जानन्ति स्प्रक्ष्यत्यङ्गं स मे हरिः ॥९॥

सर्वात्मा सर्ववित् सर्वः सर्वभूतेष्ववस्थितः ।

यो वितत्याव्ययो व्यापी स वक्ष्यति मया सह ॥१०॥

मत्स्यकूर्मवराहाश्वसिंह रूपादिभिः स्थितिम् ।

चकार जगतो योऽजः सोऽद्य मामालपिष्यति ॥११॥

साम्प्रतञ्च जगत्स्वामी कार्यमात्महृदि स्थितम् ।

कर्तुं मनुष्यतां प्राप्तः स्वेच्छादेहधृगव्ययः ॥१२॥

योऽनन्तः पृथिवीं धत्ते शेखरस्थितिसंस्थिताम् ।

सोऽवतीर्णो जगत्यर्थे मामक्रूरेति वक्ष्यति ॥१३॥

पितृ–पुत्र–सुहृद्–भ्रातृ–मातृ–बन्धुमयीमिमाम् ।

यन्मायां नालमुत्तर्तुं जगत् तस्मै नमो नमः ॥१४॥

परम आश्रय हुनुहुन्छ, जो पुरुषोत्तम हुनुहुन्छ र सबै किसिमका जसको उपासना गरिन्छ; आज म उहाँ परब्रह्म परमात्मा जगत्पतिको दर्शन गर्नेछु, यसैले म आज अत्यन्त भाग्यशाली भएको छु ॥७॥ जुन परमात्माको एक सय ओटा यज्ञहरूका माध्यमद्वारा उपासना गरेर इन्द्रले देवताहरूको राजा अर्थात् देवराज प्राप्त गरे एवं जसको आदि र अन्त रहेको छैन, आज म उहाँ परमात्मा केशवको प्रत्यक्ष रूपमा दर्शन गर्नेछु ॥८॥ ब्रह्मा, इन्द्र, रुद्रहरू, अश्विनीकुमार, वसुहरू एवं मरुत्हरूलाई पनि जसको स्वरूपका विषयमा यथार्थ ज्ञान हुन सकेको छैन; आहा! उहाँ परमात्मा श्रीहरिले आज मेरो अङ्गको अर्थात् शरीरको स्पर्श गर्नुहुनेछ ॥९॥ जुन परमात्मा सबैको आत्मा हुनुहुन्छ, जुन परमात्मा सबैको ज्ञाता हुनुहुन्छ, जो सबैको स्वरूप हुनुहुन्छ एवं जो अचिन्त्य अर्थात् जसको विषयमा मन, बुद्धिद्वारा चिन्तन गर्न सकिँदैन; अव्यय अर्थात् जसको कहिल्यै नाश हुँदैन र जसले सम्पूर्ण प्राणीमात्रमा व्यापक भएर निवास गर्नुभएको छ; यस्ता परब्रह्म परमात्मा श्रीविष्णुले आज मसँग प्रत्यक्ष रूपमा कुराकानी गर्नुहुनेछ ॥१०॥ जुन परमात्मले मत्स्य, कूर्म, वाराह, हयग्रीव र नृसिंह आदि स्वरूपहरूमा अवतार लिनुभएर जगत्को अर्थात् पृथ्वीको रक्षा गर्नुभएको छ तथा जो अजन्मा र अविनाशी हुनुहुन्छ; उहाँ परब्रह्म परमात्माले आज मसँग कुराकानी गर्नुहुनेछ ॥११॥ जुन परमात्माले आफू सम्पूर्ण जगत्को स्वामी भए तापनि यस समयमा उहाँ अव्ययात्माले आफ्नो मनमा विचार गरिएको कार्य सम्पन्न गर्नका लागि आफ्नो स्वेच्छा अनुसार मनुष्यको स्वरूप धारण गर्नुभएको छ ॥१२॥ जुन अव्यय परमात्माले आफ्नो स्वेच्छा अनुसारको स्वरूप धारण गर्नुहुन्छ र जसले अनन्त नागको स्वरूप धारण गरेर आफ्नो शिरमा पृथ्वीलाई धारण गर्नुभएको छ ; यो जगत्को कल्याण गर्नका लागि अवतार लिनुभएका उहाँ परब्रह्म परमात्मा श्रीविष्णुले आज मलाई अक्रूर भनेर सम्बोधन गर्नुहुनेछ ॥१३॥ जसको जगत् पिता, पुत्र, सुहृदयी, दाजु भाई, माता र बन्धु बान्धवरूपी मायाबाट मुक्त हुन कठिन छ अर्थात् यो मायालाई पार गर्ने सामर्थ्य कसैमा छैन, उहाँ मायाका अधिपति परमात्मालाई पटक पटक नमस्कार छ ॥१४॥

तरत्यविद्यां विततां हृदि यस्मिन् निवेशिते।

योगी मायाममेयाय तस्मै विद्यात्मने नमः ॥१५॥

यज्विभिर्यज्ञपुरुषो वासुदेवश्च सात्वतैः।

वेदान्तवेदिभिर्विष्णुः प्रोच्यते यो नतोऽस्मि तम्॥१६॥

यथा तत्र जगद्धाम्नि धातर्येतत् प्रतिष्ठितम्।

सदसत् तेन सत्येन मय्यसौ यातु सौम्यताम्॥१७॥

स्मृते सकलकल्याण–भाजनं यत्र जायते।

पुरुषस्तमजं नित्यं व्रजामि शरणं हरिम्॥१८॥

पराशर उवाच

इत्थं सञ्चिन्तयन् विष्णुं भक्तिनम्रात्ममानसः।

अक्रूरो गोकुलं प्राप्तः किञ्चित् सूर्ये विराजति॥१९॥

स ददर्श तदा तत्र कृष्णमादोहने गवाम्।

वत्समध्यगतं फुल्लनीलोत्पलदलच्छविम्॥२०॥

अस्पष्टपद्मपत्राक्षं श्रीवत्साङ्कितवक्षसम्।

प्रलम्बबाहुमायामि–तुङ्गोरःस्थलमुन्नसम्॥२१॥

सविलासस्मिताधारं बिभ्राणं मुखपङ्कजम्।

तुङ्गरक्तनखं पद्भ्यां धरण्यां सुप्रतिष्ठितम्॥२२॥

बिभ्राणं वाससी पीते वन्यपुष्पविभूषितम्।

सेन्दुनीलाचलाभं तं सिताम्भोजावतंसकम्॥२३॥

जसमा अन्तरमात्मालाई एकग्रतापूर्वक लगाइदिनाले योगीले अविद्यारूपी मायालाई पार गर्न सक्तछ अर्थात् त्यस्तो योगी मायाबाट मुक्त हुन्छ, उहाँ विद्यास्वरूप परमात्मालाई नमस्कार छ ॥१५॥ जुन परमात्मालाई यज्ञ गर्ने र गराउनेहरूले यज्ञपुरुष, सात्वत अर्थात् यादव अथवा भगवान्का भक्तले वासुदेव र वेदान्तका विषयमा यथार्थ ज्ञान भएकाहरूले विष्णु भन्दछन्, उहाँलाई पटक पटक नमस्कार छ ॥१६॥ जुन सत्यका आधारमा यो सम्पूर्ण जगत् उहाँ जगत्का अधिपति एवं परम आधार परमात्मामा अवस्थित रहन्छ, त्यही सत्यका आधारमा परब्रह्म परमात्मा मसँग प्रसन्न भइदिनुहोस् ॥१७॥ जुन परब्रह्म परमात्मालाई स्मरण मात्र गर्ने पुरुष यथार्थ रूपमा कल्याणको पात्र बन्दछ, म सधैं उहाँ अजन्मा र अविनाशी परमात्मा श्रीहरिको शरणमा पर्दछु ॥१८॥ **पराशरजीले भन्नुभयो** –हे मैत्रेय! भक्ति र विनयबाट सम्पन्न चित्तका स्वामी अक्रूर यसरी परमात्मा श्रीविष्णुको स्मरण अर्थात् चिन्तन गर्दै सूर्य अस्ताउनु भन्दा केही पहिले नन्दगोपको नगरी गोकुलमा पुगे ॥१९॥ गोकुलमा पुगिसकेपछि अक्रूरले सबैभन्दा पहिले पूर्ण रूपमा फक्रिएर फुलेको नीलकमलको जस्तै कान्तिबाट सम्पन्न हुनुभएका परब्रह्म परमात्मा श्रीकृष्णलाई गाईहरूको दुहुने स्थान अर्थात् कलचौँडामा बाच्छाहरूका बीचमा बसिरहनु भएको देखे ॥२०॥ त्यसपछि उनले देखे उहाँका आँखा नीलकमलजस्तै थिए। उहाँको छाती श्रीवत्सचिन्हबाट सुशोभित भएको थियो। हातहरू लामा लामा थिए। छाती विशाल एवं उच्च थियो तथा नाक पनि सप्रिएको थियो ॥२१॥ र उहाँ अत्यन्त मनमोहक, मुखारविन्दबाट सुशोभित हुनुभएको थियो तथा सप्रिएका र राता नङहरूबाट सम्पन्न भएका चरणहरूलाई आधार बनाएर पृथ्वीमा अर्थात् जमिनमा बसिरहनुभएको थियो ॥२२॥ जसले दुइओटा पीताम्बर धारण गर्नुभएको थियो, जङ्गली फूलहरूबाट विभूषित हुनुभएको थियो तथा जसका सेता कमलका आभूषणहरूबाट सम्पन्न श्याम शरीर चन्द्रमाबाट सम्पन्न नीलाचल पर्वतका जसरी सुशोभित भएको थियो ॥२३॥ हे ब्राह्मणश्रेष्ठ! उनले

हंसकुन्देन्दुधवलं नीलाम्बरधरं द्विज।
तस्यानु बलभद्रञ्च ददर्श यदुनन्दनम् ॥२४॥
प्रांशुमुन्नतबाहुं सं विकासिमुखपङ्कजम्।
मेघमालापरिवृतं कैलासाद्रिमिवापरम् ॥२५॥
तौ दृष्ट्वा विकसद्वक्त्रसरोजः स महामतिः।
पुलकाञ्चितसर्वाङ्गस्तदाक्रूरोऽभवन्मुने ॥२६॥
एतत् तत् परमं धाम तदेतत् परमं पदम्।
भगवद्वासुदेवांशो द्विधा योऽयमवस्थितः ॥२७॥
साफल्यमक्ष्णोर्युगमेतदत्र
दृष्टे जगद्धारति यातमुच्चैः।
अप्यङ्गमेतद् भगवत्प्रसादाद्
दत्तेऽङ्गसङ्गे फलवन्मम स्यात् ॥२८॥
अप्येष पृष्ठे मम हस्तपद्मं
करिष्यति श्रीमदनन्तमूर्तिः।
यस्याङ्गुलिस्पर्शहताखिला–
घेरवाप्यते सिद्धिरपास्तदोषा ॥२९॥
येनाग्निविद्युद्रविरश्मिमा–
लाकरालमत्युग्रमपास्य चक्रम्।
चक्रंघ्नता दैत्यपतेर्हतानि
दैत्याङ्गनानां नयनाञ्जनानि ॥३०॥

परमात्मा श्रीकृष्णका पछाडि हंस, कुन्द र चन्द्रमाजस्तै गोरो वर्ण भएका तथा नीलाम्बर धारण गर्नुभएका बलरामलाई देखे ॥२४॥ जसका हातहरू अत्यन्त विशाल थिए, काँध अग्लो थियो, मुख फुलेको कमलजस्तै थियो तथा जो मेघमालाले घेरिएर रहेको दोस्रो कैलास पर्वतका जसरी नै सुशोभित भइरहनुभएको थियो ॥२५॥ हे मुनीश्वर! परमात्मा श्रीकृष्ण र अत्यन्त पराक्रमी बलरामलाई देख्ता धर्मात्मा अक्रूरको मुख प्रफुल्लित अर्थात् हर्षित भएको थियो तथा उनको सम्पूर्ण शरीर अत्यन्त रोमाञ्चित भएको थियो ॥२६॥ त्यसपछि उनी मनमनै भन्न थाले– यी दुई स्वरूपहरूमा जसमा परमात्मा श्रीवसुदेवको अंश अवस्थित रहेको छ, उहाँ नै परमधाम र उहाँ नै परमपद हुनुहन्छ अर्थात् परमधाम र परमपद दुवै उहाँ मात्र हुनुहुन्छ ॥२७॥ यी जगत्का विधाताहरूको दर्शन गर्ने अवसर पाएर आज मेरा आँखाहरू अत्यन्त पवित्र भए। तर के अव परमात्माको कृपा प्राप्त गरेर उहाँको अङ्गलाई स्पर्श गर्ने अवसर प्राप्त भएर मेरो शरीर पपनि कृतकृत्य हुन सक्दछ? ॥२८॥ जसको औंला मात्रको स्पर्श गर्दा पनि सबै पापहरूबाट मुक्त भएको पुरुषले मोक्ष प्राप्त गर्दछ; के उहाँ परब्रह्म परमात्मा श्रीहरिले मेरो पिठ्यूँमा आफ्नो कमल जस्तो हात राखिदिनु होला? ॥२९॥ जुन परमात्माले विद्युत, अग्नि र सूर्यका किरणहरूको मालाजस्तो आफ्नो सुदर्शन चक्र प्रहार गरेर दैत्यपतिका सेनाहरूको पूर्ण रूपमा विनाश गर्दै असुर सुन्दरीहरूको आँखाको गाजल पखालिदिनु भएको थियो अर्थात् आ–आफ्ना पतिहरूको विनाश भएको देखेर निरतर रूपमा बहिररहेका आँसुहरूबाट दैत्यहरूका आँखाको जुन गाजल पखालिएको थियो, त्यसको कारकतत्व भगवान् हुनुहुन्थ्यो ॥३०॥ जसलाई एक बिन्दु समर्पण गर्नाले बलिराजाले पृथ्वीमा अत्यन्त रमणीय भोग र

यत्राम्बु विन्यस्य बलिर्मनोज्ञानवाप भोगान् वसुधातलस्थः। तथामरत्वं त्रिदशाधिपत्वं मन्वन्तरं पूर्णमपेतशत्रुः ॥३१॥

एक मन्वन्तरसम्म देवत्व प्राप्त गर्दै पूर्ण रूपमा शत्रुविहीन भएर देवराज इन्द्रको पद प्राप्त गरेका थिए ॥३१॥ उहाँ

अप्येष मां कंसपरिग्रहेण
दोषास्पदीभूतमदोषदुष्टम्।
कर्तावमानोपहतं धिगस्तु
तज्जन्म नः साधुवहिष्कृतं यत् ॥३२॥
ज्ञानात्मकस्यामलसत्वरा–
शेरपेतदोषस्य सदा स्फुटस्य।
किं वा जगत्यत्र समस्तपुंसा–
मज्ञातमस्यास्ति हृदि स्थितस्य ॥३३॥
तस्मादहं भक्तिविनम्रचेता
व्रजामि सर्वेश्वरमीश्वराणाम्।
अंशावतारं पुरुषोत्तमस्य
अनादिमध्यान्तमयस्य विष्णोः ॥३४॥

परमात्मा श्रीविष्णुले के म आफू यथार्थमा निर्दोष भए तापनि कंसको सङ्गतले गर्दा मलाई दोषी सम्झिएर मेरो अपमान गर्नुहोला? मजस्तो सन्त भएर पनि तिरस्कृत पुरुषको जन्मलाई धिक्कार छ ॥३२॥ अथवा संसारमा यस्तो कुन वस्तु होला, जसका विषयमा उहाँ ज्ञानस्वरूप विसुद्ध तत्त्व, निर्दोष, नित्यप्रकाश सबै प्राणीमात्रका हृदयमा विराजमान नभएका परमात्मालाई ज्ञान नभएको होस् ॥३३॥ त्यसकारण म उहाँ ईश्वरहरूका पनि ईश्वर, आदि, मध्य र अन्त नहुनु भएका पुरुषोत्तम परमात्मा श्रीविष्णुको अंशबाट अवतार लिनुभएका श्रीकृष्णका नजिकमा जान्छु र उहाँले मेरो अपमान नगर्नु हुने कुरामा म विश्वस्त रहेको छु। किनकि उहाँले शरणागतलाई सहर्ष स्वीकार गर्नुहुन्छ ॥३४॥

इति विष्णुमहापुराणे पञ्चमांशे सप्दशोऽध्यायः।



## अष्टादशोऽध्यायः

## अध्याय – १८

### 'भगवतः श्रीकृष्णस्य मथुरागमनम्, गोपीनां विरहवर्णनम्, अक्रूरस्य मोहश्च'

(भगवान् श्रीकृष्ण मथुरा प्रस्थान)

पराशर उवाच

चिन्तयन्निति गोविन्दमुपागम्य स यादवः ।
अक्रूरोऽस्मीति चरणौ ननाम शिरसा हरेः॥१॥
सोऽप्येनं ध्वजवज्राब्जकृतचिन्हेन पाणिना ।
संस्पृश्याकृष्य च प्रीत्या सुगाढं परिषस्वजे ॥२॥
कृतसंवादनौ तेन यथावद् बल–केशवौ ।
ततः प्रविष्टौ संहृष्टौ तमादायात्ममन्दिरम् ॥३॥
सह ताभ्यां तदाक्रूरः कृतसंवादनादिकः ।
भुक्तभोज्यो यथान्यायमाचचक्षे ततस्तयोः ॥४॥
यथा निर्भर्त्स्यते तेन कंसेनानकदुन्दुभिः ।
यथा च देवकी देवी दानवेन दुरात्मना ॥५॥
उग्रसेने यथा कंसः सुदुरात्मा च वर्तते ।
यं चैवार्थं समुद्दिश्य स कंसेन विसर्जितः ॥६॥
तत् सर्वं विस्तराच्छ्रुत्वा भगवान् केशिसूदनः ।
उवाचाखिलमप्येतज्ज्ञातं दानपते! मया ॥७॥
करिष्ये च महाभाग! यदत्रौपयिकं मतम् ।
विचिन्त्यं नान्यथैत् ते विद्धि कंसं हतं मया ॥८॥

**पराशरजीले भन्नुभयो–** हे मैत्रेय! यदुवंशीय सर्वश्रेष्ठ अक्रूरले मनमा यस प्रकार चिन्तन गर्दै परमात्मा श्रीकृष्णका नजिकमा गएर अत्यन्त नम्रतापूर्वक उहाँका चरणहरूमा आफ्नो शिर झुकाउँदै 'म अक्रूर हुँ' भनेर उहाँलाई भक्तिपूर्वक प्रणाम गरे ॥१॥ त्यस समयमा भगवान्ले पनि ध्वजा, वज्र र कमलको चिन्हबाट शोभायमान भएका आफ्ना करकमलहरूबाट अत्यन्त प्रेमपूर्वक उनलाई आफूतिर तानेर आत्मीयतापूर्वक आलिङ्गन गर्नुभयो अर्थात् अँगालो मार्नुभयो ॥२॥ त्यसपछि अक्रूरले यथायोग्य प्रणाम आदि गरिसकेपछि अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्ण अत्यधिक प्रसन्न हुँदै उनलाई लिएर आफ्नो घरमा प्रवेश गर्नुभयो ॥३॥ त्यसपछि उहाँद्वारा सम्मानित भएर तथा गृहस्थाश्रमको विधिअनुसार भोजनादि गरिसकेपछि अक्रूरले परमात्मा श्रीकृष्णसँग आफू आउनाको लक्ष्यका विषयमा विस्तापूर्वक बताउनु थाले ॥४॥ जसरी त्यो अत्यन्त दुरात्मा कंसले आनकदुन्दुभि वसुदेव तथा देवी देवकीलाई अत्यन्त अपमान गर्दै पीडा दिइरहेको थियो तथा जसरी त्यो अत्यन्त दुष्ट स्वभाव भएको दुराचारी दैत्यले आफ्ना पिता उग्रसेनसँग दुर्व्यवहार गरिरहेको थियो अर्थात् आफ्ना पितालाई अत्यधिक रूपमा मानसिक यातना दिइरहेको थियो र जुन उद्देशयले उसले अक्रूरलाई वृन्दावन पठाएको थियो, त्यो सबै कुरा बताए ॥५–६॥ परमात्मा श्रीकेशिसूदनले ती सबै कुराहरू विस्तापूर्वक सुनिसकेपछि अक्रूरसँग भन्नुभयो–हे दानपति! मलाई यी कुराहरूको ज्ञान भइसकेको छ ॥७॥ हे धर्मात्मा! यस विषयमा मैले जे गर्दा सबैको कल्याण हुन्छ, त्यही गर्दछु। तपाईं पूर्ण रूपमा निश्चिन्त भएर बस्नुहोस् तथा तपाईं कंस मद्वारा मारिइसकेको छ भन्ने विश्वास गर्नुहोस् ॥८॥ भोलि म स्वयं र अत्यन्त पराक्रमशाली

अहं रामश्च मथुरां श्वो यास्यावः समं त्वया ।

गोपवृद्धाश्च यास्यन्ति आदायोपायनं बहु ॥९॥

निशेयं नीयतां वीर! न चिन्तां कर्तुमर्हसि ।

त्रिरात्राभ्यन्तरे कंसं हनिष्यामि सहानुगम् ॥१०॥

पराशर उवाच

समादिश्य ततो गोपानक्रूरोऽपि सकेशवः ।

सुष्वाप बलभद्रश्च नन्दगोपगृहे सुखम् ॥११॥

ततः प्रभाते विमले कृष्णरामौ महामती ।

अक्रूरेण समं गन्तुमुद्यतौ मथुरां प्रति ॥१२॥

दृष्ट्वा गोपीजनः सास्रः श्लथद्वलयबाहुकः।

निःश्वस्य चातिदुःखार्तः प्राह चेदं परस्परम् ॥१३॥

मथुरां प्राप्य गोविन्दः कथं गोकुलमेष्यति ।

नागरस्त्री–कलालापमधु श्रोत्रेण पास्यति ॥१४॥

विलासिवाक्यपानेषु नागरीणां कृतास्पदम् ।

चित्तमस्य कथं भूयो ग्राम्यगोपीषु यास्यति ॥१५॥

सारं समस्तगोष्ठस्य विधिना हरता हरिम् ।

प्रहृतं गोपयोषित्सु निर्गुणेन दुरात्मना ॥१६॥

बलराम हामी दुवै तपाईंसँग मथुरा जानेछौँ । हामीसँग गोप समाजका अन्य मान्यजनहरू पनि अत्यन्त धेरै मात्रामा कोसेली लिएर जानेछन् ॥९॥ हे वीर पुरुष! तपाईं आजको रात अत्यन्त आनन्दसँग बिताउनुहोस् तथा तपाईंले कुनै किसिमको चिन्ता गरिरहन आवश्यक छैन । किनकि आजको तीन रातभित्रै म उसका सबै सेवकहरू सहित कंसको पूर्ण रूपमा विनाश गरिदिनेछु अर्थात् त्यसलाई मारिदिनेछु ॥१०॥ **पराशरजीले भन्नुभयो**– त्यसपछि परमात्मा श्रीकृष्ण, अत्यन्त पराक्रमी बलराम र धर्मात्मा अक्रूरले सबै गोपालहरूलाई अत्यन्त दुराचारी कंसको समाचार सुनाइदिएर नन्दगोपालका घरमा अत्यन्त आनन्दपूर्वक सुत्नुभयो ॥११॥ त्यसपछि दोस्रो दिन अत्यन्त निर्मल बिहानीको समय आइसकेपछि परमात्मा श्रीकृष्ण अत्यन्त पराक्रमी बलराम र सौभाग्यशाली अक्रूरसँग मथुरा जानका लागि तयार हुनुभयो । त्यस समयमा मथुरा जानका लागि तयार हुनुभएका परमात्मा श्रीकृष्णलाई देखेर गोपिनीहरू आफ्नो आत्मामा उत्पन्न भएको दुःखबाट अत्यन्त पीडित भए एवं उनीहरूले हातमा लगाएका चुराहरू खुस्किन लागेको अनुभव गर्न थाले । उनीहरू आँखाभरी आँसु पार्दै लामो लामो श्वास फेर्दै एकले अर्कोसँग भन्न थाले अर्थात् आफूहरू बीच कुराकानी गर्न थाले ॥१२–१३॥ अब परमात्मा श्रीकृष्ण मथुरा गएपछि किन फर्किएर गोकुल आइरहनु हुन्थ्यो र ? किनकि त्यहाँ त उहाँले आफ्ना कानहरूद्वारा नगरका स्त्रीहरूको अत्यन्त सुमधुर कुराकानीरूपी रसको स्वाद लिनुहुनेछ ॥१४॥ नगरका स्त्रीहरूको विलाससम्पन्न वचनहरूको रसास्वादनमा व्यस्त अर्थात् अत्यन्त आसक्त भएपछि फेरि उहाँको चित्त विशुद्ध गाउँघरमा हुर्किएका गोपिनीहरूतिर फर्कन असम्भव छ अर्थात् उहाँले हामीहरूलाई बिर्सिदिनुहुनेछ ॥१५॥ आज अत्यन्त निर्दयी अर्थात् दया नभएका दुरात्मपन भएका विधाताले सम्पूर्ण वृन्दावनका सार अर्थात् सर्वस्वस्वरूप परमात्मा श्रीकृष्णलाई अपहरण गरेर हामी गोपिनीहरूमाथि बज्रले प्रहार गरिदिए ॥१६॥ नगरमा

भावगर्भस्मितं वाक्यं विलासललिता गतिः।

नागरीणामतीवैतत् कटाक्षेक्षितमेव च ॥१७॥

ग्राम्यो हरिरयं तासां विलासनिगडैर्युतः।

भवतीनां पुनः पार्श्वं कया युक्त्या समेष्यति ॥१८॥

एषैष रथमारुह्य मथुरां याति केशवः।

क्रूरेणाक्रूरकेणात्र निराशेन प्रतारितः ॥१९॥

किं न वेत्ति नृशंसोऽत्र अनुरागपरं जनम्।

येनैवमक्ष्णोराह्लादं नयत्यन्यत्र नो हरिम् ॥२०॥

एष रामेण सहितः प्रयात्यत्यन्तनिर्घृणः।

रथमारुह्य गोविन्दस्त्वर्यतामस्य वारणे ॥२१॥

गुरुणामग्रतो वक्तुं किं ब्रवीषि न नः क्षमम्।

गुरवः किं करिष्यन्ति दग्धानां विरहाग्निना ॥२२॥

नन्दगोपमुखा गोपा गन्तुमेते समुद्यताः।

नोद्यमं कुरुते कश्चिद् गोविन्दविनिवर्तने ॥२३॥

बसोबास गर्ने अत्यन्त सुन्दरी एवं राम्री तरुनीहरूमा भावपूर्ण मुस्कानसम्पन्न वचन, विलासपूर्ण अत्यन्त मनमोहक गति, कटाक्षपूर्ण अर्थात् प्रेमसम्पन्न तरिकाबाट हेर्ने बानी यस्ता भावहरू स्वाभाविक रूपमा नै अत्यधिक मात्रामा रहेका हुन्छन् अर्थात् यो उनीहरूको स्वाभाविक गुण नै हो ॥१७॥ त्यसकारण यस प्रकारका नगरका सुन्दरी एवं राम्रा तरुनीहरूको विलासयुक्त प्रेम–बन्धनमा बाँधिनुभएपछि अहिलेको वृन्दावननिवासी श्रीहरि फेरि किन फर्किएर हामी जङ्गली गोपिनीहरूका नजिकमा आइरहनुहुन्छ अर्थात् उहाँ फर्किएर आउने सम्भावना छँदैछैन ॥१८॥ हेर, हेर, दुष्ट स्वभाव भएका एवम् दयाविहीन अक्रूरका कुरामा बहकिएर यी कृष्ण हामीलाई यहाँ एक्लो पारेर मथुरा जानका रथमा चढेर हिड्न तयार भएका छन् ॥१९॥ यी नृशंस अर्थात् प्राणीलाई सताउने स्वभाव भएका अक्रूरलाई प्रेममा अत्यन्त आसक्त भएका मानिसहरूको हृदयको भावका बारेमा अलिकति मात्र पनि ज्ञान रहेनछ। यसैले उनले यसरी हामीहरूका आँखाका ज्योतिस्वरूप परमात्मा श्रीहरिलाई मथुरातिर लगिरहेका छन् ॥२०॥ हेर, यी अत्यन्त निष्ठुरी गोविन्द पनि बलरामलाई आफैसँग लिएर रथमा चढेर मथुरातिर जान लागिरहेका छन्। यसैले तिमीहरूले उहाँलाई रोक्ने प्रयास गर ॥२१॥ यसमा आफ्ना पिताहरूका अगाडि यस प्रकारको कार्य गर्न आफू असमर्थ रहेको भाव व्यक्त गर्ने कुनै गोपिनीलाई लक्ष्य गर्दै उसले फेरि भनी– अरे! यो तिमी के भनिरहेकी छ्यौ, आफ्ना पिताहरूका अगाडि हामी यस्तो कार्य गर्न असमर्थ छौं तर अब श्रीकृष्णको प्रेमको विरहरूपी अग्निमा जलेर भष्म हुने लागेका हामीहरूलाई हाम्रा पिताहरूले के गरिदेलान्? ॥२२॥ हेर यी नन्दगोप आदि अर्थात् गोपाल समूहका गन्यमान्य व्यक्तिहरू पनि कृष्णसँगै मथुरातिर जानका लागि तयार भइरहेका छन्। यिनीहरूमध्ये कसैले पनि गोविन्दलाई फर्काएर फेरि वृन्दावनमा ल्याउने प्रयास गर्ने छैनन् अर्थात् उनीहरूले यस कुरामा ध्यान दिनेछैनन् ॥२३॥ आजको रात मथुरानगरीमा निवास गर्ने स्त्रीहरुका लागि

सुप्रभाताद्य रजनी मथुरावासियोषिताम् ।

पास्यन्त्युन्नतवक्त्राब्जं यासां नेत्रालिपङ्क्तयः ॥२४॥

धन्यास्ते पथि ये कृष्णमितो यन्त्यनिवारिताः ।

उद्वहिष्यन्ति पश्यन्तः स्वदेहं पुलकाञ्चितम् ॥२५॥

मथुरानगरीपौरनयनानां महोत्सवः

गोविन्दावयवैर्दृष्टैरतीवाद्य भविष्यति ॥२६॥

को नु स्वप्नः सुभाग्याभिर्दृष्टस्ताभिरधोक्षजम् ।

विस्तारिकान्तिनयना या द्रक्ष्यन्तनिवारितम् ॥२७॥

अहो गोपीजनस्यास्य दर्शयित्वा महानिधिम् ।

उद्धृतान्यत्र नेत्राणि विधिनाऽकरुणात्मना ॥२८॥

अनुरागेण शैथिल्यमस्मासु व्रजता हरेः ।

शैथिल्ययमुपयन्त्याशु करेषु वलयान्यपि ॥२९॥

अक्रूरः क्रूरहृदयः शीघ्रं प्रेरयते हयान् ।

एवमार्तासु योषित्सु घृणा कस्य न जायते ॥३०॥

हा हा कृष्णरथस्योच्चैश्चक्ररेणुर्निरीक्ष्यताम् ।

दूरीकृतो हरिर्येन सोऽपि रेणुर्न लक्ष्यते ॥३१॥

इत्येवमतिहार्देन गोपीजननिरीक्षितः ।

तत्याज व्रजभूभागं सह रामेण केशवः ॥३२॥

अत्यन्त सौभाग्यसम्पन्न हुनेछ । किनकि आज उनीहरूका आँखामा आफ्नो आधिपत्य कायम गरेर बसेका प्रेमयुक्त भँवराले परमात्मा श्रीअच्युतको मुखमण्डलको रस आस्वादन गर्ने अवसर पाउनेछन् ॥२४॥ जुन मनुष्यहरू यताबाट बिना अवरोध अर्थात् अत्यन्त सहजतापूर्वक श्रीकृष्णलाई देखिरहेका छन्, तिनीहरू अत्यन्त भाग्यमानी हुन् । किनकि उनीहरूले उहाँको दर्शन गर्दाका अवस्थामा आफ्ना शरीरमा अत्यधिक मात्रामा रोमाञ्च उत्पन्न भएको अनुभव गर्नेछन् ॥२५॥ आज परमात्मा श्रीगोविन्दका अङ्ग प्रत्यङ्गहरूको दर्शन गर्ने अवसर प्राप्त गरेका मथुरानगरीका बासिन्दाहरूका आँखाहरूका लागि यो अत्यन्त ठूलो उत्सव हुनेछ ॥२६॥ आज सौभाग्यशाली मथुरानगरीका बासिन्दाहरूले कस्तो राम्रो एवं सु–सपना देखेका रहेछन्; जसको प्रभावले ती ठूलठूला आँखाहरूका स्वामिनी मथुराका स्त्रीहरूले स्वच्छन्द भावपूर्वक साक्षात् परब्रह्म परमात्मा श्रीविष्णुको दर्शन गर्ने अवसर पाउनेछन् ॥२७॥ ओहो! अत्यन्त निष्ठुरी विधाताले हामी जङ्गलमा निवास गर्ने गोपिनीहरूलाई अमूल्य निधिको लालचमा फँसाइदिएर आज उहाँलाई हाम्रा आँखाअगाडिबाट हटाइदिए ॥२८॥ हेर, हामीहरूप्रति परमात्मा श्रीहरिको अनुराग अर्थात् प्रेममा कमी आएका कारणले गर्दा हामीले हातमा लगाइराखेका चुराहरू पनि अत्यन्त चाँडै खुकुला भएर झर्न लागिसकेका छन् ॥२९॥ ओहो! हामीजस्ता अत्यन्त दुःखी भएका अवला नारीहरूमा कसले दया गर्दैन र? तर हेर! यी अत्यन्त निर्दयी हृदय भएका अक्रूर रथ तानेका घोडाहरूलई अत्यन्त तीव्र गतिमा दौडाइरहेका छन् अर्थात् छिटो गतिमा रथ हाँकिरहेका छन् ॥३०॥ हेर, यो परमात्मा श्रीकृष्ण सवार हुनभएको रथले उडाएको धुलो देखिइरहेको छ। तर ओहो! अब परमात्मा श्रीहरि हाम्रो आँखाको शक्तिभन्दा धेरै टाढा पुगिसक्नु भएकाले उहाँको रथले उडाएको धुलोसम्म पनि देख्न सकिँदैन ॥३१॥ यसरी गोपिनीहरूद्वारा अत्यन्त अनुरागी भएर हेर्दाहेर्दै बलरामसहित परमात्मा श्रीकृष्णले वृन्दावनको सिमाना नाघ्नुभयो अर्थात् गोपिनीहरूका आँखाबाट अदृश्य हुनुभयो ॥३२॥

गच्छतो जविताश्वेन रथेन यमुनातटम्।

प्राप्ता मध्याह्नसमये रामाक्रूरजनार्दनाः ॥३३॥

अथाह कृष्णमक्रूरो भवद्भ्यां तावदास्यताम्।

यावत् करोमि कालिन्द्यामाह्निकार्हणमम्भसि ॥३४॥

तथेत्युक्ते ततः स्नातः स्वाचान्तः स महामतिः।

दध्यौ ब्रह्म परं विप्र! प्रविश्य यमुनाजले ॥ ३५॥

फणासहस्रमालाढ्यं बलभद्रं ददर्श सः।

कुन्दमालाङ्गमुन्निद्रपद्मपत्रारुणेक्षणम् ॥३६॥

वृतं वासुकिरम्भाद्यैर्महद्भिः पवनाशिभिः।

संस्तूयमानं गन्धर्वैर्वनमालाविभूषितम् ॥३७॥

दधानमसिते वस्त्रे चारुपद्मावतंसकम्।

चारुकुण्डलिनं भान्तमन्तर्जलतले स्थितम् ॥३८॥

तस्योत्सङ्गे घनश्याममाताम्रायतलोचनम्।

चतुर्बाहुमुदाराङ्गं चक्राद्यायुधभूषणम् ॥३९॥

पीते वसानं वसने चित्रमाल्य–विभूषणम्।

शक्रचापतडिन्माला–विचित्रमिव तोयदम् ॥४०॥

श्रीवत्सवक्षसञ्चारुकेयूरमुकुटोज्ज्वलम्।

ददर्श कृष्णमक्लिष्ट–पुण्डरीकावतंसकम् ॥४१॥

त्यसपछि अत्यन्त तीव्र गति भएका घोडाहरूले रथमा जाँदाजाँदै पराक्रमी बलराम, परमात्मा श्रीकृष्ण र धर्मात्मा अक्रूर मध्याह्नका समयमा यमुना नदीका किनारमा पुग्नुभयो ॥३३॥ त्यहाँ पुगिसकेपछि धर्मात्मा अक्रूरले परमात्मा श्रीकृष्णसँग जबसम्म म यमुनाको पानीमा मध्याह्न समयको उपासना गर्ने कार्य सकेर फर्किएर आउँदिन, त्यस समयसम्म हजुरहरू दुवैजना यहीं बसिरहनुहोस् भने ॥३४॥ त्यसछि हे ब्राह्मणश्रेष्ठ! परमात्मा श्रीकृष्णले 'हुन्छ' भन्नुभएपछि धर्मात्म अक्रूर यमुनाको पानीमा पसेर नुहाएर एवं आचमन गरेर परब्रह्म परमात्माको ध्यान गर्न थाले ॥३५॥ त्यस समयमा अक्रुरले अत्यन्त पराक्रमी बलरामलाई हजरौं फणाहणहरूद्वारा पूर्ण रूपमा सुशोभित हुनुभएको तथा उहाँको शरीर कुन्दमालाहरूका बराबर सेतो वर्ण भएको र पूर्ण रूपमा फक्रिएर फुलेको कमलको फूलजस्तो विशाल आँखा भएको देखे ॥३६॥ उहाँ वासुकि र रम्भ आदि नागहरूका बीचमा विराजमान हुनुभएको थियो तथा गन्धर्वहरूले उहाँको प्रार्थना गरिरहेका थिए र उहाँ अत्यन्त सुगन्धमय वनमाला अर्थात् जङ्गली फूलहरूको मालाबाट विभूषित हुनुभएको थियो ॥३७॥ उहाँलाई दुइ श्याम अर्थात् कालो र नीलोको समायोजनबाट उत्पन्न हुने रङ्गको वस्त्र धारण गर्नुभएको, कमलहरूद्वारा बनेका अत्यन्त सुन्दर आभूषण अर्थात् गरगहना एवं अत्यधिक मनमोहक कुण्डल लगाउनु भएर यमुना नदीको पानीभित्र विराजमान हुनुभएको देखे ॥३८॥ अक्रूरले उहाँका काखमा आनन्दमय, कमलभूषण, बादलको जस्तो श्यामवर्ण, केही राता–राता अत्यन्त विशाल आँखाहरू भएको, चतुर्भुज स्वरूप धारण गर्नुभएको, अत्यन्त मनमोहक अङ्ग प्रत्यङ्गहरूबाट सुशोभित हुनुभएको एवम् शङ्ख, चक्र, गदाजस्ता अस्त्र–शस्त्रहरूबाट सुशोभित हुनुभएको, पीताम्बरका साथसाथै अत्यन्त विचित्र वनमालाद्वारा विभूषित हुनुभएको, इन्द्रधनुष र विद्युन्मालाबाट घेरिनुभएको, पानीले पूर्ण भएको बादलका समान, छातीमा श्रीवत्सचिन्ह र कानमा अत्यन्त देदीप्यमान कुण्डल धारण गरेर विराजमान हुनुभएका परब्रह्म परमात्मा श्रीकृष्णलाई देखे ॥३९–४१॥ यसका साथै अक्रूरले

सनन्दनाद्यैर्मुनिभिः सिद्धियोगैरकल्मषैः।

विचिन्त्यमानं तत्रस्थैर्नासाग्रन्यस्तलोचनैः ॥४२॥

बल–कृष्णौ तथाक्रूरः प्रत्यभिज्ञाय विस्मितः।

सोऽचिन्तयद् रथाच्छीघ्रं कथमत्रागताविति ॥४३॥

विवक्षोः स्तम्भयमास वाचं तस्य जनार्दनः।

ततो निष्क्रम्य सलिलाद् रथमभ्यागतः पुनः ॥४४॥

ददर्श तत्र चैवोभौ रथस्योपर्यधिष्ठितौ।

राम–कृष्णौ यथापूर्वं मनुष्यवपुषान्वितौ ॥४५॥

निमग्नश्च ततस्तोये स ददर्श तथैव तौ।

संस्तूयमानौ गन्धर्वमुनिसिद्धमहोरगैः॥४६॥

ततो विज्ञातसद्भावः स तु दानपतिस्तथा।

तुष्टाव सर्वविज्ञानमयमच्युतमीश्वरम् ॥४७॥

सन्मात्ररूपिणे ऽचिन्त्यमहिम्ने परमात्मने।

व्यापिने नैकरूपैकस्वरूपाय नमो नमः ॥४८॥

सर्वरूपाय तेऽचिन्त्य! हविर्भूताय ते नमः

नमोऽविज्ञातपाराय पाराय प्रकृतेः प्रभो ॥४९॥

सनकादि मुनिहरू, कैवल्यमुक्ति प्राप्त गरिसकेका सिद्ध एवं योगीहरूले पनि त्यस पानीमा अर्थात् यमुना नदीको पानीमा अवस्थित भएर नाकको टुप्पोमा दृष्टिलाई केन्द्रित गराएर उहाँकै अर्थात् परमात्मा श्रीकृष्णकै ध्यान गरिरहेको पनि देखे ॥४२॥ त्यस समयमा अक्रूरले त्यहाँ विराजमान हुनुभएका अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्णलाई चिनेपछि उनी अत्यन्त आश्चर्यचकित भए तथा मनमनै विचार गर्न थाले। यिनीहरू दुवै शीघ्रतापूर्वक रथ छोडेर यहाँ कसरी आइपुगे? ॥४३॥ यसपछि जब अक्रूरले केही बताउने अभिलाषा गरेका थिए, त्यस समयमा परमात्मा श्रीकृष्णले उनको बोल्ने शक्तिलाई रोकिदिनुभयो। त्यसपछि उनी यमुनाजीको पानीबाट बाहिर निस्किएर रथको नजिकमा आएर हेर्दा त्यहाँ अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्ण दुवैलाई पहिले आफूले देखेको जस्तै मनुष्य शरीरमा रथमा पहिलेको जसरी नै बसिरहनुभएको देखे अर्थात् उहाँहरूमा कुनै किसिमको परिवर्तन नभएको देखे ॥४४–४५॥ त्यसपछि उनीले फेरि यमुनाको पानीमा गए र त्यहाँ उनले फेरि पनि सिद्ध, गन्धर्व, ऋषिमहर्षि एवम् नागादिहरूले परब्रह्म परमात्मा श्रीकृष्णको स्तुति गरिरहेका देखे ॥४६॥ त्यसपछि दानपति अक्रूरले पनि यथार्थ रहस्यका विषयमा ज्ञान हासिल गरेर अर्थात् वास्तविकतालाई बुझेर परब्रह्म परमात्मा सर्वविज्ञानमय भगवान् श्रीअच्युतको स्तुति गर्न थाले ॥४७॥ जो सन्मात्रास्वरूप, मनद्वारा चिन्तन गर्न नसकिने महिमा हुनुभएको, सर्वव्यापक तथा कार्यरूपबाट एक भएतापनि कारणरूपबाट अनेक हुनुहुन्छ, उहाँ परमात्मालाई नमस्कार छ ॥४८॥ हे अचिन्तनीय परमात्मा! हजुर सर्वस्वरूप र हविस्वरूप परमेश्वर हुनुहुन्छ, हजुरलाई नमस्कार छ। हजुर प्रकृतिभन्दा पर अर्थात् उत्तम र बुद्धिभन्दा अतीत हुनुहुन्छ, हजुरलाई नमस्कार छ ॥४९॥ हजुर भूत अर्थात् जीवस्वरूप, इन्द्रियस्वरूप एवं मूलप्रकृति हुनुहुन्छ। हे परमात्मा!

भूतात्मा चेन्द्रियात्मा च प्रधानात्मा तथा भवान्।
आत्मा च परमात्मा च त्वमेकः पञ्चधा स्थितः ॥५०॥
प्रसीद सर्व सर्वात्मन् क्षराक्षरमयेश्वर।
ब्रह्मविष्णुशिवाद्याभिः कल्पनाभिरुदीरितः ॥५१॥
अनाख्येयस्वरूपात्मन्! अनाख्येयप्रयोजन!।
अनाख्येयाभिधानं त्वां नतोऽस्मि परमेश्वर ॥५२॥
न यत्र नाथ! विद्यन्ते नामजात्यादिकल्पनाः।
तद् ब्रह्म परमं नित्यमविकारि भवानजः ॥५३॥
न कल्पनामृतेऽर्थस्य सर्वस्याधिगमो यतः।
ततः कृष्णाच्युतानन्तविष्णुसंज्ञाभिरीड्यसे ॥५४॥
सर्वार्थस्त्वमज! विकल्पनाभिरेद्
देवाद्यं जगदखिलं त्वमेव विश्वम्।
विश्वात्मंस्त्वमिति विकारभावहीनः
सर्वस्मिन् न हि भवतोऽस्ति किञ्चिदन्यत् ॥५५॥
त्वं ब्रह्मा पशुपतिरर्यमा विधाता धाता
त्वं त्रिदशपतिः समीरणोऽग्निः।
तोयेशो धनपतिरन्तकस्त्वमेको
भिन्नार्थैर्जगदपि पासि शक्तिभेदैः ॥५६॥

हजुर एक भएतापनि आत्मा, परमात्मा, जीवात्मा, इन्द्रियात्मा तथा प्रकृति हुनुहुन्छ। यसप्रकार हजुर पाँच किसिमबाट विराजमान हुनुभएको छ ॥५०॥ हे सबैका आत्मा! क्षर एवं अक्षर सम्पन्न ईश्वर! हजुर प्रसन्न भइदिनुहोस्। एकमात्र हजुरकै विषयमा ब्रह्मा, विष्णु र शिव आदिको स्वरूपहरूको कल्पना गरेर हजुरको मात्र वर्णन गरिन्छ ॥५१॥ हे परमेश्वर! हजुरको स्वरूप, प्रयोजन र नामका सम्बन्धमा वचनद्वारा कसैले पनि पूर्ण रूपमा वर्णन गर्न सक्दैन अर्थात् यिनीहरू अनिर्वचनीय रहेका छन्, यिनमा वचनको प्रभाव गर्न सक्दैन। म हजुरलाई नमस्कार गर्दछु ॥५२॥ हे नाथ! हे अजन्मा परमात्मा! जहाँ नाम, जाति र कल्पनाहरूको पूर्ण रूपमा अभाव रहेको हुन्छ, हजुर त्यही सनातन, आधिपत्यसम्पन्न एवम् अजन्मा परब्रह्म परमात्मा हुनुहुन्छ ॥५३॥ किनकि कल्पना नगरिएसम्म कुनैपनि पदार्थको ज्ञान हुन सक्दैन। त्यसकारण हजुरका कृष्ण, अच्युत, अनन्त र विष्णु आदि नामहरूका आधारमा स्तुति र उपासना गरिन्छ। वास्तवमा हजुरका विषयमा कुनैपनि नामबाट स्पष्ट रूपमा बताउन सकिँदैन ॥५४॥ हे विष्णु! जुन देवतादि कल्पनामय पदार्थहरूबाट अर्थात् कल्पनाहरूका आधारमा यो अनन्त विश्वको सृष्टि भएको छ त्यो पदार्थ पनि हजुर नै हुनुहुन्छ तथा हजुर नै विकाररहित आत्मवस्तु हुनुहुन्छ, त्यसकारण हजुर विश्वरूप हुनुहुन्छ। हे परमात्मा! यी सबै पदार्थहरूमा हजुरबाहेक अन्य कुनै वस्तु रहेको छैन ॥५५॥ हजुर नै ब्रह्मा, पशुपति अर्थात् शिव, सूर्य, धाता, विधाता, इन्द्र, वायु, अग्नि, वरुण, कुबेर र यम हुनुहुन्छ। यसरी नै विभिन्न तत्त्व भएका हजुर नै अलग अलग कार्य भएको आफ्ना शक्तिहरूको भेदबाट यो सम्पूर्ण जगत्को रक्षा गर्नुहुन्छ ॥५६॥ हे विश्वेश्वर! हजुरले नै सूर्यका

**विश्वं भवान् सृजति सूर्यगभस्तिरूपो–**
**विश्वञ्च ते गुणमयोऽयमज! प्रपञ्चः ।**
**रूपं परं सदिति वाचकमक्षरं**
**यजाज्ञानात्मने सदसते प्रणतोऽस्मि तस्मै ॥५७॥**
**ॐ नमो वासुदेवाय नमः सङ्कर्षणाय ते ।**
**प्रद्युम्नाय नमस्तुभ्यमनिरुद्धाय ते नमः ॥५८॥**

किरणहरूमा प्रवेश गरेर बर्षाका रूपमा सम्पूर्ण संसारको रचना गर्नुहुन्छ। त्यसकारण यो गुणमय संसार हजुरकै स्वरूप हो । 'सत्' जसको वाचक हो, त्यो ॐ अक्षर हजुरको परम स्वरूप हो, हजुर यस सर्वज्ञानमय आत्मा सत्यस्वरूप परमात्मालाई नमस्कार छ ।५७॥ हे परमात्मा! वासुदेव, सङ्कर्षण अर्थात् बलराम, प्रद्युम्न र अग्निरुद्धस्वरूप हजुरलाई पटक पटक नमस्कार छ ॥ ५८॥

**इति श्रीविष्णुमहापुराणे पञ्चमांशे अष्यदशोऽध्यायः ।**

ॐ

## एकोनविंशोऽध्यायः

## अध्याय – १९

### "श्रीकृष्णस्य रजकवधः, मालाकारगृहे प्रवेशश्च"

(श्रीकृष्णद्वारा धोबीको वध तथा मालिका घरमा प्रवेश)

पराशर उवाच

एवमन्तर्जले विष्णुमभिष्टूय स यादवः ।

अर्चयामास सर्वेशं पुष्पैर्धूपैर्मनोरमैः ॥१॥

परित्यक्तान्यविषयो मनस्तत्र निवेश्य सः ।

ब्रह्मभूते चिरं स्थित्वा विरराम समाधितः ॥२॥

कृतकृत्यमिवात्मानं मन्यमानो महामतिः ।

आजगाम रथं भूयो निर्गम्य यमुनाम्भसः ॥३॥

रामकृष्णौ च ददृशे यथापूर्वं रथे स्थितौ ।

विस्मिताक्षस्तदाक्रूरस्तञ्च कृष्णोऽभ्यभाषत ॥४॥

श्रीकृष्ण उवाच

नूनं ते दृष्टमाश्चर्यमक्रूर! यमुनाजले ।

विस्मयोत्फुल्लनयनो भवान् संलक्ष्यते यतः ॥५॥

अक्रूर उवाच

अन्तर्जले यदाश्चर्यं दृष्टं तत्र मयाच्युतः ।

तदत्रापि हि पश्यामि मूर्तिमत् पुरतः स्थितम् ॥६॥

जगदेतन्महाश्चर्यरूपं यस्य महात्मनः ।

तेनाश्चर्यवरेणाहं भवता कृष्ण! सङ्गतः ॥७॥

**पराशरजीले भन्नुभयो** – यदुवंशीय अक्रूरले यसभन्दा पहिले बताइएअनुसार यमुनाको पानीभित्र परमात्मा श्रीविष्णुको स्तुति गर्दै उहाँ सर्वेश्वरको मानसिक रूपमा सङ्कल्प गरिएको धूप, दीप र फूल आदिद्वारा विधिपूर्वक पूजा गरे ॥१॥ उनले आफ्नो मनलाई अन्य विषय वासनाहरूबाट पूर्ण रूपमा हटाएर उहाँ परब्रह्म परमात्माका शरणमा लगाइदिए र धेरै लामो समयसम्म उहाँ परमात्मा मात्र समाहित भावपूर्वक उहाँकै ध्यानमा केन्द्रित भएर रहे, त्यसपछि समाधिबाट निवृत्त भए ॥२॥ त्यसपछि धर्मात्मा अक्रूर आफूलाई कृतकृत्य भएको अर्थात् पूर्ण रूपले काम वा इच्छासिद्धि भएको वा अत्यन्त सन्तुष्ट भएको सम्झँदै यमुना नदीको पानीबाट बाहिर निस्किएर फेरि आफ्नो रथ भएको ठाउँमा आए ॥३॥ त्यहाँ आएर उनले आश्चर्यसम्पन्न आँखाहरूबाट पराक्रमी बलराम र परमात्मा श्रीकृष्णलाई रथमा पहिलेका जसरी नै बसिरहनुभएको देखे । त्यस समयमा अत्यन्त आश्चर्यचकित भएका अक्रूरसँग परमात्मा श्रीकृष्णले भन्नुभयो– ॥४॥ **श्रीभगवान्ले भन्नुभयो**– हे अक्रूर! निश्चय नै तपाईंले यमुनाको पानीमा कुनै आश्चर्यजनक कुरा देखेको हुनुपर्दछ । किनकि, तपाईंका आँखामा अत्यन्त आश्चर्यचकित भएको भाव देखिइरहेको छ ॥५॥ **अक्रूरले भने**– हे अच्युत ! मैले यमुनाको पानीमा जुन आश्चर्यमय स्वरूप देखेको थिएँ, त्यसलाई यस समयमा पनि आफ्ना अगाडि मूर्तिको स्वरूपमा देखिरहेको छु ॥६॥ हे कृष्ण! यो अत्यन्त आश्चर्यमय जगत् जसको आफ्नै स्वरूप हो, मैले उहाँ सर्वोत्तम आश्चर्यमूर्ति स्वरूप हजुरसँग सहयात्रा गर्ने अवसर पाएको छु। अर्थात् साक्षात् परब्रह्मपरमात्मासँग सङ्गत गर्ने सुनौलो मौका पाएको छु ॥७॥ हे मधुसूदन! अब

तत् किमेतेन मथुरां व्रजामो मधुसुदन।

बिभेमि कंसाद्धिग् जन्म परपिण्डोपजीविनाम् ॥८॥

इत्युक्त्वा चोदयामास तान् हयान् वातरंहसः।

सम्प्राप्तश्चातिसायाह्ने सोऽक्रूरो मथुरां पुरीम् ॥९॥

विलोक्य मथुरां कृष्णं रामञ्चाह स यादवः।

पद्भ्यां यातं महावीरौ रथेनैको विशाम्यहम् ॥१०॥

गन्तव्यं वसुदेवस्य भवद्भ्यां न तथा गृहम्।

युवयोर्हि कृते वृद्धः स कंसेन निरस्यते ॥११॥

पराशर उवाच

इत्युक्त्वा प्रविवेशाथ सोऽक्रूरो मथुरां पुरीम्।

प्रविष्टौ रामकृष्णौ च रोजमार्गमुपगतौ ॥१२॥

स्त्रीभिर्नरैश्च सानन्दं लोचनैरभिवीक्षितौ।

जग्मतुर्लीलया वीरौ दृप्तौ बालगजाविव ॥१३॥

भ्रममाणौ तु तौ दृष्ट्वा रजकं रङ्गकारकम्।

अयाचेतां सुरूपाणि वासांसि रुचिराननौ ॥१४॥

कंसस्य रजकः सोऽथ प्रसादारुढविस्मयः।

बहून्याक्षेपवाक्यानि प्राहोच्चै रामकेशवौ ॥१५॥

ततस्तलप्रहारेण कृष्णतस्य दुरात्मनः।

पातयामास कोपेन रजकस्य शिरो भुवि ॥१६॥

यी सबै आश्चर्यमय विषयहरूका बारेमा धेरै वर्णन गर्दा खासै उपलब्धि प्राप्त हुन सक्दैन। अब जाऔं, हामीले चाँडै मथुरा पुग्नुपर्दछ, म त्यो दुराचारी कंसबाट अत्यन्त भयभीत रहन्छु। अर्काको कृषिबाट प्राप्त भएको अन्नबाट जीवन निर्वाह गर्ने पुरुषहरूको जीवनलाई धिक्कार छ॥८॥ यसरी आफूमा उत्पन्न भएको भावना व्यक्त गरिसकेपछि अक्रूरले वायुका समान तीव्र गति भएका घोडाहरूलाई दौडाए र साँझका समयमा मथुरा नगरीयमा पुगे॥९॥ यदुवंशीय अक्रूरले मथुरा नगरीको राम्ररी अवलोकन गरेपछि बलराम र परमात्मा श्रीकृष्णसँग भने– हे महात्मा ! अब यहाँबाट म एक्लै रथ लिएर जान्छु, तपाईंहरू दुवैजना पैदल आउनुहोस्॥१०॥ मथुरामा पुगेपछि तपाईंहरू वसुदेवका घरमा नजानु होला। किनकि तपाईंहरूका कारणले गर्दा ती वयोवृद्ध भइसकेका वसुदेवलाई कंसले सधैं अपमानमात्रै गरिरहेको छ ॥११॥ **पराशरजीले भन्नुभयो–** यसो भनिसकेर अक्रूर मथुरानगरीमा गए। उनका पछिपछि पराक्रमी बलराम र परमात्मा श्रीकृष्ण पनि नगरमा प्रवेश गरेर नगरको मुख्य मार्ग (राजमार्ग) मा पुग्नुभयो॥१२॥ उहाँहरू दुवै अत्यन्त साहसी बालकहरू उन्मत्ततापूर्वक हिँड्नुभएको हुनाले त्यहाँका स्त्री–पुरुषहरूले अत्यन्त आनन्दित हुँदै उहाँहरूलाई हेरिरहेका थिए अर्थात् उहाँहरूको चालढाल देखेर आनन्दित भइरहेका थिए ॥१३॥ मुख्य मार्गमा यताउता घुमिरहेका अवस्थामा उहाँहरूले कपडामा बुट्टा भर्ने एक धोबीलाई देख्नुभयो त्यससँग विभिन्न किसिमका बुट्टा भरिएको अत्यन्त सुन्दर कपडा माग्नुभयो ॥१४॥ त्यो धोबी कंसको दास थियो। त्यसकारण उसले आफ्नो घरमा चढेर आश्चर्यचकित हुँदै पराक्रमी बलराम र परमात्मा श्रीकृष्णको उपेक्षा गर्दै अत्यन्त उच्च स्वरमा अनेकौं किसिमका दुर्वाक्य प्रयोग गर्दै गाली गर्न थाल्यो ॥१५॥ त्यसपछि अत्यन्त क्रोधित हुनुभएका परमात्मा श्रीकृष्णले आफ्नो हत्केलाको प्रहार गरेर त्यो अत्यन्त दुष्ट आत्मा भएको धोबीको शिर पृथ्वीमा खसाइदिनुभयो अर्थात् झारिदिनुभयो ॥१६॥ यसप्रकार त्यसलाई मारिदिएर

हत्वादाय च वस्त्राणि पीतनीलाम्बरौ ततः ।
कृष्णरामौ मुदा युक्तौ मालाकारगृहं गतौ ॥१७॥
विकासिनेत्रयुगलो मालाकारोऽतिविस्मितः ।
एतौ कस्य कुतो वैतो मैत्रेयाचिन्तयत् तदा ॥१८॥
पीतनीलाम्बरधरौ तौ दृष्ट्वातिमनोहरौ ।
स तर्कयामास तदा भुवं देवावुपागतौ ॥१९॥
विकासिमुखपद्माभ्यां ताभ्यां पुष्पाणि याचितः ।
भुवं विष्टभ्य हस्ताभ्यां पस्पर्श शिरसा महीम् ॥२०॥
प्रसादपरमौ नाथौ मम गेहमुपागतौ ।
धन्योऽहमर्चयिष्यामीत्याह तौ माल्यजीवकः ॥२१॥
ततः प्रहृष्टवदनस्तयोः पुष्पाणि कामतः ।
चारूण्येतान्यथैतानि प्रददौ स विलोभयन् ॥२२॥
पुनः पुनः प्रणम्यासौ मालाकारो नरोत्तमौ ।
ददौ पुष्पाणि चारूणि गन्धवन्त्यमलानि च ॥२३॥
मालाकारय कृष्णोऽपि प्रसन्नः प्रददौ वरान् ।
श्रीस्त्वां मत्संश्रया भद्र ! न कदाचित् प्रहास्यति ॥२४॥

अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्णले उसको पसलमा रहेका विभिन्न किसिमका कपडाहरू लिनुभयो तथा क्रमशः नीलो र पहेंलो कपडा लगाएर माली (बगैंचे) का घरमा जानुभयो ॥१७॥ हे मैत्रेय ! पूर्ण रूपमा फक्रिएर फुलेका कमलको फूलजस्ता आँखा भएका बलराम र श्रीकृष्णलाई देखेर मालीले अत्यन्त आश्चर्यचकित हुँदै मनमनै विचार गऱ्यो, यिनीहरू कसका छोरा होलान् र कहाँबाट आएका हुन्? ॥१८॥ नीलो र पहेंलो कपडा लगाउनुभएका एवम् अत्यन्त मनमोहक स्वरूप भएका यी बालकहरूलाई देखेर मालीले आफ्नो अन्तरात्मामा यी दुई देवताहरू बालकको स्वरूपमा पृथ्वीमा आएको हुनुपर्दछ भन्ने निश्चय गऱ्यो ॥१९॥ त्यसपछि पूर्ण रूपमा फक्रिएको फूलजस्तो मुखमण्डल भएका ती बालकहरूले जब फूल माग्नुभयो, त्यसबेला मालीले आफ्ना दुवै हात पृथ्वीमा राखेर आफ्नो शिरले जमिनलाई स्पर्श गऱ्यो अर्थात् उहाँहरूलाई साष्टाङ्ग प्रणाम गऱ्यो ॥२०॥ त्यसपछि मालीले भन्यो– हे नाथ! हजुर परम दयालु हुनुहुन्छ, त्यसैले मेरो घरमा आएर यो घरलाई पवित्र गराइदिनुभयो। म अत्यन्त भाग्यमानी रहेछु, किनकि आज मैले हजुरहरूको पूजा गर्ने अवसर पाएको छु ॥२१॥ त्यसपछि अत्यन्त प्रसन्न अनुहार भएको त्यो मालीले उहाँहरूको इच्छाअनुसार यो फूल राम्रो छ र त्योभन्दा पनि यो राम्रो छ, यसरी उहाँहरूलाई लोभ्याउँदै विभिन्न किसिमका अत्यन्त सुन्दर फूलहरू समर्पण गऱ्यो ॥२२॥ त्यो मालीले पटकपटक उहाँहरू दुई सर्वोत्कृष्ट पुरुषहरूलाई प्रणाम गरेर अत्यन्त सुगन्धित, सुन्दर एवं निर्मल फूल समर्पण गर्न थाल्यो अर्थात् अत्यन्त श्रद्धा र भक्तिपूर्वक दिन थाल्यो ॥२३॥ त्यसपछि परब्रह्म श्रीकृष्णले अत्यन्त प्रसन्न भएर त्यो मालीलाई वरदान दिँदै भन्नुभयो– हे भलाद्मी! मेरो आश्रयमा निवास गर्ने लक्ष्मीले तिमीलाई कहिल्यै पनि परित्याग गर्नेछैनन् अर्थात् तिम्रो घरमा सधैं निवास गर्नेछिन् ॥२४॥ हे सौम्य! अर्थात् असल स्वभावका धनी! तिम्रो बल र धनमा कहिल्यै पनि कमी आउनेछैन

बलहानिर्न ते सौम्य ! धनहानिस्तथैव च।
यावद्दिनानि तावच्च न नशिष्यति सन्ततिः ॥२५॥
भुक्त्वा च विपुलान् भोगांस्त्वमन्ते मत्प्रसादजम्।
ममानुस्मरणं प्राप्य दिव्यं लोकमवाप्स्यसि ॥२६॥
धर्मे मनश्च ते भद्र ! सर्वकालं भविष्यति।
युष्मत्सन्ततिजातानां दीर्घमायुर्भविष्यति ॥२७॥
नोपसर्गादिकं दोषं युष्मत्सन्ततिसम्भवः ।
सम्प्राप्स्यति महाभाग! यावत् सूर्यो भविष्यति ॥२८॥
पराशर उवाच
इत्युक्त्वा तद्गृहात् कृष्णो बलदेवसहायवान्।
निर्ज्जगाम मुनिश्रेष्ठ! मालाकारेण पूजितः ॥२९॥

अर्थात् ह्रास हुनेछैन तथा जबसम्म दिनको अर्थात् सूर्यको अस्तित्व रहन्छ, त्यस समयसम्म तिम्रो वंशको विनाश हुनेछैन अर्थात् तिम्रो वंशको वृद्धि भइरहनेछ॥२५॥ तिमीले आफ्नो जीवन रहँदासम्म विभिन्न किसिमका भोगहरूको उपभोग गरिरहनेछौ तथा अन्त समयमा मेरो कृपाका प्रभावले मेरो स्मरण गर्दै शरीर त्याग गरेर दिव्यलोक प्राप्त गर्नेछौ ॥२६॥ हे भलाद्मी! तिम्रो मन सधैं धर्ममा अत्यन्त आसक्त रहनेछ अर्थात् धर्ममा अत्यन्त एकाग्रतापूर्वक लाग्नेछ र तिम्रो वंशमा जन्म लिनेहरू पनि दीर्घायु हुनेछन् ॥२७॥ हे धर्मात्मा! जबसम्म सूर्यले पृथ्वीको परिक्रमा गरिरहन्छन्, त्यस समयसम्म तिम्रो वंशमा उत्पन्न भएको कुनै पनि व्यक्ति आकस्मिक रोगबाट पीडित हुनेछैन ॥२८॥ **पराशरजीले भन्नुभयो** – हे मुनिश्रेष्ठ! परमात्मा श्रीकृष्णले मालीलाई यसरी वरदान दिइसकेपछि ऊद्वारा पूजित भएर पराक्रमी बलरामसँगै उसको घरबाट निस्किएर जानुभयो ॥२९॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे एकोनविंशोऽध्यायः ।



## विंशोऽध्यायः

## अध्याय – २०

### "श्रीकृष्णस्य कुब्जानुग्रहः धनुःशालाप्रवेशः, कंसवधश्च"

(श्रीकृष्णद्वारा कुब्जी स्त्रीमाथि अनुग्रह, धनु राखिएको घरमा प्रवेश तथा कंसको वध)

पराशर उवाच

राजमार्गे ततः कृष्णः सानुलेपनभाजनाम्।

ददर्श कुब्जामायान्तीं नवयौवनगोचराम् ॥१॥

तामाह ललितं कृष्णः कस्येदमनुलेपन्।

भवत्या नीयते सत्यं वदेन्दीवरलोचने ॥२॥

सकामेनेव सा प्रोक्ता सानुरागा हरिं प्रति।

प्राह सा ललितं कुब्जा तद्दर्शनबलात्कृता ॥३॥

कान्त! कस्मान्न जानासि कंसेनविनि योजिताम्।

नैकवक्रेति विख्यातामनुलेपनकर्म्मणि ॥४॥

नान्यपिष्टं हि कंसस्य प्रीतये ह्यनुलेपनम्।

भवाम्यहमतीवास्य प्रसादधनभाजनम् ॥५॥

श्रीकृष्ण उवाच

सुगन्धमेतद् राजार्हं रुचिरं रुचिरानने।

आवयोर्गात्रिसदृशं दीयतामनुलेपनम् ॥६॥

पराशर उवाच

श्रुत्वैतदाह सा कुब्जा गृह्यतामिति सादरम्।

अनुलेपञ्च प्रददौ गात्रयोग्यमथोभयोः ॥७॥

**पराशरजीले भन्नुभयो** – यसपछि परमात्मा श्रीकृष्णले मथुरानगरीको मुख्य बाटोमा एक नवयुवती कुब्जी स्त्रीलाई शरीरमा लगाउने अत्यन्त सुगन्धित चन्दनको भाँडो लिएर आइरहेकी देख्नुभयो ॥१॥परब्रह्म परमात्मा श्रीकृष्णले अत्यन्त सुमधुर स्वरमा त्यस स्त्रीसँग भन्नुभयो– हे कमलको फूलजस्ता आँखा भएकी परम सुन्दरी! तिमी यो शरीरमा घस्ने अत्यन्त सुगन्धित चन्दन कसका लागि लिएर गइरहेकी छ्यौ? ॥२॥ परमात्मा श्रीकृष्णले यसरी अत्यन्त कामुक पुरुषको भाव व्यक्त गर्दै सोध्नुभएपछि ती अनुरागिणी कुब्जाले उहाँको दर्शनपछि अनायास रूपमा आकृष्ट चित्त भएर कोमल भावपूर्वक अर्थात् लावण्यमय शब्दमा भनिन्... ॥३॥ हे प्रिय! हजुरले मलाई चिन्न सक्नुभएन? म यो मथुरानगरीमा वक्राका नामबाट प्रसिद्ध छु। यहाँका राजा कंसले मलाई शरीरमा सुगन्धित चन्दन घस्ने (दल्ने) कार्यका लागि खटाएका छन् अर्थात् त्यो काममा लगाएका छन् ॥४॥ मथुराका राजा कंसले मबाहेक अन्य कसैले पनि पिसेको सुगन्धित चन्दन मन पराउँदैनन्। त्यसकारण यस कार्यका लागि म उनकी अत्यन्त कृपापात्रीका रूपमा रहेकी छु अर्थात् यस कार्यमा मलाई मात्र लगाउँछन् ॥५॥ **परमात्मा श्रीकृष्णले भन्नुभयो**– हे सुन्दरी! यो अत्यन्त मनमोहक सुगन्धित चन्दन त राजा–महाराजाका लागि मात्र योग्य हुन्छ, हाम्रो शरीरका लागि योग्य हुने अन्य कुनै चन्दन छ भने हामीलाई पनि देऊ ॥६॥ **पराशरजीले भन्नुभयो** – परमात्मा श्रीकृष्णको यस्तो कुरा सुनेर कुब्जाले भनिन्, "लिनुहोस्" तथा उहाँहरू दुवैलाई उहाँहरूको शरीरका लागि चन्दनादि अत्यन्त आदरपूर्वक समर्पण गरिन् ॥७॥ त्यसपछि पुरुषश्रेष्ठ!

भक्तिच्छेदानुलिप्ताङ्गौ ततस्तौ पुरुषर्षभौ ।

सेन्द्रचापौ विराजेतां सितकृष्णाविवाम्बुदौ ॥८॥

ततस्तां चिबुके शौरिरुल्लापनविधानवित् ।

उत्पाट्य तोलयामास द्व्यङ्गुलेनाग्रपाणिना ॥९॥

चकर्ष पद्भ्याञ्च तदा ऋजुत्वं केशवोऽनयत् ।

ततः सा ऋजुतां प्राप्ता योषितामभवद् वरा ॥१०॥

विलसललितं प्राह प्रेमगर्भभरालसम् ।

वस्त्रे प्रगृह्य गोविन्दं व्रज गेहं ममेति वै ॥११॥

आयास्ये भवतीगेहमिति तां प्रहसन् हरिः ।

विससर्ज जहासोच्चै रामास्यालोक्य चाननम् ॥१२॥

भक्तिच्छेदानुलिप्ताङ्गै नीलपीताम्बरौ च तौ ।

धनुश्शालां ततो यातौ चित्रमाल्योपशोभितौ ॥१३॥

आयागं तद् धनु रत्नं ताभ्यां पृष्टैश्च रक्षिभिः ।

आख्याते सहसा कृष्णो गृहीत्वापूरयद्धनुः ॥१४॥

ततः पूरयता तेन भज्यमानं बलाद्धनुः ।

चकार सुमहाशब्दं मथुरा येन पूरिता ॥१५॥

अनुयुक्तौ ततस्तौ तु भग्ने धनुषि रक्षिभिः ।

रक्षिसैन्यं निहत्योभौ निष्क्रान्तौ कार्मुकालयात् ॥१६॥

अत्यन्त पराक्रमी बलराराम र परमात्मा श्रीकृष्ण विभिन्न किसिमबाट पत्रभङ्गविधिअनुसार त्यो सुगन्धित चन्दन शरीरमा लगाएर इन्द्रधनुष–सम्पन्न श्याम अर्थात् सावलो र सेतो बादलजस्तै अत्यन्त शोभायमान देखिन थाल्नुभयो ॥८॥ त्यसपछि सीधा बनाउने विधिको विषयका ज्ञाता परमात्मा श्रीकृष्णले उनको चिउँडोमा आफ्ना हातको अगाडिका दुई औंला लगाएर ती कुब्जालाई हल्लाउनुभयो ॥९॥ तथा ती कुब्जी स्त्रीका खुट्टामा आफ्ना खुट्टाले थिचिदिनुभयो । यसप्रकार परमात्मा श्रीकेशवले उनलाई सीधा शरीर भएकी बनाइदिनुभयो र सीधा भएपछि उनी सबै स्त्रीहरूमा अत्यन्त सुन्दर स्त्री भइन् ॥१०॥ त्यसपछि ती कुब्जोबाट सीधा भएकी स्त्रीले परमात्मा श्रीगोविन्दको कपडा समाएर अत्यन्त प्रेमपूर्वक एवम् नारीसुलभ हाउभाउ देखाउँदै मिठासपूर्ण वचनमा भनिन्, "हजुर मेरो घरमा हिँड्नुहोस्" ॥११॥ त्यस समयमा परमात्मा श्रीकृष्णले भन्नुभयो– ठीक छ, केही दिन पछाडि म तिम्रो घरमा अवश्य आउनेछु। ती स्त्रीलाई यसो भनेर बिदा गर्नुभयो एवं बलरामका मुखमण्डलमा हेरेर उच्चस्वरमा हाँस्न थाल्नुभयो ॥१२॥ त्यसपछि पत्रभङ्ग विधिअनुसार शरीरमा चन्द लगाउनुभएका, नीलो र पहेँलो कपडा लगाउनुभएका तथा अनेकौं किसिमका मालाहरूबाट सुशोभित हुनुभएका अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्ण यज्ञशाला अर्थात् जुन घरमा याज्ञिक धनुष राखिएको थियो, त्यहाँ पुग्नुभयो ॥१३॥ त्यहाँ पुगिसकेपछि यज्ञको सुरक्षा गर्न बसेका सुरक्षाकर्मीहरूसँग यज्ञलाई लक्षित गरेर राखिएको धनुषका विषयमा सोध्नुभयो र उनीहरूले बताइदिएपछि परमात्मा श्रीकृष्णले अचानक त्यो धनुष उठाएर ताँदो चढाउन थाल्नुभयो ॥१४॥ त्यस धनुषमा बलपूर्वक ताँदो चढाउँदाका समयमा त्यो धनुष भाँचियो एवम् त्यस समयमा त्यो धनुष भाचिँदा यस्तो भयानक शब्द निस्कियो, जसको आवाजले सम्पूर्ण मथुरानगरी पूर्ण रूपमा गुन्जायमान भयो अर्थात् पूरै मथुरानगरी थर्कियो ॥१५॥ त्यसपछि धनुष भाँचिएको देखेपछि त्यसको सुरक्षा गर्न बसेका सुरक्षाकर्मीले उहाँहरूमाथि आक्रमण गरे । ती सबै सुरक्षाकर्मीहरूको विनाश गरिदिएर उहाँहरू दुवै धनुष राखिएको घरबाट बाहिर आउनुभयो ॥१६॥

अक्रूरागमवृत्तान्तमुपलभ्य तथा धनुः ।

भग्नं श्रुत्वाथ कंसोऽपि प्राह चाणूर–मुष्टिकौ ॥१७॥

कंस उवाच

गोपालदारकौ प्राप्तौ भवद्भ्यां तौ ममाग्रतः ।

मल्लयुद्धेन हन्तव्यौ मम प्राणहरौ हि तौ ॥१८॥

नियुद्धे तद्विनाशेन भवद्भ्यां तोषितो ह्यहम् ।

दास्याम्यभिमतान् कामान् नान्यथैतन्महाबलौ ॥१९॥

न्यायतोऽन्यायतो वापि भवद्भ्यां तौ ममाहितौ ।

हन्तव्यौ तद्वधाद् राज्यं सामान्यं नो भविष्यति ॥२०॥

इत्यज्ञाप्य स तौ मल्लौ तत आहूय हस्तिपम् ।

प्रोवाचोच्चैस्त्वया मल्ले–समाजद्वारि कुञ्जरः ॥२१॥

स्थाप्यः कुवलयापीडस्तेन तौ गोपदारकौ ।

घातनीयौ नियुद्धाय रङ्गद्वारमुपागतौ ॥२२॥

तमथाज्ञाप्य दृष्ट्वा च मञ्चान् सर्वानुपाकृतान् ।

आसन्नमरणः कंसः सूर्योदयमुदैक्षत ॥२३॥

ततः समस्तमञ्चेषु नागरः स तदा जनः ।

राजमञ्चेषु चारूढाः सहामात्यैर्महीभृतः ॥२४॥

त्यसपछि अक्रूर गोकुलबाट मथुरा आइपुगेको खबर पाएर तथा धनुष भाँचिएको कुरा सविस्तार सुनेपछि कंसले आफ्ना अत्यन्त नजिकका सेवकहरू चाणूर र मुष्टिकसँग भन्यो ॥१७॥ **कंसले भन्यो–** गोकुलबाट यहाँ दुई गोपालकुमार आएका छन् । ती दुवैलाई तिमीहरू दुवैले मल्लयुद्ध गर्दाका अवस्थामा मेरै अगाडि मारिदिनु । किनकि, यी दुवै बालक मलाई मृत्युका मुखमा पुऱ्याउनका लागि आएका हुन् ॥१८॥ यदि तिमीहरूले मल्लयुद्ध गर्दा अर्थात् कुस्ती खेल्दाका समयमा ती दुवै बालकको विनाश गरिएर अर्थात् तिनीहरूलाई मारिदिएर मलाई सन्तुष्ट गरायौ भने म तिमीहरूका सबै इच्छाहरू पूर्ण गरिदिन्छु, मेरो यो कुरालाई गलत नसम्झ ॥१९॥ तिमीहरूले न्यायपूर्वक वा अन्यायपूर्वक अर्थात् जसरी भए पनि मेरा यी अत्यन्त बलवान् शत्रुहरूलाई निश्चित रूपमा मारिदेओ, तिनीहरूको मृत्यु भएपछि यो सम्पूर्ण राज्य तिमीहरू दुवैको साधारण धन हुनेछ अर्थात् आफ्नै धनजस्तो हुनेछ ॥२०॥ यसरी कुस्तीका महारथीहरूलाई आदेश दिएपछि कंसले आफ्नो माहुतेलाई बोलायो र उसलाई आज्ञा दिँदै भन्यो, "तिमीले कुवलयापीड नाम भएको मेरो अत्यन्त उत्तम र बलवान् हात्तीलाई कुस्ती खेल्ने ठाउँमा आउने ढोकामा पूर्ण रूपमा तयारी अवस्थामा राख्नू तथा जब कुस्ती खेल्नका लागि ती दुई बालकहरू भित्र आउँदछन्, त्यस समयमा त्यो हात्तीका माध्यमद्वारा तिनीहरूको विनाश गरिदिनू अर्थात् तिनीहरूलाई मारिदिनू, जस्तोसुकै अवस्थामा पनि तिनीहरू जीवित रहन नपाऊन् ॥२१–२२॥ यसरी त्यसलाई आज्ञा दिएर तथा सबै बस्ने मञ्चहरूको पूर्ण रूपमा निरीक्षण गरेर, जसको मृत्युको समय अत्यन्त नजिक आइसकेको छ, त्यो अत्यन्त दुराचारी र महापातकी कंस अति व्यग्रतापूर्वक सूर्योदय हुने समयको प्रतीक्षा गर्न थाल्यो ॥२३॥ यसपछि बिहानीको अत्यन्त स्वच्छ र निर्मल सूर्योदय भएपछि सबै नागरिकहरू अर्थात् नगरका वासिन्दाहरू साधारण मञ्चहरूमा बसे र आफ्ना सेवकहरूसहित राजाहरू विशेष रूपमा उनीहरूका लागि तयार पारिएको विशेष मञ्चमा बसे ॥२४॥ त्यसपछि कुस्ती खेल्ने मैदानको

मल्लप्राश्निकवर्गश्च रङ्गमध्यसमीपतः ।
कृतः कंसेन कंसोऽपि तुङ्गमञ्चे व्यवस्थितः ॥२५॥
अन्तः पुराणां मञ्चाश्च तथान्ये परिकल्पिताः ।
अन्ये च वारमुख्यानामन्ये नागरयोषिताम् ॥२६॥
नन्दगोपादयो गोपा मञ्चेष्वन्येष्ववस्थिताः ।
अक्रूर-वसुदेवौ च मञ्चप्रान्ते व्यवस्थितौ ॥२७॥
नागरीयोषितां मध्ये देवकी पुत्रगर्द्धिनी ।
अन्तकालेऽपि पुत्रस्य द्रक्ष्यामीति मुखं स्थिता ॥२८॥
वाद्यमानेषु तूर्येष चाणुरे चापि वल्गति ।
हाहाकारपरे लोके ह्यास्फोटयति मुष्टिके ॥२९॥
हत्वा कुवलयापीडं हस्त्यारोहप्रणोदितम् ।
मदासृगनुलिप्ताङ्गौ गजदन्तवरायुधौ ॥३०॥
मृगमध्ये यथा सिंहौ गर्वलीलाविलोकितौ ।
प्रविष्टौ सुमहारङ्गं बलभद्र-जनार्दनौ ॥३१॥
हाहाकारो महान् जज्ञे सर्वमञ्चेष्वनन्तरम् ।
कृष्णोऽयं बलभद्रोऽयमिति लोकस्य विस्मयः ॥३२॥
सोऽयं येन हता घोरा पूतना सा निशाचरी ।
क्षिप्तञ्च शकटं येन भग्नौ च यमलार्जुनौ ॥३३॥

बीच भागमा कंसले कुस्तीका निर्णायकहरूलाई बसाएर स्वयं आफू पनि अत्यन्त उच्च राजसिंहासनमा बस्यो ॥२५॥ त्यहाँ राजदरबारको खोपीमा बस्ने स्त्रीहरूका लागि बेग्लै मञ्चको व्यवस्था मिलाइएको थियो र नगरका स्त्रीहरू तथा नगरवधूहरूका लागि पनि अलग्गै मञ्चको व्यवस्था गरिएको थियो ॥२६॥ अन्य केही अलग किसिमबाट बनाइएका मञ्चहरूमा नन्दगोपजस्ता गोकुलबाट त्यहाँ आएका गोपहरू एवं उनीहरूकै नजिकमा निर्मित मञ्चमा आनकदुन्दुभि वसुदेव र धर्मात्मा आक्रूर बसेका थिए ॥२७॥ देवी देवकी पनि अन्त समयमा भए पनि आफ्नो पुत्ररत्नको मुखमण्डल राम्ररी हेरिराखूँ भन्ने मनसायले अभिप्रेरित भएर नगरका स्त्रीहरूका बीचमा गएर बसेकी थिइन् ॥२८॥ त्यसपछि चारैतिर अत्यन्त मनमोहक किसिमले तूर्य नाम भएका बाजाहरू बज्न थाले, चाणूर अत्यन्त उफ्रिएको र मुष्टिकले आफ्ना तिघ्रा ठटाएको देखेर सबै दर्शकहरू हाहाकार गर्न थाले अर्थात् त्यो खेलमैदानमा धेरैजनाको वेदनापूर्ण आवाज गुञ्जन थाल्यो ॥२९॥ यस समयमा माहुतेबाट पूर्ण रूपमा अभिप्रेरित भएको कुवलयापीड नाम भएको हात्तीलाई मारिदिएर त्यस हात्तीका दुवै दाह्राहरूलाई आफ्ना हातमा लिएर अत्यन्त हर्षित र गर्वसम्पन्न अतुलनीय शरीर भएका बलराम एवम् श्रीकृष्णले लीलापूर्वक ती दाँतहरू देखाउँदै मृगहरूका बीचमा सिंहका जसरी त्यस खेलमैदानमा प्रवेश गर्नुभयो ॥३०–३१॥ त्यस समयमा सबै मञ्चहरूबाट अत्यन्त आश्चर्यमय किसिमबाट धेरैजनाको वेदनापूर्ण आवाज निस्कन थाल्यो र त्यहाँ उपस्थित भएका सबै दर्शकहरूबाट यिनै कृष्ण र यिनै बलराम हुन् भन्ने आवाज निस्कन थाल्यो ॥३२॥ जसले पूतना नाम भएकी अत्यन्त भयानक राक्षसनीको पूर्ण रूपमा विनाश गर्नुभएको थियो, आफ्नो खुट्टाको बूढीऔंलाले गाडालाई पर फ्याँकिदिनुभएको थियो, तथा जसले यमलार्जुनको रूखलाई जरासहित उखेलिदिनुभएको थियो, त्यो सबै कार्य गर्ने श्रीकृष्ण उहाँ नै हुनुहुन्छ ॥३३॥ जसले बाल्यावस्थामा नै अत्यन्त विषालु कालिय नागको

सोऽयं यः कालियं नागं ननर्तारुह्य बालकः ।

धृतो गोवर्द्धनो येन सप्तरात्रं महागिरिः ॥३४॥

अरिष्टो धेनुकः केशी लीलयैव महात्मना ।

निहता येन दुर्वृत्ता दृश्यतां सोऽयमच्युत ॥३५॥

*अयञ्चास्य महाबाहुर्बलभद्रोऽग्रतोऽग्रजः ।*

प्रयाति लीलया योषिन्मनोनयनन्दनः ॥३६॥

अयं स कथ्यते प्राज्ञैः पुराणार्थावलोकिभिः ।

गोपालो यादवं वंशं मग्नमभ्युद्धरिष्यति ॥३७॥

अयं स सर्वभूतस्य विष्णोरखिलजन्मनः ।

अवतीर्णो महीमंशो नूनं भारहरो भुवः ॥३८॥

इत्येवं वर्णिते पौरे रामे कृष्णे च तत्क्षणात् ।

उरस्तताप देवक्याः स्नेहस्नुतपयोधरम् ॥३९॥

महोत्सवमिवासाद्य पुत्राननविलोकनात् ।

युवेव वसुदेवोऽभूद् विहायाभ्यागतां जराम् ॥४०॥

विस्तारिताक्षियुगलो राजान्तः पुरयोषिताम् ।

नागरस्त्रीसमूहश्च द्रष्टुं न विरराम तम् ॥४१॥

सख्यः पश्यत कृष्णस्य मुखमत्यरुणेक्षणम् ।

गजयुद्धकृतायास–स्वेदाम्बुकणिकाचितम् ॥४२॥

फणामा चढेर नाच्नुभएको थियो तथा जसले सात रात्रिसम्म गोवर्धन नाम भएको पर्वतलाई आफ्नो हातको एउटा औंलाले थेग्नुभएको थियो, उहाँ श्रीकृष्ण यहाँ नै हुनुहुन्छ ॥३४॥ जुन परमात्माले अत्यन्त दुष्ट स्वभाव भएको अरिष्टासुर, धेनुकासुर र केशीको पूर्ण रूपमा विनाश गर्नुभएको थियो, उहाँ साक्षात् परमात्मा आज यहाँ हाम्रो अगाडि आउनुभएको छ, सबैले उहाँ अच्युतको दर्शन गरौं ॥३५॥ जुन उहाँका अगाडि अत्यन्त आकर्षक पुरुष रहनुभएको छ, उहाँ *श्रीकृष्णका दाजु अत्यन्त पराक्रमी बलराम हुनुहुन्छ,* जसले तरुनी स्त्रीहरूको मन एवम् आँखाहरूलाई अत्यन्त आनन्दित बनाइदिनुहुन्छ ॥३६॥ पुराणहरूका ज्ञाता विद्वान्हरूका अनुसार विनाश हुनै लागेको यदुवंशको उद्धार उहाँ परमात्मा श्रीगोपालले गरिदिनुहुनेछ अर्थात् त्यो वंशलाई जीवित राखिदिनुहुनेछ ॥३७॥ उहाँ श्रीकृष्ण सबै प्राणीका हृदयमा अवस्थित र सबैको कारणस्वरूप परमात्मा श्रीविष्णुको अंश हुनुहुन्छ तथा उहाँले निश्चित रूपमा पृथ्वीको भार हरण गर्नका लागि मर्त्यलोकमा अवतार लिनुभएको हो ॥३८॥ जुन समयमा मथुराका वासिन्दाहरू अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्णका विषयमा यसरी बताइरहेका थिए, त्यस समयमा अत्यन्त स्नेहका कारणले गर्दा देवी देवकीकका स्तनबाट दूध खस्न थाल्यो र उनको हृदय अत्यन्त चिन्तित भयो ॥३९॥ आफ्ना पुत्ररत्नहरूको मुखण्डल देखेपछि आनन्दबाट पूर्ण रूपमा सम्पन्न भएका वसुदेव वृद्धावस्थालाई परित्याग गरेर फेरि नवयुवकजस्तै भए ॥४०॥ राजमहलको खोपीमा सधैं निवास गर्ने स्त्रीहरू र मथुरानगरीमा निवास गर्ने महिलाहरू उहाँलाई आँखा नझिम्क्याइकन एकाग्रतापूर्वक हेरिरहे तापनि पूर्ण रूपमा तृप्त हुन सकेनन् अर्थात् सन्तुष्ट भएनन् ॥४१॥ उनीहरू आफूहरू बीचमा भन्न थाले– हे सङ्गिनीहरू! अत्यन्त रातो वर्ण भएका आँखाबाट सम्पन्न हुनुभएका परमात्मा श्रीकृष्णको अत्यन्त मनमोहक मुखमा अर्थात् अनुहारमा हेर, उहाँको त्यो मुखमण्डल कुवलयापीड नाम भएको हात्तीसँग युद्ध गर्नाले त्यसको परिश्रमबाट उत्पन्न

विकाशिशरदम्भोजमवश्यायजलोक्षितम् ।

परिभूय स्थितं जन्म सफलं क्रियतां दृशोः ॥४३॥

श्रीवत्साङ्कं महद्धाम बालस्यैतद् विलोक्यताम् ।

विपक्षक्षपणं वक्षो भुजयुग्मञ्च भामिनि ॥४४॥

किन्न पश्यसि दुग्धेन्दु-मृणालधवलाननम् ।

बलभद्रमिमं निलपरिधानमुपागतम् ॥४५॥

वल्गता मुष्टिकेनैतच्चाणूरेण तथा सखि !

क्रियते बलभद्रस्य हास्यमीषद्विलोक्यताम् ॥४६॥

सख्य ! पश्यत चाणूरो नियुद्धार्थमयं हरिम् ।

समुपैति न सन्त्यत्र किं वृद्धा युक्तकारिणः ? ॥४७॥

क्व यौवनोन्मुखीभूत-सुकुमारतनुर्हरिः ।

क्व वज्रकठिनाभोगशरीरोऽयं महासुरः ॥४८॥

इमौ सुललितौ रङ्गे वर्तेते नवयौवनौ ।

दैतेयमल्लाश्चाणूर-प्रमुखास्त्वतिदारुणाः ॥४९॥

नियुद्ध-प्राश्निकानान्तु महानेष व्यतिक्रमः ।

यद् बालबलिनोर्युद्धं मध्यस्थैः समुपेक्ष्यते ॥५०॥

पराशर उवाच

इत्थं पुरस्त्रीलोकस्य वदतश्चालयन् भुवम् ।

ववल्ग बद्धकक्षोऽन्तर्जनस्य भगवान् हरिः ॥५१॥

भएको पसिनाको थोपाबाट सम्पन्न भएकाले हिउँहरूको कणबाट अभिसिञ्चित शरद् ऋतुमा पूर्ण रूपमा फक्रिएर फुलेको कमललाई पनि लज्जित बनाइरहेको छ। उहाँको दर्शन गरेर आफ्ना आँखाहरूलाई सफल पार्ने अवसर नगुमाऔं ॥४२-४३॥ हे सुन्दरी ! यस बाललकको यो श्रीवत्साङ्कबाट सम्पन्न परम तेजस्वी छाती र शत्रुहरूलाई पूर्ण रूपमा परास्त अर्थात् पराजित गराउने पाखुराहरूलाई पनि हेर ॥४४॥ अर्की स्त्रीले भनिन्- हे, के तिमीले नीलो कपडा लगाउनुभएको र दूध, चन्द्रमा एवं कमलको नालजस्तै श्वेतवर्ण हुनुभएका बलरामजी आइरहनुभएको देखेकी छैनौ ? ॥४५॥ यसरी नै तेस्री स्त्रीले भनिन्- हेर सङ्गिनीहरू! कुस्तीको मैदानमा चक्कर लगाएर घुमिरहेको चाणूर र मुष्टिकसँग कुस्ती खेल्दै बलराम र श्रीकृष्ण कस्तोसँग हाँसिरहनुभएको छ हेर त ॥४६॥ चौथी स्त्रीले भनिन्- ओहो सङ्गिनीहरू! हेर त, चाणूरसँग कुस्ती खेल्न परमात्मा श्रीहरि अगाडि आइरहनुभएको छ । आहा! यिनीहरूलाई छुट्ट्याउने कोही वृद्ध यस सभामा रहेका छैनन्? ॥४७॥ "कहाँ भर्खरै यौवनावस्थामा प्रवेश गर्न लागेको सुकोमल शरीर भएका परमात्मा श्रीकृष्ण र कहाँ वज्रका समान अत्यन्त कठोर शरीर भएको यो अत्यन्त शक्तिशाली दैत्य अर्थात् असुर!" ॥४८॥ यिनीहरू दुवैका बीचमा कुस्ती हुन उपयुक्त छैन। किनकि यी दुवै व्यक्ति अत्यन्त सुन्दर एवं नवयौवनबाट सम्पन्न रहेको हुनुहुन्छ तथा यो कुस्तीको मैदानमा यी चाणूरजस्ता दैत्य कुस्तीका खेलाडीहरू अत्यन्त भयानक रहेका छन् ॥४९॥ यो कुस्तीका आयोजना र व्यवस्थापन तथा मूल्याङ्कन गर्नेले अत्यन्त अन्याय गरिरहेका छन् । जसले मूल्याङ्कनकर्ता अर्थात् मध्यस्थ भएर पनि कसरी बालक र बलवान्का बीचमा हुने यो कुस्तीलाई नदेखेजस्तो गरिरहेका छन् अर्थात् त्यसमा ध्यान दिएका छैनन् ॥५०॥ **पराशरजीले भन्नुभयो-** मथुरानगरीका स्त्रीहरूले आफूहरूका बीचमा यसरी कुराकानी गरिरहेको समयमा परमात्मा श्रीकृष्ण आफ्नो कम्मरलाई बलियोसँग बाँधेर दर्शकहरूका बीचमा पृथ्वीलाई हल्लाउँदै अर्थात् थर्काउँदै अत्यन्त बहादुरीपूर्वक कुस्तीको मैदानतिर दौडनुभयो ॥५१॥

बलभद्रोऽपि चास्फोट्य बबल्ग ललितं यदा ।

पदे पदे तदा भूमिर्यन्न शीर्णा तदद्भुतम् ॥५२॥

चाणूरेण तथा कृष्णो युयुधेऽमितविक्रमः ।

नियुद्धकुशलो दैत्यो बलभद्रेण मुष्टिकः ॥५३॥

सन्निपातावधूतैस्तु चाणूरेण समं हरिः ।

क्षेपणैर्मुष्टिभिश्चैव कीलवज्रनिपातनैः ॥५४॥

जानुभिश्चाश्मनिर्घातैस्तथा बाहुविघट्टितैः ।

पादोद्धूतैः प्रसृष्टैश्च तयोर्युद्धमभून्महत् ॥५५॥

अशस्त्रमतिघोरं तत् तयोर्युद्धं सुदारुणम् ।

बलप्राणविनिष्पाद्यं समाजोत्सवसन्निधौ ॥५६॥

यावद् यावच्च चाणूरो युयुधे हरिणा सह ।

प्राणहनिमवापाग्र्यां तावत्तावल्लवाल्लवम् ॥५७॥

कृष्णोऽपि युयुधे तेन लीलयैव जगन्मयः ।

खेदाच्चालयता कोपान्निजशेखरकेशरम् ॥५८॥

बलक्षयं विवृद्धिञ्च दृष्ट्वा चाणूरकृष्णयोः ।

वारयामास तूर्याणि कंसः कोपपरायणः ॥५९॥

मृदङ्गादिषु तूर्येषु प्रतिषिद्धेषु तत्क्षणात् ।

खे सङ्गतान्यवाद्यन्त देवतूर्याण्यनेकशः ॥६०॥

त्यसपश्चात् अत्यन्त पराक्रमी बलराम पनि आफ्नो अत्यन्त बलवान् हातहरू ठोक्दै अत्यन्त मनमोहक भावपूर्वक उफ्रिनुभयो । त्यस समयमा उहाँका पद–पदमा पृथ्वीमा चिरा परिन्, यही अत्यधिक आश्चर्यको विषय हो ॥५२॥ त्यस समयमा असीम शक्तिका अधिपति परमात्मा श्रीकृष्ण चाणूरसँग कुस्ती खेल्न थाल्नुभयो एवम् कुस्तीमा अत्यन्त सिपालु मुष्टिक पनि बलरामसँग कुस्ती खेल्न थाल्यो अर्थात् दुवै पक्षका बीचमा अत्यन्त भयानक युद्ध आरम्भ भयो ॥५३॥ परमात्मा श्रीकृष्णले एकापसमा भिडेर, अलग भएर, जमिनमा पछारेर, उफ्रिएर, मुड्की र वज्रका समान कुइनाले हिर्काएर, खुट्टाले हिर्काएर तथा एकअर्काको अङ्गलाई परस्परमा घोटेर युद्ध गर्न अर्थात् कुस्ती खेल्न आरम्भ गर्नुभयो । यसप्रकार त्यस समयमा परमात्मा श्रीकृष्ण र चाणूरका बीचमा अत्यन्त भयानक युद्ध अर्थात् कुस्ती आरम्भ भयो ॥५५॥ यसप्रकार त्यो सामाजिक उत्सवका अवसरमा केवल प्राणशक्ति र बलबाट सम्पन्न हुने उहाँहरू दुवैका बीचको युद्ध अर्थात् कुस्ती अत्यन्त भयानक र कठोर भए तापनि शस्त्रविनाको युद्ध अर्थात् कुस्ती भयो ॥५६॥ चाणूरले जतिजति परमात्मा श्रीकृष्णसँग कुस्ती खेल्दथ्यो, त्यति त्यति उसको प्राणशक्ति क्रमबद्ध रूपमा क्षीण हुँदै गयो अर्थात् ऊ कमजोर हुँदै गयो ॥५७॥ जगत्मय परमात्मा श्रीकृष्ण पनि अत्यन्त परिश्रम र क्रोधका कारणले गर्दा आफ्नो शिरमा लगाउनुभएको आभूषण अर्थात् कल्कीलाई कमाउँदै अत्यन्त लीलापूर्वक चाणूरसँग युद्ध गर्न अर्थात् कुस्ती खेल्न थाल्नुभयो ॥५८॥ यस युद्धमा अर्थात् कुस्तीमा चाणूरको बल विनाश हुँदै गएको र परमात्मा श्रीकृष्णको बलमा अत्यधिक मात्रामा वृद्धि भइरहेको अत्यन्त क्रोधित भएको देखेर कंसले त्यहाँ बजिरहेका सबै बाजाहरू बन्द गराइदियो ॥५९॥ यसपछि युद्ध अर्थात् कुस्ती भइरहेको मैदानमा बजिरहेका मृदङ्ग र तूर्य अर्थात् तुरही बाजा बन्द भएपछि आकाशबाट अनेकौं किसिमका तुरही बाजा एकैपटक अर्थात् संयुक्त रूपमा बज्न थाले ॥६०॥ त्यसपछि देवताहरूले अत्यन्त

जय गोविन्द! चाणूरं जहि केशव! दानवम्।

अन्तर्द्धानगा देवास्तदोचुरतिहर्षिताः ॥६१॥

चाणूरेण चिरं कालं क्रीडित्वा मधुसूदनः।

उत्पाप्य भ्रामयामास तद्वधाय कृतोद्यमः ॥६२॥

भ्रमयित्व शतगुणं दैत्यमल्लममित्रजित्।

भूमावस्फोटयामास गगने गतजीवितम् ॥६३॥

भूमावास्फोटितस्तेन चाणूरः शतधाभवत्।

रक्तस्राव-महापङ्कां चकार स तदा भुवम् ॥६४॥

बलदेवोऽपि तत्कालं मुष्टिकेन महाबलः।

युयुधे दैत्यमल्लेन चाणूरेण यथा हरिः ॥६५॥

सोऽप्येनं मुष्टिना मूर्द्धिन वक्षस्याहत्य जानुना।

पातयित्वा धरापृष्ठे निष्पिपेष गतायुषम् ॥६६॥

कृष्णस्तोशलकं भूयो मल्लराजं महाबलम्।

वाममुष्टिप्रहारेण पातयामास भूतले ॥६७॥

चाणूरे निहते मल्ले मुष्टिके विनिपातिते।

नीते क्षयं तोशलके सर्वे मल्लाः प्रदुद्रुवुः ॥६८॥

ववल्गतुस्तदा रङ्गे कृष्णसङ्कर्षणावुभौ।

समानवयसो गोपान् बलादाकृष्य हर्षितौ ॥६९॥

हर्षविभोर हुँदै अलक्षित अर्थात् अदृश्य भावपूर्वक भन्न थाले- "हे गोविन्द! तपाईंको जय होस्। हे केशव! हजुरले अत्यन्त चाँडै यो चाणूर नाम भएको दानवलाई मारिदिनुहोस् ॥६१॥ परब्रह्म परमात्मा श्रीमधुसूदन निकै लामो समयसम्म चाणूरका अगाडि लीलामात्र गरिरहनुभयो। त्यसपश्चात् त्यसको वध गर्ने लक्ष्यका साथ पूर्ण रूपमा तयार भएर चाणूरलाई उचालेर घुमाउनुभयो ॥६२॥ त्यसपछि सम्पूर्ण शत्रुहरूका विनाशकर्ता परमात्मा श्रीकृष्णले त्यो दैत्य मल्ललाई सयौंपटक घुमाइदिनुभएकाले त्यो आकाशमा नै निर्जीव भइसकेको थियो तर त्यसलाई पृथ्वीमा पछारिदिनुभयो अर्थात् बजारिदिनुभयो ॥६३॥ परमात्मा श्रीकृष्णले जमिनमा पछारिदिनुभएपछि चाणूरको शरीर सैकडौं टुक्रामा परिणत भयो। त्यस समयमा उसको शरीरबाट निस्किएको रगतले सम्पूर्ण पृथ्वी हिलाम्य भएको थियो अर्थात् पूर्ण रूपमा भिजेको थियो ॥६४॥ जसरी परमात्मा श्रीकृष्णले चाणूरसँग कुस्ती खेल्नुभएको थियो, त्यसरी नै अत्यन्त पराक्रमी बलरामले पनि मुष्टिकसँग युद्ध गर्न अर्थात् कुस्ती खेल्न थाल्नुभएको थियो ॥६५॥ बलरामले पनि उसको टाउकोमा मुड्कीले र छातीमा लात्तीले प्रहार गर्नुभएर उसलाई पृथ्वीमा पछारिदिएर त्यसलाई यसरी दल्नुभयो, जसले गर्दा उसको तत्कालै त्यहीं मृत्यु भयो ॥६६॥ त्यसपश्चात् परमात्मा श्रीकृष्णले अत्यन्त शक्तिशाली कुस्तीको खेलाडी तोशललाई बायाँ हातको मुड्कीले हानेर पृथ्वीमा ढालिदिनुभयो अर्थात् त्यसलाई पूर्ण रूपमा बेहोस बनाइदिनुभयो ॥६७॥ वरिष्ठ कुस्ती खेलाडी चाणूर, मुष्टिक र तोशलकको वध भइसकेको देखेपछि त्यहाँ उपस्थित भएका अन्य सबै किसिमका कुस्तीका खेलाडीहरू कुस्तीको मैदानलाई पूर्ण रूपमा परित्याग गरेर त्यहाँबाट भागे ॥६८॥ त्यसपछि परमात्मा श्रीकृष्ण र अत्यन्त पराक्रमी बलराम आफ्ना दौँतरी अर्थात् समकक्षी गोपकुमारहरूलाई आफूतिर तानेर उनीहरूसँग आलिङ्गन गर्दै अत्यन्त हर्षविभोर एवम् आनन्दित हुनुभयो ॥६९॥ त्यसपछि कंसले अत्यन्त

कंसोऽपि कोपरक्ताक्षः प्राहोच्चैर्व्यापृतान् नरान् ।

गोपावेतौ समाजौघान्निष्काश्येतां बलादितः ॥७०॥

नन्दोपि गृह्यतां पापो निगडैरायसैरिह ।

अवृद्धार्हेण दण्डेन वसुदेवोऽपि वध्यताम् ॥

वल्गन्ति गोपाः कृष्णेन ये चेमे सहिताः पुरः ।

गावो ह्रियन्तामेतेषां यच्चास्ति वसु किञ्चन ॥७२॥

एवमाज्ञापयन्तं तु प्रहस्य मधुसूदनः ।

उत्पत्यारुह्य तं मञ्चं कंसं जग्राह वेगतः ॥७३॥

केशेष्वाकृष्य विगलत्किरीटमवनीतले ।

कंस स पातयामास तस्योरपि पपात च ॥७४॥

निःशेषजगदाधारगुरुणा पततोपरि ।

कृष्णेन त्याजितः प्राणानुग्रसेनात्मजो नृपः ॥७५॥

मृतस्य केशेषु तदा गृहीत्वा मधुसूदनः ।

चकर्ष देहं कंसस्य रङ्गमध्ये महाबलः ॥७६॥

गौरवेणातिमहता परिखा तेन कृष्यता ।

कृता कंसस्य देहेन वेगेनेव महाम्भसः ॥७७॥

कंसे गृहीते कृष्णेन तद्भ्राताऽभ्यागतो रुषा ।

सुमाली बलभद्रेण लीलयैव निपातितः ॥७८॥

क्रोधित भएर आफ्ना आँखा राताराता पार्दै त्यहाँ भेला भएका मनुष्यहरूसँग भन्यो– "अरे! यस समाजबाट यी दुवै बालगोपालहरूलाई बलपूर्वक बाहिर निकालिदेओ ॥७०॥ यस पापी नन्दलाई फलामको सिक्रीले बाँधिदेओ तथा यहाँ उपस्थित भएका सबै वृद्ध पुरुषहरूलाई अत्यन्त अपमान गर्दै आपत्तिजनक यातना दिएर यो वयोवृद्ध वसुदेवको हत्या गरिदिनू ॥७१॥ तथा मेरो अगाडि कृष्णसँग यी जति पनि गोपकुमारहरू उफ्रिरहेका छन्, यी सबैको हत्या गरिदेओ अर्थात् यिनीहरू सबैलाई मारिदेओ तथा यिनीहरूका गाईहरू अथवा अन्य जेजति धनसम्पत्ति छ, त्यो सबै अपहरण गरेर ल्याओ ॥७२॥ जुन समयमा त्यो अत्यन्त दुराचारी कंसले यस प्रकारको आज्ञा दिइरहेको थियो, त्यसै समयमा परमात्मा श्रीमधुसूदन हाँस्दै–हाँस्दै उफ्रिएर मञ्चमा चढ्नुभयो र अत्यन्त शीघ्रतापूर्वक अर्थात् चाँडै त्यसलाई समाउनुभयो ॥७३॥ परमात्मा श्रीकृष्णले त्यो पापी कंसको कपालमा समाएर त्यसलाई तानेर पृथ्वीमा फ्याँकिदिनुभयो तथा त्यसमाथि स्वयं आफू पनि हाम्फाल्नुभयो। यस समयमा उसले शिरमा लगाएको मुकुट भुइँमा अर्थात् जमिनमा खसिसकेको थियो ॥७४॥ यो सम्पूर्ण जगत्का परम आधार परब्रह्म परमात्मा श्रीकृष्ण उफ्रिएर ऊ माथि चढ्नुभएपछि तत्कालै उग्रसेनको पुत्र कंसले आफ्नो प्राण त्याग गर्‍यो अर्थात् त्यसै समयमा उसको मृत्यु भयो ॥७५॥ त्यसपछि साक्षात् परब्रह्म परमात्मा श्रीकृष्णले त्यो मृतक कंसको कपालमा समाएर त्यसको मृत शरीरलाई कुस्ती खेलको मैदानमा तान्न थाल्नुभयो ॥७६॥ त्यो दुराचारी कंसको मृत शरीर अत्यन्त गह्रुँगो थियो। त्यसकारण त्यसलाई घिसार्दाका समयमा भयानक रूपमा पानी पर्दाका अवस्थामा उत्पन्न भएको अर्थात् बनेको खोल्सो जस्तै पृथ्वीमा एउटा खोल्सो बन्यो ॥७७॥ परब्रह्म परमात्मा श्रीकृष्णले यस प्रकार कंसलाई समाउनुभएपछि उसको भाइ सुमालीले अत्यन्त आक्रोशित भएर आक्रमण गर्‍यो, तर अत्यन्त पराक्रमी बलरामले लीलाका माध्यमद्वारा त्यसको विनाश गरिदिनुभयो अर्थात् त्यसलाई मारिदिनुभयो ॥७८॥ यसप्रकार अत्यन्त

ततो हाहाकृतं सर्वमासीत् तद्रङ्गमण्डलम्।

अवज्ञया हतं दृष्ट्वा कृष्णेन मथुरेश्वरम् ॥७९॥

कृष्णोऽपि वसुदेवस्य पादौ जग्राह सत्वरः।

देवक्याश्च महाबाहुर्बलभद्रसहायवान् ॥८०॥

उत्थाप्य वसुदेवस्तं देवकी च जनार्दनम्।

स्मृतजन्मोक्तवचनौ तावेव प्रणतौ स्थितौ ॥८१॥

वसुदेव उवाच

प्रसीद सीदतां नाथ! देवानां वरद प्रभो!।

तथावयोः प्रसादेन कृतोद्धारश्च केशव ॥८२॥

आराधितो यद्भगवानवतीर्णो गृहे मम।

दुर्वृत्तनिधनार्थाय तेन नः पावितं कुलम् ॥८३॥

त्वमतः सर्वभूतानां सर्वभूतेष्ववस्थितः।

प्रवर्तेते समस्तात्मन्! त्वत्तो भूतभविष्यती ॥८४॥

यज्ञैस्त्वमिज्यसे नित्यं सर्वदेवमयाच्युत।

त्वमेव यज्ञो यष्ट्य च यज्ञानां परमे[illegible]

[illegible]ाय जायते।

समुद्भवस्सम[illegible]

[illegible]ाश्चात्मजप्रीत्या तदत्यन्तविडम्बना ॥८६॥

[illegible] कर्ता सर्वभूतानामनादिनिधनो भवान्।

[illegible] मे मनुष्यकस्येषा जिह्वा पुत्रोति वक्ष्यति ॥८७॥

अपमानजनक किसिमबाट मथुरा नरेश कंसको मृत्यु भएको देखेपछि त्यो कुस्तीको मैदानमा उपस्थित भएका सबै नगरवासीहरूमा कोलाहल मच्चियो अर्थात् उनीहरू अत्यन्त आत्तिएर हाहाकार गर्न थाले ॥७९॥ त्यसपछि परब्रह्म परमात्मा श्रीकृष्ण र अत्यन्त पराक्रमी बलरामले देवी देवकी र आनकदुन्दुभि वसुदेवको सामीप्यमा गएर उहाँहरूका चरणको स्पर्श गर्नुभयो अर्थात् चरण समाउनुभयो ॥८०॥ त्यस समयमा परब्रह्म परमात्मा श्रीकृष्णले जन्म लिँदाका समयमा बताउनुभएको कुरालाई स्मरण गरेर आनकदुन्दुभि वसुदेव र देवी देवकीले भगवान् श्रीकृष्णलाई पृथ्वीबाट उठाएर उहाँका अगाडि अत्यन्त नम्रतापूर्वक उभिए ॥८१॥ हे प्रभु! अब तपाईं हामीबाट प्रसन्न भइदिनुहोस्। हे केशव! तपाईंले अत्यन्त दुःखी एवम् पीडित भएका देवताहरूलाई जुन वरदान दिनुभएको थियो, त्यो आज हामीमाथि कृपा अर्थात् दया गरेर पूर्ण गरिदिनुभयो ॥८२॥ हे भगवान्! हजुरले मद्वारा गरिएको आराधनालाई स्वीकार गरिदिनुभएर दुष्टहरू एवम् दुराचारीहरूको विनाश गर्नका लागि जुन मेरो घरमा जन्म ग्रहण गर्नुभयो, त्यसको प्रभावले गर्दा मेरा कुल अत्यन्त पवित्र भयो ॥८३॥ हजुर सम्पूर्ण प्राणीमात्रमा व्यापक भएर रहनुभएको छ र सम्पूर्ण प्राणीमात्रका हृदयमा अर्थात् अन्तरात्मामा [illegible] हुनुहुन्छ। हे सर्वात्मा! भूत र भ[illegible] गर्नेहरूको प्रवृत्त हुन्छन् ॥८४॥[illegible]ने पुरुष र यज्ञस्वरूप पनि अचिन्[illegible] ॥८५॥ हे जनार्दन! हजुर त सम्पूर्ण जगत्को उद्गमस्थल अर्थात् उत्पन्न हुने स्थान हुनुहुन्छ। हजुरसँग पुत्रको प्रेमभाव राखेका कारणले मेरो र देवकीको अन्तरात्मामा जुन किसिमको भ्रम उत्पन्न भएको छ, त्यो अत्यन्त हास्यास्पद कुरा हो अर्थात् त्यो अत्यन्त असम्भव विषयवस्तु हो ॥८६॥ हजुर सम्पूर्ण प्राणीमात्रको उत्पत्तिकर्ता एवम् आदि र अन्तबाट पूर्ण रूपमा रहित हुनुहुन्छ, कहाँ हजुर, तथा हजुरलाई आफ्नो पुत्र भनेर सम्बोधन गर्ने मेरो जिभ्रोको सामर्थ्य कहाँ? अर्थात् यो कहिल्यै सम्भव हुन सक्दैन ॥८७॥ हे

जगदेतज्जगन्नाथ ! सम्भूतमखिलं यतः ।

कया युक्त्या विना मायां सोऽस्मत्तः सम्भविष्यति ॥८८॥

यस्मिन् प्रतिष्ठितं सर्वं जगत् स्थावरजङ्गमम् ।

स कोष्ठोत्सङ्गशयनो मानुषो जायते कथम् ॥८९॥

स त्व प्रसीद परमेश्वर ! पाहि विश्व-

मंशावतारकरणैर्न ममासि पुत्रः ।

आब्रह्मपादपमयं जगदेतदीश!

त्वं नो विमोहयसि किं परमेश्ववरात्मन् ॥९०॥

मायाविमोहितदृशा तनयो ममेति

कंसाद्भयं कृतमपास्तभयातितीव्रम् ।

नीतोऽसि गोकुलमितोऽतिभयाकुलस्य

वृद्धिं गतोऽसि मम नास्ति ममत्वमीश ॥९१॥

कर्माणि रुद्र-मरुदश्वि-शतक्रतूनां

साध्यानि यस्य न भवन्ति निरीक्षितानि ।

त्वं विष्णुरीश ! जगतामुपकारहेतोः

प्राप्तोऽसि नः परिगतो विगतो हि मोहः ॥९२॥

जगन्नाथ! जुन हजुरबाट यो सम्पूर्ण जगत् उत्पन्न भएको छ, त्यही हजुर हाम्रो घरमा पुत्रका रूपमा उत्पन्न हुनुभयो, यो मायाशक्तिको प्रभाव नभएर अरु के हुन सक्दछ र? ॥८८॥ जुन परमात्माको एउटा अत्यन्त सूक्ष्म अंशमा यो सम्पूर्ण स्थावर एवं जङ्गम जगत् अवस्थित रहेको छ, उहाँ परमात्मा गर्भाशयमा र काखमा सुत्ने मनुष्य कसरी हुन सक्नुहुन्छ ? अर्थात् यो सबै असम्भव छ ॥८९॥ हे परमेश्वर! हजुर मसँग प्रसन्न भइदिनुहोस् र आफ्नो अंशावतारबाट सम्पूर्ण संसारको पालनपोषण गर्नुहोस्। हजुर मेरो पुत्र होइन। हे ईश्वर! ब्रह्मादेखि भुसुनासम्म यो सम्पूर्ण संसार हजुरबाटै उत्पन्न भएको हो । त्यसकारण हजुरले हामीलाई किन भ्रमित अर्थात् आफ्नो योगमायाको प्रभावमा पारिरहनुभएको छ? ॥९०॥ हे निर्भय पुरुष! "तपाईं मेरो पुत्र हुनुहुन्छ" यो मायाबाट मोहित भएर अर्थात् मायाको नियन्त्रणमा परेका कारणले म कंसदेखि अत्यन्त भयभीत भएको थिएँ। त्यही भयबाट अत्यन्त चिन्तित भएर मैले हजुरलाई गोकुलमा पुऱ्याएको थिएँ! तपाई त्यहीँ बसेर यो उमेरको हुनुभयो। त्यसकारण हे ईश्वर! अब मेरो तपाईंमा रहेको ममत्वबुद्धि पूर्ण रूपमा नष्ट भइसकेको छ अर्थात अब म तपाईंलाई आफ्नो पुत्र नभएर परब्रह्म परमात्मा मात्र स्वीकार गर्दछु ॥९१॥ रुद्र, वायु र इन्द्रजस्ता देवताहरूले जुन कार्य सम्पन्न गर्न सक्दैनन्, त्यो कार्य हजुरले गरेर देखाइदिनुभयो, यसलाई मैले प्रत्यक्ष रूपमा देख्ने अवसर पाएँ । हे परमात्मा! हजुरले सम्पूर्ण जगत्को कल्याण गर्नका लागि श्रीविष्णुको अंशबाट अवतार लिनुभएको हो। मलाई यस कुराको यथार्थ ज्ञान प्राप्त भइसक्यो, यसैले मेरो अन्तरात्मामा रहेको मोह पूर्ण रूपमा नष्ट भयो ॥९२॥

इति श्रीविष्णुपुराणे पञ्चमांशे विंशोऽध्यायः ।

ॐ

## एकविंशोऽध्यायः

## अध्याय- २१

### "उग्रसेन-राज्याभिषेकः, भगवतो वासुदेवस्य विद्याध्ययनञ्च"

(उग्रसेनको राज्याभिषेक तथा भगवान् वासुदेव विद्याध्ययनका लागि प्रस्थान)

**पराशर उवाच**

**तौ समुत्पन्नविज्ञानौ भगवत्कर्मदर्शनात् ।**

**देवकी-वसुदेवौ तु दृष्ट्वा मायां पुनर्हरिः ।**

**मोहाय यदुचक्रस्य विततान स वैष्णवीम् ॥१॥**

**श्रीभगवानुवाच**

**उवाच चाम्ब ! हे तात! चिरादुत्कण्ठितेन मे ।**

**भवतौ कंसभीतेन दृष्टौ सङ्कर्षणेन च ॥२॥**

**कुर्वतां याति यः कालो मातापित्रोरपूजनम् ।**

**तत्खण्डमायुषो व्यर्थमसाधूनां हि जायते ॥३॥**

**गुरुदेवद्विजातीनां मातापित्रोश्च पूजनम् ।**

**कुर्वतां सफलं जन्म देहिनां तात! जायते ॥४॥**

**तत् क्षन्तव्यमिदं सर्वमतिक्रमकृतं पितः ।**

**कंसप्रतापवीर्याभ्यामार्तयोः परवश्ययोः ॥५॥**

**पराशर उवाच**

**इत्युक्त्वाथ प्रणम्योभौ यदुवृद्धाननुक्रमात् ।**

**यथावदभिपूज्याथ चक्रतुः पौर-माननम् ॥६॥**

**कंसपत्न्यस्ततः कंसं परिवार्य हतं भुवि ।**

**विलेपुर्मातरश्चास्य दुःखशोकपरिप्लुता ॥७॥**

**पराशरजीले भन्नुभयो-** आफ्ना अत्यन्त अद्भुत र अलौकिक कर्महरूलाई देखिसकेपछि आनकदुन्दुभि वसुदेव र देवी देवकीलाई तत्त्वज्ञान प्राप्त भइसकेको जानिसकेपछि परब्रह्म परमात्मा श्रीकृष्णले यदुवंशीहरूलाई पूर्ण रूपमा मोहित गराइदिनका लागि आफ्नो वैष्णवी मायालाई विस्तार गरिदिनुभयो ॥१॥ त्यसपश्चात् परमात्मा श्रीकृष्णले भन्नुभयो- हे पिताश्री! हे माताश्री! म र बलराम हामी दुवै कंसबाट अत्यन्त भयभीत हुँदै लुकिरहनुपरेकाले हजुरहरूको दर्शन गर्नका लागि धेरै दिनदेखि अत्यन्त उत्सुक भएका थियौँ, तर आजमात्र हजुरहरूको दर्शन गर्ने अवसर प्राप्त भयो ॥२॥ साधु वा सज्जन पुरुषहरूको जुन समय आफ्ना मातापिताको सेवा वा पूजा नगरी व्यतीत हुन्छ अर्थात् बित्दछ, त्यस पुरुषको आयुको त्यो भाग व्यर्थ नै हुन्छ अर्थात् त्यो अवधिको आयुको कुनै अर्थ रहँदैन ॥३॥ हे पिताश्री! गुरु, ब्राह्मण, देवता र माता-पिताको पूजा वा सेवा गरिरहनाले मात्र शरीरधारीहरूको जीवन सफल हुन्छ अर्थात् उसको जन्म सफल हुन्छ ॥४॥ त्यसकारण हे पिताश्री! कंसको पराक्रम र प्रसिद्धिका कारणले गर्दा अत्यन्त भयभीत भएका, अर्काका अधीनमा रहेका हामीबाट अर्थात् मबाट जेजस्तो अपराध भएको छ, त्यसलाई क्षमा गरिदिनुहोला ॥५॥ **पराशरजीले भन्नुभयो-** अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्णले आफ्ना जन्मदाता अर्थात् माता-पितालाई प्रणाम गर्नुभयो र त्यसपछि क्रमबद्ध रूपमा सबै यदुवंशी वृद्धहरूलाई यथायोग्य अभिवादन गर्दै नगरवासीहरूको पनि सम्मान गर्नुभयो ॥६॥ त्यस समयमा त्यो अत्यन्त दुराचारी कंसका पत्नीहरू र माताहरू पृथ्वीमा लडिरहेको मृतक कंसको शरीरलाई घेरेर दुःख र शोकबाट परिपूर्ण भएर अलाप-विलाप गर्न थाले ॥७॥ त्यसपछि परमात्मा श्रीकृष्णले पनि